# मधुपर्क

भदौ २०८१

वर्ष ५७ : अङ्क ४ : पूर्णाङ्क ६५९

(VOL 57, NO 4, AUGUST-SEPTEMBER 2024 )



कार्यकारी अध्यक्ष
विष्णुप्रसाद सुवेदी
तथा
महाप्रबन्धक
लालबहादुर ऐरीद्वारा
गोरखापत्र संस्थानका लागि
मुद्रित तथा प्रकाशित

**गोरखापत्र संस्थान, धर्मपथ, काठमाडौं**
फोन नं. ०१-५३४४४३५
पो. ब. नं. २३, काठमाडौं

## सम्पादकीय

# पर्वको पश्चिमी कि आधुनिकीकरण

भदौमा जनैपूर्णिमा/रक्षा बन्धन, गाईजात्रा/सापारु, कृष्णाष्टमी, गौरा पर्व, कुसेऔँसी (बाबुको मुख हेर्ने) तिज, ऋषि पञ्चमी जस्ता चाडपर्व परेका छन्। तिज आउँदै गर्दा 'तिज मौलिक भएन, तिजका गीत पहिलाका जस्ता छैनन्' भनेर सनातनी रेडिमेड टिप्पणी आउने गर्छन्। पहिलाको जस्तो केही पनि रहँदैन। विज्ञानले त ढुङ्गामा पनि परिवर्तन देख्छ। त्यसो नभए चट्टानहरू साह्रो हुने प्रक्रिया (लिथिफिकेसन) के हो त ? विगतको जस्तो सगरमाथा पनि छैन भने दसैँतिहार वा अन्य चाडपर्व विगतका जस्तै हुनु पर्छ भनियो भने सांस्कृतिक परिवर्तन नबुझ्नु हो। परिवर्तनशील, मानिसको आवश्यकतामा निर्माण हुनु, परिमार्जन हुनु भौतिक तथा अभौतिक अर्थात् टान्जेबल र इन्टान्जेबल दुवै संस्कृतिका विश्वव्यापी विशेषता हुन्। यति भनेपछि तिजलगायत अभौतिक (छुन सकिने) संस्कृतिमा परिमार्जन र स्वरूपमा भिन्नता आउँछ भनिरहनु पर्दैन।

हिजो कुन आवश्यकतामा तिज वा अन्य पर्व बनेका थिए भनेर हेर्नु पर्छ। तिजको संस्कृति बन्दै गर्दाको समाजमा मनोरञ्जनका पर्याप्त साधन थिएनन्। पीडा व्यक्त गर्ने स्थान, अवसर र अनुमति थिएन। जहाँ पायो त्यहाँ मनको 'बह कही नकह' भनिन्थ्यो। यस्तो अवस्थाको तिज मनोरञ्जनको एक साधन थियो तर निरीह थियो, तिजका स्वर र शैली सुषुप्त थिए। तिज विद्रोह नभएर बिलौना थियो। समाजका हरेक संस्थाहरू विवाह, परिवार, नातेदारीमा संरचनात्मक तथा प्रकार्यात्मक परिवर्तन आएकाले डोको लिएर मेलापात जाने छोरीबुहारीले भन्दा भिन्न गीत र पहिरन कार्यालय जाने छोरी बुहारीले गाउँछन् र लाउँछन् भने तिजको हाम्रो मौलिकता सकियो भनेर चिन्ता व्यक्त गर्नुहुँदैन। यस्तो परिवर्तन प्रकृति र समाज दुवैतिर भइरहन्छ।

हिजोको जस्तै दर, दर खाने साल, केरा वा भोर्लाका पात छैनन्। हात रङ्गाउने तिउरे, रक्तवेली प्रयोग गर्छौं कि अन्य आधुनिक प्रसाधन ? अनि २६४ दिन आधुनिक शैलीको जीवनयापन गर्ने एक दिन तिज, दसैं वा तिहार मौलिक हुनुपर्ने मान्यता राख्न मिल्दैन। परिवर्तनले हरेक ठाउँमा पर्ने प्रभावलाई कार्य-कारण वा कोरिलेसनको अवधारणबाट बुझ्नु पर्छ। मौलिकतालाई प्यार गर्न सकिन्छ, यसैको प्यास पालिरहनु सम्भव छैन। अर्कोतिर हिजोको तिज कुनै एक समुदायमा सीमित थियो आज तिजको अर्थशास्त्र र मानवशास्त्र हेर्ने हो भने तिजका क्यासेट निकाल्ने र नाचगान गर्ने समुदाय फराकिलो भएको छ। मदिरा सेवन गर्ने समुदायका महिलाले मदिरा खाएर तिज नाचे भने मौलिकता हरायो भन्नु हुँदैन, बरु संस्कृति पनि समावेशी हुन्छ भनेर यस्तो प्रक्रियालाई सांस्कृतिक समावेशिता हो भनी फराकिलो छाती बनाएर बुझ्नु पर्छ। जुनसुकै स्वर र स्वरूपमा भए पनि तिज मनाइनु पर्छ। फरक यति हो, कसैले मनोरञ्जन त कसैले धार्मिक कोणबाट तिज मनाउन पाउनु पर्छ। मनाइँदा यसका सन्देशलाई कसरी सम्प्रेषण तथा ग्रहण गर्ने भन्ने मूल ध्येय बिर्सन हुँदैन। तिज मात्र होइन हरेक पर्वमा पश्चिमीकरणको आवश्यकता देख्नु पर्दैन तर आधुनिकीकरण रोक्नु हुँदैन। ■

**E-mail :** madhuparkmonthly@gmail .com,
website : www .gorkhapatraonline .com

मूल्य रु. २५ ।-
वार्षिक २५० ।-



## फोनमा हुन्छ भन्ने तर पत्रिका नपाइने

माध्यमिक तह पढ्दादेखि नै कुनै नयाँ र चाख लाग्दो किताब भेटेपछि पढिसक्नै पर्ने बानी लाग्यो । गरिब मान्छेले नयाँ किताब किन्ने त कुरै थिएन । पढाइको भोक मेटाउन कतिका पुस्तक झुक्याएर गायव पारेर पनि पढाइको भोक मेटाइयो । काठमाडौँ छिरेर पनि केही वर्षपछि अर्थात् २०५८ सालतिरबाट हाम्रो स्कुल नवसुन्ताखान एकेडेमी गोरखापत्र, राइजिङ नेपाल, मधुपर्क, युवामञ्च, बालपत्रिका मुनासमेतको ग्राहक बनेपछिका दिनमा मधुपर्क त मेरा लागि मासिक खुराक र प्रतीक्षाको विषय बनेको थियो । अनि गोरखापत्रसँगै नियमित पढ्न पाइन्थ्यो तर अहिले आएर गोरखापत्र र राइजिङ नेपाल चाहिँ नियमित पढ्न पाइन्छ । मधुपर्कलगायतका युवामञ्च, मुना भने अनलाइन मात्र पढ्न बाध्य भइएको छ । फोन गरेर गुनासो गर्दा पनि मेरो फोन नम्बर सोधिन्छ अनि पठाउँला है त भनेर टारिन्छ । पत्रिका हातमा लिएर पढे जस्तो आनन्द अनलाइन पढाइमा हुँदैन । जहाँसुकै बसेर अनलाइन पढ्नसकिँदैन पनि । मैले नचाहिँदो काम केही गरे जस्तो लाग्दैन । तथापि मेरो नाम सुन्नासाथ हुन्छ, म पठाउँला भनेर किन टारिएको हो ? मलाई थाहा भएन । मधुपर्क पढ्ने मात्र होइन, कहिले त मेरो रचना पनि छापिन्छ । यता 'मधुपर्क बजारमा' भनेर राइजिङ नेपालमा भनिन्छ अनि मेरो मन व्याकुल हुन थाल्छ । म नवसुन्ताखान एकेडेमी संस्थागतको एक जिम्मेवार शिक्षक र पत्रपत्रिकाको बारेमा चासो राख्ने व्यक्ति भएकाले त्यो सबै जिम्मेवारी मैले बहन गर्नुपर्ने हुन्छ । यता भने म सधैँ हुन्छको आश्वासनमा छक्किइरहन्छु । मैले ल्यापटपमा टाइप गरेर मेल गरेर पठाउन त सक्छु तर फोटो तानेर मिलाउन नजानेका कारण पहिले पुरानो फोटो हुन्थ्यो अहिले बल्ल नयाँ फोटो राख्न सकेको छु ।

**केशव अधिकारी**
**शिक्षक, नवसुन्ताखान एकेडेमी, गोकर्णेश्वर–३**

# पत्रपत्रांश

## साउनको मधुपर्क पढ्दा पढ्दै

मधुपर्क मासिकको २०८१ साउन (पूर्णाङ्क ६५८) अङ्क मेरो हात परेको छ । बिपीसम्बन्धी लेख, त्रिभुवनचन्द्र वाग्लेको साहित्यिक प्रकाशन सम्बन्धको व्याख्यात्मक वर्णन लेखले मलाई आकर्षण गऱ्यो । यसको आवरण पनि आकर्षक लागेको छ । म इटहरी बसेर साहित्य साधना गर्दै साहित्यिक पत्रकारितामा रमाउँदै गरेको व्यक्ति अनि मधुपर्क जस्तो प्रतिष्ठित तथा चिरपरिचित साहित्यिक पत्रिकामा धनकुटाका कला साधक डिल्लीकृष्ण आलेको कलाले अग्रस्थान पाउनु आफैँमा प्रादेशिक, आञ्चलिक गौरवको विषय भएकाले पनि मलाई खुसी लागेको हो ।

यस अङ्कमा २३ कविता, ११ कथा लघुकथा, ६ नियात्रा र निबन्धका साथै संस्कृति, छिमेकमा नेपाली भाषा, मधुपर्कको ५७ औँ वार्षिकोत्सवको स्थलगत टिपोट, रिपोर्ट, पात्र र कृति परिचयहरू प्रकाशन छन् । यस अङ्कमा प्रकाशित सबै सामग्री पठनीय, सङ्ग्रहणीय हुनुका साथै कुनै सामग्री त बोधगम्य विषयले भरिएका पनि मलाई लाग्यो । साहित्यको अजस्र स्रोत मधुपर्कमा यस्तै सामग्रीले प्राथमिकता पाउनु पर्छ । यसले नेपालका धेरै स्रष्टा उत्पादन गरेको छ । साहित्यकारलाई छहारी प्रदान गर्ने आड भरोसाको चौतारी पनि हो यो । तसर्थ यथासम्भव मधुपर्कले नेपालका सबै साहित्य साधकहरूको अपनत्वभाव बोकेको हुनु पर्छ । यो आजसम्मको स्थापित मान्यता हो । यथार्थमा यसै पनि हो ।

२०८१ साउन अङ्कमा प्रकाशित सामग्री सरसर्ती सिंहावलोकन गर्दा साहित्यिक पत्रिकामा हुनुपर्ने सामग्री छन् तर कहीं कहीं मुद्राराक्षस पल्किएको पाइयो । जस्तै पृष्ठ ३ को रोचक प्रसङ्ग शीर्षकको पहिलो लाइनमा 'सङ्ग्रहनीय' छापिएको छ । त्यस्तै डा. ज्ञानु पाण्डेको लेखमा 'अडिक'

शब्द प्रयोग भएको छ। कहीँ प्रुफरिडिङ गर्नेका आँखाले भेउ नपाएर अक्षर छुटेका छन्। कहीँ जोडिनु पर्ने विभक्ति छुट्टिएका छन् र कहीँ छुट्टिनु पर्ने जोडिएका छन्।

यो निरन्तर भइआइरहेका र भइआउने र सच्याउने प्रयास गर्दागर्दैका त्रुटि हुन्। अक्षर साधकहरूले देख्ने यी मानवीय त्रुटि हुन्।

यो अङ्कमा त्रिभुवनचन्द्र वाग्लेले नेपालमा साहित्यिक पत्रिका प्रकाशनवारे केही कुरा राख्ने प्रयास गरेको विषय सबै पढेँ। २०३३ सालमा धरानबाट चन्द्रमणि अधिकारी र म मिलेर 'फेवा' त्रैमासिक पत्रिका प्रकाशन गर्थ्यौं। त्यो बखत हामी वनारस गएर पत्रिका छापेर वितरण गरेर हामीले आफ्नो सोख पूरा गरेका थियौँ। यसका प्रत्यक्षदर्शी प्राडा माधवप्रसाद पोखरेल हुँदै हुनुहुन्छ।

त्यो पत्रिकाको प्रथम अङकमा 'भूपिका कविताको चर्चा' शीर्षकको लेख छाप्न दिएर उहाँले हामीलाई गुन लगाउनुभएको थियो। पत्रकारिताको सिलसिलामा म वार्ता साप्ताहिक पत्रिकाको सहसम्पादकका रूपमा महाकालीको कञ्चनपुरमा पुगेको थिएँ। त्यहाँ २०३६ सालतिर मेरो सम्पादनमा 'ह्याँक' सामयिक सङ्कलन साहित्यिक पत्रिका प्रकाशन भएको थियो। पत्रकारिताका दौरानमा थुप्रै पत्रपत्रिका प्रकाशन गर्ने, वितरण गरी हिँड्ने अभिभारा पनि उठाइयो। त्यत्ति मात्र होइन २०५६ सालमा इटहरी नगरपालिकाले प्रकाशन गरेको 'इटहरी' को सम्पादन गर्ने अवसर जुरेको थियो। अहिले पनि इटहरीमा 'अन्तर्बोध समाज, इटहरी २०७७' बाट हामी 'शब्दसार' नामक द्वैमासिक पत्रिका प्रकाशन गर्छौं। यो पत्रिकाले नेपालमा सात वटा महाकाव्य लेख्ने पीताम्बर भोला लम्साल स्मृति अङ्क प्रकाशन गरिसक्यो। अब नेपालको पूर्वी क्षेत्रमा रहेका धार्मिकस्थलहरूको पहिचान र ती स्थलको कार्यान्वयनमा जीवन समर्पण गरेर दिवङ्गत हुनुभएका पथिक कवि लक्ष्मी आचार्य स्मृति अङ्क प्रकाशन गर्दै छौं।

यो आफ्नै बढाइ चढाइ किन गरेको भने नेपालको साहित्यिक पत्रकारिताको इतिहास कोट्याउन खोज्ने वाग्लेजीका केही शब्दहरूले म प्रभावित भएँ। तसर्थ केही जानकारी गराउने मनसायले म स्वार्थको घोडा चढेर बहकिएँ। हो, हो, म जानी जानी बहकिएको हुँ। "साहित्यिक पत्रिका नबाँचे सिर्जना कहाँ उम्रन्छन् ? सर्जक कहाँ फैलन्छ (न्) ?" भन्ने त्रिभुवनचन्द्र वाग्लेको यो

उद्गारयुक्त प्रसङ्गसँग नितान्त सहमत हुन सकिन्छ। सत्य मान्नु पर्छ तर यही अङ्कमा रचना प्रकाशन भएका स्रष्टाहरूका यो मधुपर्कमा कति पटक सिर्जना प्रकाशन भए। मधुपर्कका सम्पादक मण्डलका वरिपरि नघुम्नेका काठमाडौँ बाहिरका सर्जकका बारेमा मधुपर्कले कहिले के सोच्यो ? के योजना ल्यायो ? त्यो पनि खुलासा भए अरू राम्रो हुनेथियो। यस्ता सोच राख्ने साहित्यिक स्रष्टाहरूले आफैसँग नबाभिने यथार्थपरक कुरा र व्यवहारमा पनि प्रयोगमा ल्याए नेपाली साहित्यिक पत्रकारिता मौलाएर जाने कुरामा कसैको दुई मत नरहला।

*यस अङ्कमा छापिएका ४६ मध्ये काठमाडौँ बाहिरका २४, भित्रका १९ र नखुलेका ६ सामग्री छापिएका छन्। –सम्पादक*

**कृष्णविनोद लम्साल**
**इटहरी–५, बालग्राम चोक (सुनसरी)**

## हाम्रो नाम छुट्यो

मधुपर्क मासिक पूर्णाङ्क ६५८ साउन २०८१ पढ्न पाएँ। यो अङ्क पनि मलाई निक्कै राम्रो लाग्यो। यसरी नै जति ढिलो अर्थात् जति पछिका अङ्क हुन्छन् झनै राम्रा हुनु स्वाभाविकै हो। किनभने हामी दैनन्दिन प्रगति पथमा छौँ नि त। रहनै पनि पर्छ।

साउन अङ्कमा असार अङ्कको समीक्षा पनि रहेछ। अरुणबहादुर खत्री नदीको समीक्षा न हो सुन्दर छ। यसो हुँदाहुँदै पनि गत अङ्कमा अगाडि नै अर्थात् पाँचौँ पृष्ठमा भएका पवित्रा दाहाल र मुक्तिनाथ शर्माका कविताको उल्लेख भएको देखिएन समीक्षामा। त्यति धेरै स्रष्टाको उल्लेख भएकोमा हामी दुई स्रष्टाका सम्झना गर्न किन छुटाइएछ बुझ्न सकिएन। हुन त यो विषय त्यति चर्चा गर्न उपयुक्त होइन तापनि छुटाउनु पनि मनासिब नमानिन सक्छ। यसले समीक्षक तथा सम्पादकको पनि दोष भन्न सक्लान् पारखीले। यस विषयमा एउटा सानु कथा पनि छ।

एक जमानामा कुनै एउटा राज्य साहित्यमा विशेष रुचि राख्ने गर्दथ्यो। साहित्यकारको मान सम्मान गर्दथ्यो र साहित्यको उत्तरोत्तर प्रगति पथमा लाने गर्दथ्यो। को कस्तो भनेर पहिचान पनि गर्दथ्यो। एक पटक यस्तो घटना भएछ र राजासम्म नै पुगेछ। राजाको अपमान भयो भनेर मन्त्रीले कविलाई सजाय दिने प्रस्ताव राखेछ। राजाले पनि त्यो साहित्यकारलाई सजाय तोक्न खोजे छन् तर कस्तो सजाय भन्ने कुरा चल्दा जेलमा कोच्ने कुरा आएछ। त्यसो गर्दा झन् त्यो कविको इज्जत बढ्ने कुरा आएछ। आर्थिक दण्डको पनि कुरा आयो त्यो झन् नहुने देखियो। मृत्युदण्ड दिदा कवि झन् अमर हुने कुरा आयो।

अन्ततोगत्वा जुन कवि वा साहित्यकारको तेजोबध गर्न परेको हो ऊभन्दा तल्लोस्तरको साहित्यकारको सम्मान गर्दा चर्चित साहित्यकार ठेउलिने छ भन्ने निधो गरिएछ।

यस्तो हुन्छ साहित्यकारको मान अपमानको कुरो। यहाँ भन्न खोजेको खास कुरो के भने राम्रो ठहराई सुरुमा राखिएका कविका कविताको समीक्षामा पनि केही उल्लेख जरुर हुनुपर्थ्यो, नामै नहुनु मनासिब भएन कि।

**मुक्तिनाथ शर्मा**

*अरुण नदी खत्रीको समीक्षा नभएर पत्रांशमा पाठक प्रतिक्रिया प्रकाशित छ। प्रतिक्रिया लेखन पाठकमा निर्भर रहन्छ। –सम्पादक*

# यस अङ्कमा




## सन्दर्भ



## व्यङ्ग्य



## कथा/लघुकथा



## कला



## कविता/मुक्तक/गजल/गीत



## निबन्ध/नियात्रा/संस्मरण/परम्परा



## संस्कृति



## तर



## 

सन्दर्भ

# प्रतिज्ञाको पर्व तिज



◆ धर्मराज अर्याल 'श्रमिक'

सत्य युगमा पार्वतीले महादेव पति पाउन गरेको व्रत उपासनादेखि तिजको परम्परा चलिआएको कुरा भविष्य पुराणमा वर्णन गरिएको छ । पूर्वजन्मका कारण पार्वतीले बालक कालमै महादेवलाई पति वरण गरिसकेकी थिइन् । त्यसैले उनले १६ वर्षसम्म धुवाँ मात्र खाएर ६४ वर्षसम्म सुकेका पातहरू मात्र सेवन गरेर घोर तपस्या गरिन् । उनको त्यो तपस्या देखेर उनका पिता हिमालय चिन्तामा डुब्न थाले । यी कन्या यस्ती तपस्वी छन् यिनको विवाह कोसँग गरिदिने होला । कस्तो वर मिल्ला भन्ने सोचमा मग्न भएकै बेला वीणा बजाउँदै नारदमुनि आइपुग्नुभयो । कुराको प्रसङ्ग चल्यो र नारदले भन्नुभयो, पार्वती कन्याको भगवान् विष्णुसँग विवाह गरिदिनुपर्‍यो । म कन्यार्थी भएर माग्न आएको भन्दा खुसी भएर हिमालयले तत्काल हुन्छ भनिदिनुभयो । त्यतिबेला मातापिताको वचन छोराछोरीले उल्लङ्घन गर्न सक्दैनथे । त्यसैले पार्वतीलाई ठुलो चिन्ता पर्न गयो र मुर्छा परिन् । यो कुरा उनका साथीहरू हरिता, अलिभीले थाहा पाएर पार्वतीलाई त्यहाँबाट भगाई एउटा अनकण्टारको जङ्गलको गुफामा लगी लुकाई राखे । उता विष्णु भगवान् विवाह गर्न भनी हिमालयको घरमा बरियात लिएर आउनुभयो । हिमालयले पार्वतीलाई कन्यादान गर्न यत्रतत्र खोजी गर्दा कहीँ फेला पार्न सक्नुभएन र लज्जित भएर यस लग्नमा विवाह हुन सकेन भनी जन्तीसहित भगवान् विष्णुलाई फर्काइदिनुभयो । उता पार्वती गुफाबाट निस्किएर जङ्गलको छेउमा रहेको नदी किनारमा बसेर शिवजीको आराधना गर्न लागिन् ।



महादेवले "भाद्र शुक्ल तृतीयाका दिन निराहार रही शिव पार्वतीको पूजा गरेर रातभरि जाग्राम बसेमा पाप नास हुन्छ, सौभाग्य बढ्छ, सन्तानको समेत कल्याण हुन्छ" भनी बताउनुभयो । बिस्तारै यो प्रचलन अहिलेसम्म आइपुग्दा हरितालिका तिज भनेर मनाउन थालिएको छ ।

पार्वतीको आराधनाका कारण तपमा बसी रहनुभएको शिवजीको तपस्या भङ्ग भयो । के कारणले तप भङ्ग भयो भनी महादेवले ध्यान दृष्टिले हेर्दा पार्वतीले आराधना गरिरहेको कुरा थाहा पाए र त्यही ठाउँमा पुग्नुभयो । अनि पार्वतीलाई सोध्नु भयो 'किन तपस्या गरिरहेकी छयौ ? तिम्रो चाहना के छ ?' भनी सोध्दा पार्वतीले हामी दुई जनाको विवाह होस् भन्नुभयो । महादेवले 'एवमस्तु' (भने जस्तै होस्) भनी फर्कनुभयो । उता हिमालयले आफ्नी छोरी खोज्दै जाँदा घना जङ्गलको नजिक खोलाको किनारमा फेला पार्नुभयो र किन यसो गरेको भन्दा म महादेवलाई पति वरण गर्न चाहन्छु भनिन् ।

हजुरले विष्णुसँग विवाह गरिदिने अठोट गर्नु भएको हुँदा भागेर यहाँ आई शिवजीको तपस्या गरेकीले शिवजीले दर्शन पनि दिनु भयो भनिन् । तब हिमालयले छोरीको इच्छा अनुसार महादेवसँग विवाह गरिदिनुभयो । पार्वतीले निराहार व्रत बसी महादेवबाट वरदान पाएर मनोकामना पूरा भएको दिन भाद्र शुक्ल तृतीय तिथि परेको हुँदा त्यसै बेलादेखि अहिलेसम्म यो दिनमा नारीहरूले निराहार व्रत बसी तिज मनाउने परम्परा चल्दै आएको छ । भाद्र शुक्ल तृतीयको अघिल्लो दिन साँझमा पार्वतीले दुई कोसा केरा खाई व्रत गरेको हुँदा व्रतको अघिल्लो दिन दरखाने चलन चल्दै आएको छ ।

पार्वतीलाई हरिता नामकी सखीले जङ्गलमा लुकाउन लगेकी र उनकै कारणबाट पार्वतीको मनोकामना पूरा भएको हुँदा यस व्रतको दिनको नाम पनि हरितालिका व्रत रहन गएको भन्ने भनाइ पाइन्छ ।

तिजका सम्बन्धमा अर्को पनि भनाइ भेटिन्छ । तिजको व्रतका प्रभावले महादेव पार्वतीको विवाह भएपछि कैलाशबाट मर्त्यलोकमा यात्रा गर्दा पार्वतीले



महादेवसँग सोधिन् मर्त्यलोकमा नानाभाँती दुःख पाएका नारीहरूलाई कसरी तिनको उद्धार गर्न सकिन्छ भनी उपाय सोध्दा महादेवले भन्नुभयो, "भाद्र शुक्ल तृतीयाका दिन निराहार रही  शिव पार्वतीको पूजा गरेर रातभरि जाग्राम बसेमा पाप नास हुन्छ, सौभाग्य बढ्छ, सन्तानको समेत कल्याण हुन्छ ।" बिस्तारै यो प्रचलन अहिलेसम्म आइपुग्दा हरितालिका तिज भनेर मनाउन थालिएको छ ।

## धार्मिक महत्त्व

तिजको व्रत मूलतः सनातन वैदिक धर्मावलम्बी हिन्दु नारीहरूका लागि महत्त्वपूर्ण मानिन्छ तर तिजको व्रत सबै जातिका महिलाले इच्छा अनुसार लिने प्रचलन पनि बढिरहेको छ । हरितालिका व्रतको दिन बिहान गङ्गा, नदी, तलाउमा  बालुवाको गौरी शङ्करसहितको शिव लिङ्ग स्थापना गरेर आफ्नो कुल परम्परा अनुसार रात्रिमा पूजा गर्नु पर्छ ।

यो पूजा गर्नाले नारी कहिल्यै विधवा हुँदैनन् भन्ने शास्त्रीय भनाइ छ । पूजाका लागि कर्मपात्रबाट तीन टुक्रा कुश लिई पूजाका लागि बसिने जमिन, पूजा सामान, आफ्नो शरीर शुद्ध गराई प्रयाश्चित्त गोदान गरी उमा महेश्वरको प्रसाद सिद्धिद्वारा सफल जन्मको सञ्चित हुन गएको पाप नास होस्, दीर्घायु होस्, सौभाग्य होस्, धनधान्यादी सुख भोग प्राप्ति होस् भनी शिव सायुज्य प्राप्तिका लागि विधिपूर्वक पूजा गर्नु पर्दछ । पूजा गर्दा गनेका अक्षता भए अर्पण गर्ने, निराजन बाल्ने अनि फूल अक्षता चन्दन चढाउँदै नाम पूजा गर्ने ।

ॐ उमायै नमः, ॐ गौर्यो नमः, ॐ पार्वत्यै नमः, ॐ जगर्द्धोत्रै नमः, ॐ जगत प्रतिष्ठायै नमः, ॐ शान्ति रुपिण्यै नमः, ॐ पराय नमः, ॐ महेश्वराय नमः,ॐ शुलपाणग्ये नमः, ॐ पिनावु  हस्ताय नमः, ॐ शिवाय नमः, ॐ पशुपतय नमः, ॐ महादेवाय नमः, नाम पूजापछि पुष्पाञ्जली चढाउने, नमस्कार गर्ने, प्रार्थना गर्ने/प्रार्थना गर्ने मन्त्र

*पुत्रान् देहि धनं देहि सौभाग्य देहि सब्रुते ।*
*अन्यांश्च सर्व कामाश्च देहि देव नमोस्तुते ॥*
*प्रार्थनां समर्पयामि उमा महेश्वराभ्यां नमः*

भोलिपल्ट साधारण पूर्णपात्र गरेर गोदान एवं दान प्रतिष्ठा पूजा गरी ब्राह्मणलाई दक्षिणा सङ्कल्प गर्ने अगस्त्य ऋषिको पूजा गरी अर्घ्य दिएर पूजा पूर्ण गर्नुपर्छ ।

भाद्र शुक्ल ऋषि पञ्चमी ऋषि पञ्चमी तिजको तेस्रो दिन अरुन्धतीसहित सप्त ऋषिहरूको पूजा गर्नु पर्दछ । यो दिन गङ्गा नदी, तलाउमा स्नान गरेर प्रायश्चितको निमित्त पूर्वपट्टि फर्केर आचमन गरी हातमा दतिवन (अपामार्ग) लाई लिएर यो मन्त्रले प्रार्थना गर्नु पर्छ ।

*"आयुर्बलं यशोवर्चः प्रजापशु बसूनिच ।*
*ब्रह्मज्ञानं च मेधां च तन्नो देहि वनस्पते ॥"*

त्यसपछि दतिवन, गाईको गोबर, माटो, पिना, अमला आदि लगाएर स्नान गरी देह शुद्ध पार्नु पर्छ । सप्त ऋषिको पूजा गर्दा पूर्व दिशामा कश्यप ऋषि, आग्नेय कोणमा अत्रि ऋषि दक्षिण दिशामा भारद्वाज ऋषि नैरित्य कोणमा विश्वामित्र ऋषि, पश्चिम दिशामा गौतम ऋषि, वायब्य कोणमा जम दग्नि ऋषि, उत्तर दिशामा वशिष्ट ऋषि र माझमा अरुन्धतीको पूजा गर्दै आठ पटक यज्ञ मण्डपको प्रदक्षिण गर्नु पर्दछ । यसैलाई पञ्चमीको पाइला पनि भन्ने गरिन्छ ।

भाद्र महिना शुक्ल पक्ष तृतीय तिथिमा गरिएको व्रत अनुष्ठानले मनुष्यको सबै पाप भस्मीभूत भएर जान्छ । महिला अखण्ड सौभाग्यवती भई सुखपूर्वक जीवन व्यतीत गर्न पाउँछिन् भनिएको छ । यस दिनमा व्रतालु नारीले नरोपीकन उम्रेका (सामा जस्ता) खाना एक छाक मात्र खानु भन्ने भनाइ पाइन्छ । ■

**तारकेश्वर–३, किसन्डोल, काठमाडौं**

# मात लागेका मन्त्रीको मस्ती



◆ रामकुमार पाँडे



बुढा तिमीलाई चाकडी गर्न आएका ती भेडाको हुल देखेर दङ्ग पर्छौ । यी मन्त्री नभा'को भोलिपल्ट मरेको मुसालाई उपियाँले छोडे जस्तो बेपत्ता हुन्छन् । तिनले ल्याएको कोसेली अप्रत्यक्ष घुस हो । हिजो आफूलाई खट्ट हुँदा कसैले झट्ट पैँचोसम्म दिने कृपा नगर्नेले अहिले चट्ट पोको बोकेर अरूले देख्लान् भनेर सट्ट भित्र पसेका छन् । यिनलाई लाजै छैन ।



मैले भन्या हैन बुढी ! देखिस् त मन्त्री भएपछि सबै लडी लडी आउँछन् । कति ढोका धाउँछन् । चोकमा हेर त कति मान्छे थुप्रेका ! हेर ! कतिले के के बोकेर आ'का छन् । कतिले के के ल्या'का छन् ।

बुढा तिमीलाई चाकडी गर्न आएका ती भेडाको हुल देखेर दङ्ग पर्छौ । यी मन्त्री न'भाको भोलिपल्ट मरेको मुसालाई उपियाँले छोडे जस्तो बेपत्ता हुन्छन् । तिनले ल्याएको कोसेली अप्रत्यक्ष घुस हो । हिजो आफूलाई खट्ट हुँदा कसैले झट्ट पैँचोसम्म दिने कृपा नगर्नेले अहिले चट्ट पोको बोकेर अरूले देख्लान् भनेर सट्ट भित्र पसेका छन् । यिनलाई लाजै छैन ।

मैले यस्तो कुरा लिनु हुँदैन । अर्का दलका पत्रकारले भेटे उछितो काट्छन् । म हप्काए जस्तो गर्छु तैँले कुरा मिला । जे दिन्छन् जुरुक्क उठेर खुरुक्क ल्याएर राख । अब त मलाई भात पनि पकाउन पर्दैन । तँलाई ढिँडो मस्काउने दुःख हुँदैन । मेरो त बैठक बसे पनि खाजा र खाना ! रात बसे पनि !

हुन त हो बुढा रात बस्दा फेरि ! के फेरि ? म कहाँ फेर्छु र ? हेर मेरो निजी सचिव चाहिँ एउटी उत्ताउली मै भनेर फेरेको अर्की लाटी परी । आँखा मात्र पिर्लिक पिर्लिक पार्छे ।

तिम्रो बानी मलाई थाह छ बुढा ! फेरि बेसरी धोकेर त्यसैलाई ढोगेर बोकेर हिँड्लाउ नि ? अचेलका मान्छे मान्छेनी के भाका ? पुछर लाग्ने दुछर पाइताला नै चाटुला जसो गर्छन् । नाच्न परे कछाडै उचाल्छन्, खुस्केको भोलिपल्ट पुछर निमोठ्छन् । खल्तीभरि पैसो देखेपछि नबोलाए पनि पछि लाग्छन् भुस्याहा कार्यकर्ता जस्ता !

हैट ! त्यस्ता कुरा नगर्नू ? तिनका बोली वचन नै मिठो । बरु तँ पनि त्यस्तै सिक् न । तँ पनि त मन्त्राणी भैसकिस् नि !

चाहिया छैन दुई दिने मन्त्राणी । खुस्केको भोलिपल्ट भुसिया कुकुर जति पनि मान्दैनन् । फुर्ती गरेर हुन्छ र ? चुनावमा जित्न धनुषटङ्कार गर्छौ, जितेपछि जनतालाई सास्टाङ्गदण्डवत् गरोस् भन्ने ठान्छौ । कसले बुझ्या छैन र तिम्रो चाल !

जनताको आँखामा आँसु आफ्नो भागमा मासु !

के गर्नु बुढी ! आफ्नो अड्डामा त किसिम किसिमका मान्छे छन् । हिजोसम्म सडकमा नारा जुलुस गर्दा गर्धन समाउनेले आज गर्धन तन्काएर स्यालुट गर्छ । मेरो कुरा के गर्छेस् हेर लुट मच्चाउने, आतङ्क मच्चाउने, हल्ला मच्चाउने पकेटमारा, मुलुकमारा, ज्यानमारालाई त सुरक्षा दिएर सम्मान साथ लगेको देखिनस् ? मन्त्री भएपछि चिनेकाको त के कुरा, गोरु बेचेको साइनोवाला समेत म त हजुरको फ्यान भनेर पछि लाग्छन् । अझ पत्रकारको के कुरा गर्नु ? पछि लाग्यालागै गर्छन् । हामीले अपानवायु छोडे पनि कतिपय तिनले क्या सुगन्ध फैलियो भनेर रिपोर्टिङ गर्छन् । विद्वान्को योगदान र समाजसेवीको दानकार्यक्रमको समाचार तिन्ले दमपच पार्छन् । जतागए पनि हाम्लाई आफन्तै जस्तो गर्छन् ।

हो, बूढा तिमीलाई के थाहा ! भ्रष्टाचारी त झन् खुट्टैमा ढोगुला जस्तो गरी चिप्लो घसेर काम लिन्छन् । यस्ताको भर गरौँ भने चिप्लाउन बेर हुन्न । कमिसनमा फसाउलान् (?) मुखले ठिक्क पार्छन् अनि मौका पर्दा झार्नसम्म झार्छन् । खोइ म त कुनै बुद्धि सिकाउने बुद्धिजीवी यहाँ आएको देख्दिनँ । तिम्रो बुद्धिले मात्र काम गर्दैन । मन्त्री हुनेबित्तिकै सबै जान्ने सुन्ने ठान्छौ । कुनै ध्यान छैन, कुनै ज्ञान छैन । कोतपर्व



भनेको के हो भन्यो भने त्यो त एउटा चाडपर्व भन्छौ। रोपाइँ गमलामा गर्छौ। गर्नु गर्छौ।

के कुरा गरेकी ? त्यस्ता बुद्धि चाहिने मान्छे हुँ म ? मलाई न आउने कुरा के छ ? नजान्ने भनेको केही छैन। म जाने हो र बुद्धिजीवी नै आएको देखेको छैन ? जसलाई पनि म एक चुड्कीमा बोलाउन सक्छ। फुर्ती गर्नेलाई एक मुड्कीमा ढलाउन सक्छु। जागिर लगाएर पाल्न सक्छु। चारा छरेर कविकलाकारलाई आफ्नो सोखमा देउसीभैलो खेलाउन सक्छु। कलाकार त के पत्रकार नै नचाउन सक्छु। गुरुको १३ भए हाम्रो आठ। गुरुको हातमा दैनिक पाठ हाम्रामा राजपाठ! त्यसै मन्त्री भा'को हो र ? कत्रो तिकडम लगाउनु पर्छ। राजदूत, कुलपति हुनेदेखि सांसदको त रेट हुन्छ भने मन्त्रीखान त्यसै हुन्छ ? मैले के के जुक्ति बुद्धि लगाएँ तँलाई थाहा छँदै छ नि (?) पहिलेकाले दही लिएर, बोका डोर्‍याएर लान्थे अहिलेकाले अटैची!

मैले त्यति नपढेर के भो ? म संस्कृतिदेखि शिक्षामन्त्री भैन कि, अर्थ मन्त्री भैन कि ? मैले नै प्राज्ञ बनाए, मैले नै जि.एम.बनाएँ, मैले नै तक्मा दिलाएँ, मैले नै पुरस्कार दिलाएँ। तक्मा पनि कतिलाई मैले नै सिफारिस गरेर दिएको हो। मन्त्री हुन नपाई मेरो गुरुभन्दा मेरो मर्यादा क्रम कति माथि पुग्यो ? के हिजोको जस्तो हरिलम्फु हुँ ? तिमीलाई के थाहा छ ? म कम दुःख गरेर मन्त्री भा'को हु ?

जनता भन्छन्, गोबरगाँडुलाई प्राज्ञ बनायौ, चपरचण्डुलाई मन्त्री, सण्डमुसण्डलाई ठेक्का दिलायौ, भ्रष्टलाई अमृत पिलायौ। मलाई थाहा छैन, तिम्रा कर्तुत ? सबलाई थाहा छ।

के कुरा गरेकी लाटी ? एकथरिलाई मासुभात खान्देपछि भोट पक्का, एकथरिलाई सुरापान गराएपछि प्रशंसै प्रशंसा, भजनकीर्तन गर्नेलाई सल्लाहकार बनायो, अर्कालाई इनाम दिलाएपछि कसले बदनाम गर्ने ?

मन्त्री हुँदा के हुन्छ, अब पत्तो होला। हेर त चोकदेखि चौरसम्म मान्छे थुप्रेका !

यहाँ चाकडीमा आउने झोले कार्यकर्ता, टोले हर्ताकर्ता मात्र हो र बिग्रेका बुद्धिजीवीदेखि, शुद्धि हराएका गुदी नभा'का, काम छैन, बिहानै चोकमा जात्रा। सिनोमा किरा परे जस्तो !

बल्ल मेरो योग्यता देखियो। पढ्न त मैले पढेको छैन। हेर त कस्ता कस्ता बुद्धिजीवी डाक्टर समेत पछि लागेका छन्।

केका बुद्धिजीवी हुन्थे ? झोले, टोले र भद्रगोले मात्रै देख्छु म त (?) कमिसनखोर, डन र डाँका चोर, ठेकेदारदेखि आसेपासे सत्यानासे पत्रकार ठेकदार सब बेकार ! काम छैन, मुसामाथि उपियाँ स्याउस्याउ ! तिमी खुस्केपछि मरेको मुसालाई उपियाँले छोडे जस्तो हुन्छ अनि देख्नेछौ।

अब देख्नेछेस् मेरो चमत्कार ! अब कसको बाबुको तागत हाम्रो घर खानतलासी गर्ने ?

हो बुढा, मैले पत्याएँ। सरकार ढल्दा थाहा पाउने छौ। उस्तैको हात परे छनविन हुनबेर हुन्न। अनि सबको बेइजत। बेइजत कमाएर पैसो कमाएको पनि इजजत कमाएको हुन्छ र ? तिम्रो योग्यता के छ। लेखेको क क न न गरेर, अङ्ग्रेजी पढ्दा बच्चाले पनि नगर्ने गल्ती गरेर देखाइसक्यौ। अझ फुर्ती गर्छौ। बुद्धि हुनेले आफ्नो मन्त्रालय अन्तर्गत नियुक्ति गरेको, पुरस्कार दिएको छलबाटै तिम्रो ताल देखिसकियो। फुर्ती लगाएर हुन्छ र ?

के छ तिम्रो योग्यता ? योग्यता भनेको जेलमा बसेको हो। जेलमा बस्दा कस्ताको सङ्गत गरेका छौ ? गतिलो मान्छे जेल पर्छ र ? चोर, डाँका, घुसखोर, ज्यानमारा, डनको सङ्गत अनि के हुन्छ ? कुनै विद्ववान् आएका छन् तिमीलाई भेट्न ?

पदबाट खुस्केपछि कुकुरलाई जति पनि नपुछेको देखेका छैनौ ? काम गतिलो गरे पो सबैले हाइहाइ गर्थे। विदेश घुम्यौ के सिक्यौ ? एउटा नमुना काम गरेनौ। मलाई पो भन्छन् तिम्रो लोग्नेले त घुस खाएर सबै बनायौ देशलाई कङ्गाल गरायौ। भ्रष्टाचार गरेर कमायौ। मलाई गहना लगाएको पनि सुहाउँदैन भन्छन् छिमेकी। समाजले त देखिरहेका छन ? जनता सचेत नभएर पो हिसाब गरेका छैनन्। ती बुझ्ने भए हाम्रा छोरालाई कसैले छोरी दिँदैनन्, छोरी पनि कसैले लिँदैनन्। इतिहासमा तिम्रो अनुहारमा कालो पोतिन्छ। त्यस्तो नभन न बुढी ! बरु तलआउनेलाई मान्छे हेरेर चिया नास्ता दे न। यी सब कामका मान्छे हुन्।

यी नकचरा ! आफ्नो काम बनाउन आएका। मन्त्री सकेको भोलिपल्ट मरेको मुसालाई जिउँदो उपियाँले छोडे जस्तो दम्पच हुन्छन्। असल मान्छे त यहाँ आएकै छैनन्। हेर बुढा कामै गर्ने हो भने नीतिनियम बनाउने, राम्रो योजना बनाउने र यसका लागि विद्वान् विशेषज्ञ बोलाउने, छलफल गर्ने, योजना बनाउने अनि पो हुन्छ काम। यश्हाँ आएका खुराफातीहरू आफ्नो स्वार्थ लिएर समय बर्बाद गर्न आ'का छन्। उल्टो गतिमा विकास अघि बढ्ने हैन, पछि हट्छ। ज्ञानी, विद्वान्, विशेषज्ञका घरमा गए पो बुद्धि फुर्छ। यस्ता लठैत वरपर भीड जम्मा गरेर के नापिन्छ ?

के पाइन्छ हेर बुढी ! पैसाको ओइरो लागेर राख्ने ठाउँ नहुँदा पानी ट्याङ्कीमा राखेको थाह छैन ? अब हेर्दै जा। गरिब मन्त्रीको छ ? हाम्रै साथीहरू हेर कसैको जग्गा, कसैको घर, कसैको रेस्टुराँ, कसैको पार्टी प्यालेस, कसैको सुपरमार्केट कसैको अपार्टमेन्ट। वन खौरेर जग्गा बढाएका छन्, भोजभतेरमा मोज मस्ती लडाका छन्। बरु तैँले पनि मथिकालाई के गर्दा खुसी हुन्छन् त्यही गरेर फाइदा उठाउन सोच। केही नगरी मन्त्रिनी भा'छेस् अरूले मलाई बधाई दिन्छन् म तलाई बधाइ भन्छु।

ए बुढा ! तिम्लाई मात लागे जस्तो छ। गस्तीभित्र मस्ती मनाउँदै छौ। तिमीलाई बचाउने हस्ती पाखा लागे, तिम्रा गस्ती सब भागिसके ! ऊ हेर त बाहिर जुलुस आए जस्तो छ। सुन त– भ्रष्टाचारी मुर्दावाद ! ■

लघुकथा

# खासखुस



◆ कमला पन्थी अधिकारी

तिजको दर खानका लागि रूपाले नन्दआमाजू, दिदीबहिनी, भतिजीलगायत छरछिमेकका महिलालाई बोलाएकी थिइन्। शृङ्गार सामग्री बाँड्नका लागि खरिद गर्ने काम भइसकेको थियो। बिहानदेखि नै घरमा चहलपहल सुरु भएको थियो। पाँच छ वर्ष अगाडिसम्म उनीहरूको आर्थिक अवस्था सामान्य थियो। खोइ कसरी हो कुन्नि आजभोलि भने उनीहरूको आर्थिक हैसियत धेरै बढेको देखिन्छ। बङ्गला, कार, महँगा सामान के छैन ? आज उनको घरमा।

कैयौँ महिलाले रहस्य जान्ने कुतूहल पनि देखाउँदै थिए। गाउँबाट रूपाकी कान्छी बहिनी पनि आएकी थिइन्, दिदीको घरको रौनक देखेर बहिनी पनि अचम्म परिन्। आँगनामा नाचगान जमिरहेको थियो। ड्रिङ्स्, चिसो पेय, केक, फलफूल, माछामासु ककसले के खान्छन् सब तयारी थियो। राम्रा लुगा र गहनामा सजिएर महिलाहरू नाचिरहेका थिए। रूपा पनि नयाँ बेहुली झैँ सजिएकी थिइन्। क्याटरिङ बोलाइएको हुनाले परिकार तयारीमा संलग्न हुनुपर्ने थिएन। रूपाले तीन पटक पहिरन बदलिन्, पहिरनसँगै गरहगना पनि बदलिन्। पहिला जस्तो ताली पड्काउँदै आफैँ गीत गाउनुपर्ने नहुँदा एकै पटक बिस पच्चिस जना महिला नाचिरहेका थिए। रूपाका श्रीमान् दिवाकर पनि रमझम हेर्न कार्यालयबाट चाँडै घर आएका थिए। छोराछोरी पनि विद्यालय, कलेजबाट आइपुगे। उनीहरूलाई कतिपय चेलीबेटीसँग चिनजान पनि गराइयो। दिउँसो खाजा खाएपछि साँझको दरका लागि पुलाउ तयार हुँदै थियो। एक्कासि घर अगाडि सरकारी गाडी आएर टक्क रोकियो।

एक जना मानिसले 'दिवाकर सरसँग काम छ' भन्दै खासखुस कुरा गरे। दिवाकरको अनुहार पानी पर्ने बेलाको बादल जस्तो भयो। उनले अनुनय गर्दै थिए। उनी गाडीमा बस्न बाध्य भए। गाडी हुइँकियो। दर खान आएका सबै जना खासखुस गर्दै थिए। ■

**कलङ्की, काठमाडौँ**

# मुलाको सर्वव्यापकता



◆ प्रेमराज सिलवाल

मुला सर्वव्यापी छ। सर्वत्र मुला छाएको देखिन्छ। खान मात्र होइन गाली गर्नसमेत मुला नै प्यारो भएको छ। मुला पार्टीहरू। मुला नेताहरू।' मुलाहरू काम नपाएर सडकमा नारा जुलुस गर्छन्। मुलाहरू भ्रष्टाचार गर्छन्। मुलाहरू देशको विकास गर्दैनन्। मुला भ्रष्ट नेताहरू। मुला सरकारी कर्मचारीहरू। मुला व्यापारीहरू। मुला राष्ट्रघातीहरू। मुला करमाराहरू। मुला तरमाराहरू। मुला खन्चुवाहरू। मुला भँडुवाहरू। मुला ढँटुवाहरू। अर्थात् देशमा सबैतिर मुलैमुलाको बिगबिगी देखिन्छ। मुलाहरू शक्ति र शासनमा रहेका छन्। सामान्य पसिना बगाएर श्रम गर्ने नागरिकदेखि बाहेक सबै मुला हुन्। मानिसहरू आफूलाई भ्वाँक चल्यो भने गाली गरिहाल्छन्– 'मुला नेताहरू!' रत्नपार्कमा घाम तापिरहेकाहरू सराप्छन्– 'मुलाहरूले देश बिगारे'। राजनीतिक र सामाजिक जीवनमा यत्रतत्र जति आलोचना गरे पनि हुने वस्तु वा थेगो वा भाष्य भएको छ– 'मुला'।

गाली गरे पनि मुला आफैँमा प्यारो वस्तुसमेत हो। अर्थात फेरि पनि मान्छे र मुलाको अन्तरसम्बन्ध व्यापक छ। सामाजिक, राजनीतिकदेखि दैनिक जीवनमा जताततै मुलैमुलाको चर्चा हुन्छ। गाली गर्दा सर्वत्र मुलाको चर्चा हुने गरेको छ। तथापि कुनै पनि राम्रा र सकारात्मक विषयको उपमा दिँदा चाहिँ मुला पर्दैन। सम्मान गर्दै तालि लगाउँदा पनि मुलाको नाम लिइँदैन। 'मुला सम्मान' भनिएको कतै सुनिँदैन। तापनि मानव जीवन र मुलाको सम्बन्ध चाहिँ बडो घनिष्ट रही आयो। ठुला भनिएका नेता र उपल्लो खाटमा बस्नेहरूको सोच, विचार र धारणा भने मुलाको जस्तो देखिएको छ। मुला सोच र प्रवृत्तिले उनीहरूकै भाषामा 'साना मुला' लाई हेपिन्छ, चेपिन्छ। सरापिन्छ। ठुलाले बिगारेको कार्यमा 'मुलालाई' दोष दिइन्छ।



मान्छेलाई गाली गर्नुपर्दा 'कस्तो मुला जस्तो मान्छे' भन्ने गरिन्छ अर्थात् बुद्धि नभएको, मूर्ख, विवेक, ज्ञान र सिप नभएको मान्छे भन्ने हो। यहाँ मुलाको कुनै अर्थ छैन भन्न खोजिएको देखिन्छ। धेरैजसो राजनीति र राजनीतिक सन्दर्भमा प्रतीक सम्बोधन गर्नुपर्दा पूरै समूहलाई पनि 'यी मुलाहरू' भन्ने गरिएको पाइन्छ। मुलाहरूलाई तथानाम गाली गरेर धेरै मुलाहरू राजनीतिमा ठुला भएका छन्।



मान्छेलाई गाली गर्नुपर्दा 'कस्तो मुला जस्तो मान्छे' भन्ने गरिन्छ अर्थात् बुद्धि नभएको, मूर्ख, विवेक, ज्ञान र सिप नभएको मान्छे भन्ने हो। यहाँ मुलाको कुनै अर्थ छैन भन्न खोजिएको देखिन्छ। धेरैजसो राजनीति र राजनीतिक सन्दर्भमा प्रतीक सम्बोधन गर्नुपर्दा पूरै समूहलाई पनि 'यी मुलाहरू' भन्ने गरिएको पाइन्छ। मुलाहरूलाई तथानाम गाली गरेर धेरै मुलाहरू राजनीतिमा ठुला भएका छन्।

सानो उमेरको मान्छेलाई कुनै ठुलाले हेपेर बोल्दा पनि 'मुला' भन्ने गरिएको छ। साहुले आफ्ना मजदुरहरूलाई हप्काउँदा पनि मुला भनेको सुनिन्छ। छोरालाई माया गरेर बाबुले बोलाउँदा समेत कतिपय सन्दर्भमा मुला भन्ने गरेको सुनिन्छ। मुला अर्थात् चुत्थो खालको एउटा सामाजिक प्रतीक वा बिम्ब।

सामाजिक जीवनमा मुला जति चुत्थो भए पनि मानवीय, प्राकृतिक र दैनिक जीवनमा चाहिँ मुलाको महत्त्व धेरै देखिन्छ। मानिसले सामाजिक र गृहस्थी जीवन सुरु गरेदेखि नै मुलालाई आफ्नो आधारभूत खानाका रूपमा ल्यायो। आज पनि मुलाको प्रयोग गरि नै रहेको छ। त्यति मात्र होइन मुलाको प्रयोग गाउँदेखि सहरसम्म, नेपालदेखि युरोप–अमेरिकासम्म हुँदै आएको देखिन्छ। 'अदुवा खाई सभा पस, मुला खाई वन पस' भन्ने उखान भए पनि वर्तमान युगमा मुलाको खपत, प्रयोग र उपयोग बहुमुखी देखियो। मुला काँचै खान मिल्ने तरकारी पनि हो। मुलाको फाल्नुपर्ने कुनै चिज नै हुँदैन अर्थात् जरादेखि टुप्पोसम्म र पात सबै खान हुन्छ। मानिस मात्र होइन घरपालुवा वस्तुदेखि मुसासम्मलाई मुला स्वादिलो लाग्दछ। मुलाको प्राकृतिक उपचार पनि रह्यो। पेटको रोग, दाँतको एक्सरसाइज,

पानीको मात्रा बढाउनदेखि शरीर स्वस्थ्य राख्नका लागि मुलाको बहुउपयोग देखिन्छ ।

तराईदेखि हिमालसम्म फल्ने मुला सुकाएर चाना, सिन्की, अचार र गुन्द्रुकसम्म खाने गरिएको छ । मुला बेचेरै ककनी (नुवाकोट) का धेरै स्थानीय धनी भए । मुला बेचेर जिप किने । पहिले लेकबाट मुला बेसी लगेर चाँमलसँग साट्ने संस्कृति पनि थियो गाउँमा । आजभोलि अधिकांश स्थानमा मोटरबाटो र नगद व्यापार बढेकाले सबै नगदानगद हुन पुग्यो । कुनै समय वा जमाना थियो– मुला खाने गरिब भन्ने गरिन्थ्यो । आज त्यो धारणा पूरै उल्टियो । आजको आधुनिक भनिएको सभ्य समाजमा मुला गरिबले भन्दा बढी धनीले खान्छन् । सलाद, अचार र तरकारीका रूपमा । सहरमा गर्मी बढ्दा मुलाको माग बढी हुन्छ । भोज, पाटीको मौसममा मुला नै बढी बिक्री हुन्छ । होटेलमा मुलाको प्रयोग अत्याधिक हुन्छ । यसरी कुनै समय हेपिएको मुला अहिले चाहिँ सहर बजारमा 'सम्मानित' भएको छ । कुनै पनि भोजमा मुला चाहिन्छ । मुलाबिना भोज भतेर र पाटी नचल्ने भइसक्यो । यसरी मुलाको खपत र बिक्री ओधी बढेको देखिन्छ । राजनीतिमा ठुलाले हेप्ने गरेका 'मुलाहरू' अहिले आफैँ अरूलाई 'शक्तिशाली ठुला मुला' को हैसियतमा पुगेका छन् । समाजमा मुला भनिएकाहरू अहिले अरूलाई मुला भन्दछन् ।



मुलाको अर्को पक्ष र प्रयोग पनि देखियो–'सुगर रो गीको खाना' । सुगर (चिनीरोग) भएका सबै जसोलाई डाक्टरले दिने प्रमुख सल्लाहमा एकातर्फ भात, आलु आदि कम खानुस् भन्ने हुन्छ । अर्कोतर्फ सागसब्जी, मुला, गाँजर बढी खानुस् भन्ने हुन्छ । यसरी सुगर रोग र मुलाको साइनो बढी नजिक भएको देखिन्छ । राजनीतिमा लागेका नेता, ठुला व्यवसायीदेखि पैसा कमाएका भुँडे धेरैलाई अहिले मुला नै प्यारो हुन थालेको छ । भोज, पार्टीमा जाँदा पनि नेताको प्रमुख रोजाइ 'दुई टुक्रा मुला' मात्र हुने गरेको देखिन्छ । सार्वजनिक जीवनमा अर्कोलाई गाली गर्न प्रयोग गरिएको मुला नेता र धनीको जीवन धान्ने न्यूनतम खाद्य भएको छ । मुलाको जैविक, सामाजिक र राजनीतिक भाष्यको प्रयोग औधी बढेको छ । मुला राजनीति भन्ने मान्छेहरू बढी मुला खान्छन् । रानीतिलाई फोहोरी खेल र मुलाहरूको काम भन्दै आलोचना गर्ने मुलाहरू सबै अहिले राजनीतिमा आएर मुला नेता भएको देखिन्छ । पहिले अरूलाई मुला भन्नेहरू नै अहिले आफैँ मुला भएका हुन् । नेता, व्यापारी, पत्रकार, वकिल, प्राध्यापक सबै मुला जस्ता भएका छन् । सबै मुला खान्छन् । सबै मुला हुन् । सबैले सधैँ मुला खान्छन् अर्थात् मुला नखाने चाहिँ 'मुला' हुन् । 'मुलाहरू' । समाजका मुलाहरूको बिगबिगी बढेको छ । जतातती मुलैमुला देखिन्छ । मुला राष्ट्रपति, मुला प्रधानमन्त्री, मुला मन्त्री, मुला कर्मचारी । सबै मुला । अब जनता मात्र मुला हुन बाँकी छ । बाँकी सबै मुला भइसके । सबै मान्छे मुला हुन् । मुला खान्छन् । मुला गफ दिन्छन् । मुलाहरू । मुलाहरूले देश डुबाए । मुलाहरू आफू धनी बने । मुलाहरू अरूलाई गाली गर्दछन् र पछि आफैँ मुला बन्दछन् । गाउँदेखि सहरसम्म मुलैमुलाको बोलवाला देखिन्छ । एउटा मुला जान्छ अर्को मुला आउँछ । मुला कुरा गर्छ । साँच्चै मुला सर्वव्यापी छ । ■

# डियर तलब, आई लभ यु



◆ रवीन्द्र अधिकारी

श्री तलब महोदय,

एक तलबजीवी तलबपीडित कर्मचारीको न्यानो अभिभादन स्वीकार गर। इच्छा, आकाङ्क्षा निरन्तर बेलुन जसरी फुल्दै छ। महँगीको चरमचुलीले सगरमाथा छेक्न आँटिसक्यो तर तिम्रो साइज ज्युँका त्युँ छ। अलिकति भए पनि साइज बढाउँछौ कि भनी एक वर्ष कुरियो। जेठ पन्ध्रमा बजेट भाषण पनि आयो। हिस्स बुढी हरिया दाँत भयो। बजेटमा तिम्रो शत्रु (कर) को बरु निकै हालीमुहाली देखिन्छ। तिम्रो आफ्नो आकार भने कम्तीमा एक वर्षका लागि पुनः उही रहने निश्चित भयो। तिम्रो यस पालि नबढ्ने निर्णयले लाखौँको सङ्ख्यामा रहेका म जस्ता मध्यम वर्गीय आशामुखीहरू मर्माहत भएका छौँ।

तिमी नबढ्नाले तिम्रो ठुल्दाइ (पेन्सन) पनि बढेन। तिम्रो बा (वृद्धभत्ता) चुनाव अघिदेखि नै निकै फाँइफुट्टी लाउँथे, यसपालि उनी पनि बढ्न सकेनन्। खैर, तिम्ले त धोका दियौ दियौ तिम्रो सौतेनी आमाको छोरो (महँगी भत्ता) ले पनि हामीलाई यसपालि धोका दिएको छ।

प्रिय तलब, जागिरे जीवन दुःखी जीवन रहेछ। यो दुःखी जीवनमा प्रवेश गरेको पूरै दशक नाघिसकेछ। यसबिचमा पाँच पटक तलब हेरफेर हुँदा २५० प्रतिशत बढेछ। यसै समयमा दस पटक जति पेट्रोलियम पदार्थको मूल्य वृद्धि भयो होला। बजार भाउको कुनै लेखाजोखा छैन। सुरुमा २० रुपियाँमा एक छाक टर्ने सब्जी किन्न पाइन्थ्यो, अहिले त्यही स्तरको सब्जी एक छाकको सयमा मुस्किलले आउँछ। तेह्र सयमा बस्दै गरेको कोठाको भाडा अहिले म ८५ सय तिर्दै छु। तसर्थ यो एक दशकमा कमाइको तुलनामा खर्च निकै नै बढेको आभास गर्दै छु।



पहिलो साता मोज गरेर पैसा टन्नै मासिन्छ। दोस्रो साता बचेखुँचेको सकिन्छ। तेस्रो साता अब तानतुन गर्दै अघिल्लो महिनाको सापटी तिर्नै पर्ने हुन्छ। नतिरे अब आउने साता फेरि सापटी कसरी पाउनु ? चौथो साता लाग्दा त गोजी टक्कुनटाट नै हुन्छ। कसैले कुनै योजना अगाडि सारी हाले भने- पैसो न सैसो टिकी ट्यास् ट्यास् भनेर पन्छिने काम गरिन्छ।



प्रिय तलब, तिम्रै दर्शनका खातिर हामी तलबजीवीहरू मरी मरी २५-३० दिन काम गर्छौं। तलब आउने साता खल्ती रित्तिएर पुरै टाट भइन्छ। यो सरसापटको याम हो। फेरि सबैको हालत उही भएकाले कसैले ठुलो रकम सापट दिँदैनन्। बिहे नभएको ठेट्ना साथी परेभने अलिक फाइदा हुन्छ कारण ऊसँग यतिबेलासम्म पनि राम्रै रकम एकाउन्टमा हुन्छ। यही साता हो तलब आएपछि यसो गर्छु र उसो गर्छु भनेर सपना बुन्ने। आफ्नो इच्छा र योजनाहरू पूरा गर्न ठुलै ग्र्यान्ड डिजाइन बनाइन्छ।

तलब तिमी आउने दिन त मन यति फुरुङ्ग हुन्छ कि कुरै छाडौँ। नयाँ पाइन्ट किन्न पाइन्छ भनेर आफू दङ्ग। आउँदै गरेको बिहेमा लगाउन पाटी सुज किन्न पाइन्छ भनेर श्रीमती दङ्ग। बाउले फिजेट स्पिनर किनिदिन्छ भनेर पाँचवर्षे छोरो दङ्ग। पसलको चिया उधारो तिर्दिन्छ भनेर हजुरबा दङ्ग। डिस टिभी रिचार्ज गर्दिन्छ भनेर बुवा दङ्ग। सबै जना दङ्ग हुने दिन, महिनाको अन्तिम दिन यानि तिमी आउने दिन।

बैङ्कको खाता निमिट्यान्न हुने गरी सब पैसा निकालेर जब ल्याइन्छ तब सुरु हुन्छ एक महिनाको यात्रा जुन तिम्रै भरमा अघि बढ्छ। पहिलो साता बिन्दास चल्छ। रहरका कपडा, रेस्टुराँ, क्यापुचिनो, सिज्लर, कबाब, थियटर, विकेन्ड क्लब डान्स वा फेन्टासी टुर। दोस्रो साता आउने हप्तालाई ग्रोसरी जोहो, पानी बिजुली, टिभी, इन्टरनेट फोन बिल, छोराको मोन्टेस्वरी फी, हजुरबुवाको अक्सिजन सिलिन्डर, बुवाको प्रेसरको औषधी, श्रीमतीको आइलाइनर, छोराको एक्सर्साइज बुक। खाजाको स्तर यो साता मम र चाउमिनमा झरिसक्छ। पहिलो



साता अप्लोड गरेका फोटोहरूमा लाइक कमेन्ट हेरेर रमाउने पनि दोस्रो साता हो ।

पहिलो साता मोज गरेर पैसा टन्नै मासिन्छ । दोस्रो साता बचेखुँचेको सकिन्छ । तेस्रो साता अब तानतुन गर्दै अघिल्लो महिनाको सापटी तिर्नै पर्ने हुन्छ । नतिरे अब आउने साता फेरि सापटी कसरी पाउनु ? चौथो साता लाग्दा त गोजी टक्कुनटाट नै हुन्छ । कसैले कुनै योजना अगाडि सारी हाले भने– पैसो न सैसो टिकी ट्यास् ट्यास् भनेर पन्छिने काम गरिन्छ । सिधा अफिस जाने, सिधा घर आउने । न दायाँ न बायाँ । छोराको बिहे परे भिन्नै कुरा नत्र छोरीको बिहेको निम्तो पनि मानिन्न । ससुराली वा मामाघरतिर केही कार्यक्रम परेमा खामको लोभले नि टाउको टेकेर पुगिन्छ । तलब आउनासाथ तिर्छु भन्दै साथीभाइसँग दारा ङिच्याउँदै २–४ हजार सापट माग्न पुगिन्छ । कतिले दिन्छन्, कतिले यसपालि मैले चाहिँ तँसँग माग्ने आँटेको भन्दिन्छन् । पत्याउने पसलबाट सामान पनि उधारो ल्याइन्छ । यो साता आर्थिक दुरवस्थाले परिवारमा किचलो र अशान्ति मच्चिन्छ अनि कहिल्यै विश्वास नलाग्ने राशिफलका पानाहरू पल्टाउन बाध्य हुनु पर्छ । तिमी आएपछि सब थोक ठिक हुन्छ भन्ने आत्मबलले यो हप्ता बित्छ ।

यसरी तिम्रै सेरोफेरोमा हामी जागिरेको परिवार टिकेको छ । यसपालि तिमी नबढेर धेरै इच्छाहरूको हत्या भएको छ । सौराहा घुम्न नपाइने भो, छोरोलाई राम्रो स्कुलमा हाल्न नपाइने भो । घरमा बार्दली थप्न नपाइने भो । सूचीहरू अनन्त छन् । बजार भाउलाई हेर्दा तिमी साह्रै दुब्लो देखिएका छौ । अर्को बजेटमा तिमी यति मोटाउ कि कर्मचारीको दरिद्रता घुस र कमिसनमा गएर नठोक्कियोस् । तिम्रो साइज देखेर अफिस आइरहुँ, काम गरिरहुँ जस्तो लागोस् । ■

**उही तिम्रो तलबपीडित**
**बनेपा**

# खतरा



◆ भाउपन्थी

ऊ ओरालो लाग्दै थियो र अर्कोतर्फबाट साइकिल डोऱ्याउँदै एक अपरिचित उकालो लाग्दै थियो। ओरोलो लाग्दै गरेको मोहन थियो र उकालो लाग्दै गरेको रामप्रसाद। साइकिल डोऱ्याउँदै मोहनलाई क्रस गर्ने बेलामा सुनिने गरी एउटा गाली उकालो लाग्दै गरेको रामप्रसादको कानमा सुनिन आयो। त्यो उच्चारण गरिएको गाली अत्यन्त भद्दा त थिएन तर गाली त गाली नै हो भन्ने खालको थियो। गाली कसप्रति लक्षित थियो ? त्यो साइकिलवालाले थाहा पाएन तर गाली उसैलाई गरेको हो भने ? केही गरिबिराउनु छैन भने गाली किन खानु ? नसुने झैँ गरेर खुरु खुरु बाटो लाग्न पनि सकिन्थ्यो तर रोकिएर सोध्यो, “ए दाइ तपाईंले मलाई गाली गरेको हो ?” प्रश्न सुनेर मोहन अलमलियो। उसले गाली उच्चारण गरेको थियो तर त्यो उसको आफ्नै दुष्ट साहुका लागि थियो, जसले उसको ज्यालाबाट नोक्सान गरिएको रकम भनेर रु. एक सय त्रिपन्न काटेको थियो। मोहन त्यो हर्जानालाई न्यायपूर्ण मान्दैनथ्यो। मोहनले प्रश्न बुझेर रामप्रसादलाई हेर्दै भन्यो, “होइन साथी, यो त मैले साहुमाथि रिस पोखेको हो।” साइकिलवालाले जबाफ सुनेपछि सन्तुष्ट भएर सोध्यो, “साहुले के गऱ्यो र ?” यसरी मोहन र रामप्रसादका बिच परिचय स्थापित भएको हो। परिचय आदानप्रदानपछि मित्रता स्थापित भयो र उनीहरू कतिपय अवसरमा सँगसँगै हिँड्ने भए। अहिले पनि सँगै हिँडे।

ओरालो लागेको मोहन पुनः उकालै लागेर रामप्रसादसँग हिँड्यो। केही परको परिचित चियापसलमा एक गिलास चिया मगाएर दुवैले आधा आधा बाँडेर खाए। एक गिलास चिया बाँडेर खाँदैमा यसो मात्र भनेनन्‌– “आज हामीले मित लायौँ।” चिया सकेपछि मोहनले भन्यो, “जाऊँ मेरो डेरातिर। म एक्लै छु।” डेरामा जाऊँ त भन्यो तर डेरामा एउटा मैलोफुत्रो ओछ्यानबाहेक केही थिएन। डेङ्गु सङ्क्रमणको बिगबिगी थियो तर उसले झुल हालेको थिएन तर रामप्रसादले आफ्नै डेरामा जान कर गऱ्यो। भन्यो, “घरमा स्वास्नी छे, दुई जिउकी।” केही बेर रोकिएर एउटा औपचारिकताका लागि माहेनले सोध्यो, “कति महिना भयो ?” उसले परिपक्व गृहस्थीले झैँ सोध्यो। उसको बिहे भएको थिएन तापनि प्रश्न प्रासङ्गिक थियो मानौँ ऊ दुई चार वटा छोराछोरीको बाबु भइसकेको छ। दुवै रामप्रसादको साइकिल पालैपालो डोऱ्याउँदै डेरामा पुगे। रामप्रसादकी साली आजै आएकी रहेछ, यो उनीहरूले थाहा पाए। रामप्रसाद साइकिल चलाएर के धन्दा गर्थ्यो भन्ने मोहनले सोधेको थिएन। ग्याँस वा पानीका जार घरडेरातिर पुऱ्याउँदो हो भन्ने अनुमान गऱ्यो। साइकिलमा त्यस्ता सामान बोक्ने उपकरण पनि जडित थिए। साइकिल बिनामर्मत प्रयोगमा आउने गरेको र धेरै वर्ष भएकाले थोत्रो थियो। डेराभित्र पसेपछि मोहनले रामप्रसादकी स्वास्नी राम्री रहिछ भन्ने देख्यो। पहिलो सम्बोधनमा नै उसले ‘भाउजू’ भन्यो। उसकी राम्री बहिनी भाउजूको छेउमा खुम्चिएर बसेकी रहिछ। उसले गडेर हेऱ्यो केटीलाई। हुर्किएकी र फस्टाएकी रहिछ। फक्रिसकेकी पनि। नाम मधु। तरुनी सालीको नाम रामप्रसादले थाहा नपाउने कुरै भएन। ऊमार्फत मोहनले पनि थाहा पायो। मनमा गडिराख्ने नाम रहेछ– मधु !

कुमार केटो मोहनले थाहा पाएपछि नाम काढेर ‘मधु’ भन्दै बोलाउन सकेन। परिचय अल्प अवधिकै थियो, खामोस बस्यो। मात्र यति औपचारिकताका लागि सोध्यो, “वाँ नै हो तपाईंकी साली ?” रामप्रसाद अलि ठट्यौली मानिस रहेछ, भन्यो, “अरू कोही त कोठाँ देख्दिनँ भनेपछि यै त होली मेरी साली। मन पऱ्यो ?” मधुले गाला राता पारी र मुन्टो निहुऱ्याई। त्राण माग्न झैँ मात्र यति उच्चारण गरी– “दिदी..!” सालीमाथि हक लाग्छ भनेर कतै भिनाजुले झ्याप्प छोप्न आउँछन् कि भन्ने मधुको मनमा डर पनि थियो मोहनले भन्यो, “बाटोमा दुःख त भएन।” मधुले टाउको हल्लाएर



मधु र मोहन मिलेर भाउजूलाई प्रसूति केन्द्रमा भर्ना गरेपछि साँझतिर कोठामा फर्की आए। मधुले खाना पकाई। त्यो उनीहरू दुवै जनाले मिलेर खाए र पछि राति एक्लै सुत्न डर लाग्छ भनेकाले बाध्य भएर मोहन मधुसँगै बस्यो। कानोले आँखो भेटे जस्तो भयो। भाउजूका लागि खाना पुऱ्याउने होसै रहेन तर मोहनको मनमा मधुप्रति पाप थिएन। उसले मधुलाई यसअघि नै अवसर परेको बेला भनिसकेको थियो, ”म तिमीलाई सच्चा मनले प्रेम गर्छु।‟



जनाउ दिई– 'भएन ।' अहिले नै उसको सुख र दुःखको सोधखोज गर्ने हक मोहनले पाइसकेको थिएन तर मधुमा मोहनप्रति एक प्रकारको संलग्नता पलाइसकेको थियो। मोहन जिउडाल मिलेको युवक थियो । मात्र साहु ठिक थिएन उसको । यो मधुलाई थाहा थिएन । प्रेम टुसाउने भयो, साहुको आवश्यकता थिएन मधुलाई, मोहन भए पुग्थ्यो ।

तर मोहनलाई साहुको चालचलनले उसै पनि खेदिरहन्थ्यो। मधुलाई एक किसिमले ऊ आफ्नो बनाउन इच्छुक त थियो तर केही गरी घरजम गर्ने आर्थिक आधार पाइएन भने के होला भन्ने चिन्ताले सतायो । साहुको नोकरी गरेर पार लाग्ने छाँट थिएन। स्थायी जागिर पाएदेखि ऊ र मधुको घरजम सरल हुने थियो भन्ने सोचेर चिन्तित भयो। साहु कुरैपिच्छे मोहनलाई हप्काउने गर्थ्यो र निहुँ झिकेर तलब कम दिने खालको छुच्चो थियो। "साहु किन यस्ता छुच्चा हुन्छन् ?" रामप्रसादलाई उसले एक दिन चिया खाँदै गर्दा सोधेको थियो, "दयालु र उदार भएर कसरी पैसा कमाइन्छ त ?" प्रतिप्रश्न जस्तो उत्तर सुनेर मोहन चुप लाग्यो ।

मोहन रामप्रसादको डेरामा आउनेजाने गर्न थाल्यो। भ्याम्मिएपछि मधुले पनि ऊसँग मनका कुरा खोल्न थाली । भाउजूको स्वास्थ्य पनि ठिकै थियो तर एक दिन हठात् उनलाई व्यथा लाग्यो। संजोगले मोहन त्यहाँ पुगेको समय थियो। रामप्रसाद निर्वाचनको जरुरी कामले गाउँतिर गएको थियो। ऊ एउटा पार्टीको कार्यकर्ता पनि थियो। बेलाबखत गाउँ जाने गरिरहन्थ्यो, आफ्नै कामले वा पार्टीले अह्राएको कामले। पार्टी भूमिगत थियो। यस पटकको चुनावमा भाग लिने निर्णय गरिसकेको थिएन। पार्टीमा अलमल थियो, फुट्ने फुटाउने काम पनि भयो। बाहिर देखाउन सिद्धान्त र विचारको विभाजन भएको भनियो। भित्र खोक्रो थियो। रामप्रसादले भन्यो पनि_ "खोक्राहरू जति फुटे पनि हुनेवर्ने केही होइन ।" फुटेकाहरूले निर्वाचनमा भाग लिने भन्थे। ऊ निर्वाचनमा भाग लिने पक्षमा थियो। पार्टीको साङ्गठनिक कामले पनि र व्यक्तिगत कामले ऊ गाउँ गइरहन्थ्यो। पार्टी भूमिगत छँदा उसलाई कसो सुराकी भनेर प्रशासनले समातेन। ऊ सुराकी त थिएन र पार्टीमा पनि खासै गन्तीमा थिएन। गरिबका लागि सङ्घर्ष गर्छौं भनेकाले पार्टीमा ला गटोपलेको थियो ।

रामप्रसादले साली मधुलाई दिदीको हेरचाह गर्न र केही परे मोहनलाई खबर गर्न, सहयोग लिन अराएर गएको थियो। गाउँमा के काम थियो, त्यो उसले भनेन। गाउँमा साहुको रिन पनि तिर्नु थियो। केही नभए ब्याजै भए पनि बुझाउन साहु ताकेता गरिरहन्थ्यो। ऊ गाउँमा साँझपख पस्थ्यो र भालेको डाँकमा सहरतिर हिँड्थ्यो। एक किसिमले उसको जीवन पनि भूमिगत किसिमकै थियो। रामप्रसाद गएपछि त्यसै दिन भाउजूलाई व्यथा लाग्यो। मधु र मोहन मिलेर भाउजूलाई प्रसूति केन्द्रमा भर्ना गरेपछि साँझतिर कोठामा फर्की आए। मधुले खाना पकाई। त्यो उनीहरू दुवै जनाले मिलेर खाए र पछि राति एक्लै सुत्न डर लाग्छ भनेकाले बाध्य भएर मोहन मधुसँगै बस्यो। कानोले आँखो भेटे जस्तो भयो। भाउजूका लागि खाना पुऱ्याउने होसै रहेन तर मोहनको मनमा मधुप्रति पाप थिएन। उसले मधुलाई यसअघि नै अवसर परेको बेला भनिसकेको थियो, "म तिमीलाई सच्चा मनले प्रेम गर्छु ।" मन सच्चा भए पनि पुरुषको शरीर कच्चा हुने गर्छ। मोहनको प्रेम सच्चा थियो वा थिएन त्यो मधुले जाँचिन तर उसले शरीर कच्चा भएको पाई, उसकै शरीरले पनि कच्चापन देखायो। उस बेला मधुले भनेकी थिई, "कसको मनमा को पसेको हुन्छ र मोहन प्यारा तर तिम्रो कुरा म विश्वास गर्छु। तिमी मलाई बिहे गर्छौ ?" उसले बिनाआलटाल भन्यो, "गर्छु। सय चोटि गर्छु।" मधुलाई यो पत्यारिलो भयो तर एउटा कुरा उसले बुझिन कि बिहे एक पटक गरेमा पुग्थ्यो तर मोहनले किन सय चोटि गर्छु भन्यो। उसले सोची, "केटाहरू एकै पटकको भेटमा भावावेशमा किन आउँछन् ? यसले मबाहेक अर्कीसँग लभ गरेको पनि छैन होला। यसरी अत्तालिएर जबाफ दिनुपर्ने केही थिएन। अर्की केटीसँग लभ गरेको भए बित्याँस पर्छ तर केटोसँग अर्की केटीलाई प्रेम गरेको पुरानो अनुभव रहेछ। मसँग टाढिने काम नगर्ला किनभने प्रेममा बिछोडको व्यथा कति कष्टदायी हुन्छ त्यो बुझेको हुनु पर्छ।" तर उसको मनमा एउटा गाँठो यो पर्न आयो_ "के उसले अगि कसैसित प्रेम गरिसकेको भए मलाई पनि उसरी नै थाङ्नोमा सुताइदेला ?"

राति उनीहरू सँगै सुते। बिहान मोहन आफ्नो डेरातिर लाग्यो र कारणवश फेरि त्यतातिर फर्केन। यता रामप्रसाद तीन चार महिनासम्म गाउँ जानेआउने गरिरह्यो। अन्तिम पटक रामप्रसाद साइकिल डोऱ्याउँदै लखतरान परेर गाउँबाट फर्कियो। भन्यो, "गाउँमा धेरै दिन लाग्यो। साइकिल नलगेको भए सङ्गठनका लागि छिमेकी गाउँमा दौडधुप गर्न बसभाडा धेरै खर्च हुने थियो। पार्टीले एक पैसो दिने होइन। धन्न बुद्धि पुऱ्याइएछ।" रामप्रसादकी स्वास्नीले छोरो जन्माएकी थिई। ऊ खुसी भयो। अलि ढिलै सन्तान भएकाले भन्यो, "ढिलो हुनु छोरो हुनु।" मधु पनि त्यहीँ थिई तर उसको मुख उज्यालो थिएन। भिनाजु रामप्रसादले भन्यो, "मधु, तिमी ओइलाएको देख्छु नि।" अलि अलि थामिएर सोध्यो, "खै त मोहन, ऊ यता आउन छाड्यो अचेल। झन् म गाउँ गएका बेला मेरो जहान र सालीको राम्ररी हेरविचार गर्नू भनेको त बेपत्ता नै पो भएछ।" मधुले केही भन्न सकिन तर मनमनै भनी, "मोहनले मलाई गर्भवती गराएको छ। म उसको चिल्ला कुरामा फसेँ। लोग्नेमान्छे सबै यस्ता हुन्छन् कि ?" उसको यो कुरा थाहा पाइसकेकी उसकी दिदीले उति बेलै उग्र हुँदै भनिसकेकी थिई, "सबै लोग्नेमानिस चिप्ला चपुल्ला हुन्छन् भनेर जानेकी तैँ उससँग जानी जानी लहसिस् त ?" यसमा मधु मौन बसी। विवाद गर्नु उचित देखिन। दिदीले जगल्ट्याउने डर पनि थियो।

पहिलेदेखि मधुकी दिदी उसका गतिविधिको चियो गर्दै थिई, त्यसैले शङ्का पैदा भएको थियो उसमाथि। रामप्रसाद गाउँबाट फर्केर आउनुअघि दिदीले बहिनीलाई बेसरी केरकार गर्दा उसले घटनाको सत्यतथ्य बयान गरेकी थिई। दिदी एकछिन् जङ्गिई, बहिनीको जगल्टा लुछूँ कि गाला



फुटुन्जेल पड्काऊँ भन्ने भई। तर अन्ततः असहाय थिई। लोग्ने आएको राति नै उसले त्यो कुरो ढिला नगरी भनी। रामप्रसाद रातभरि निदाउनै सकेन। मोहन यस्तो घटिया मानिस होला भन्ने उसले चिताएको थिएन। साथी भनेर भरोसा गरेको त दुष्ट पो निस्क्यो। उसले निद्रामै बर्बराउँदै भन्यो–"मोहन तैँले मेरो पिठ्युँमा छुरा घोपिस्।" झसङ्ग भएर जागेपछि सालीको अब के गर्ने भन्ने उसलाई चिन्ताले सताउन थाल्यो। सासूससुरालाई के भनेर जबाफ दिने भन्ने त्रास पनि मनमा आइराख्यो। बिहानीपख मात्र उसलाई निद्रा लाग्यो यद्यपि ऊ गाउँको काम र फर्कंदाको बसको लामो यात्राले अत्यन्त थकित थियो।

बिहान उसले रिसको आवेगमा स्वास्नीलाई भन्यो, "मोहनलाई म छप्काएरै छाड्छु। कहाँ छ खुकुरी, ले!" घरमा एउटा आँसीबाहेक काट्ने कुरो अर्को थिएन र लोग्नेले खुकुरी माग्नु उचित देखिएन। एउटा खुकुरी र अचानो किनिराखौँ भन्दा नमानेको सम्झी। भन्थ्यो, "हिंसा भड्काउने सामान घरमा राख्नु ठिक हुन्न।" यद्यपि ऊ हिंसाप्रिय भूमिगत पार्टीको कार्यकर्ता थियो। अहिले मान्छे छप्काउन खुकुरी खोजिरहेछ। स्वास्नीलाई रामप्रसादले स्वरमा रिस देखाउँदै भन्यो, "उसले मधुको जिन्दगी बिगारेको छ तर साला उम्केर कता जाला।" उसलाई यो शङ्का थियो, मोहन साहुको काम छाडेर अन्य कतै काममा लागेको हुनु पर्छ र डेरा बदलिसकेको हुनु पर्छ। स्वास्नी डराई र भनी, "त्यसो गर्नु ठिक हुन्न। मान्छे मारेका कारण प्रहरीले समातेर तिमीलाई जेलमा हाल्यो भने हाम्रो के हुने ? हाम्रो त बिचल्ली हुन्छ हुन्छ तिम्रो जीवन पनि बर्बाद हुन्छ। मारकाटका कुरा छोड बरु सजिलो उपाय सोच।"

रामप्रसादले हठात् सोध्यो, "अरू के उपाय छ ?" स्वास्नीले गम्भीरतापूर्वक सोचेको भङ्गिमा देखाई। सोच्नलाई ऊसँग पनि केही थिएन, दिमाग खाली नै थियो। आफ्नै माल खराब निस्केपछि कति नै पो बलियो भइन्छ र बहस गर्न। मात्र एउटा डर व्याप्त थियो– कतै लोग्नेले मोहनको हत्या नगरोस्। हत्या गर्न सक्ने खालको उसको पोइ थिएन, उसलाई यो पनि महसुस भइरह्यो। अलि ढुक्क भई। उसलाई ढाडस लागिरहेथ्यो, उसको लोग्नेले रिसको आवेगमा मार्छुकाट्छु भनिहाले पनि यस्तो भयावह काम गर्न सक्दैन। मान्छे नरम स्वभावको छ। उसरी मधु उसकी बहिनी पनि त होइन। साली हो तर भित्रभित्रै लज्जाबोध पनि भइरहेको होला, दुई जिउकी दिदीलाई सघाउने कोही छैन भनेर गाउँबाट सासूससुरालाई भरोसा दिएर बोलाइहालेँ भनेर। यस्तो गम्भीर घटना होला भन्ने के थाहा ? मधु हेर्दा सुशील नै देखिन्छे तर आगोको छेउमा राखेको मैन पग्लिन कति बेर। बेँरै लाग्दैन। चढ्दो जवानी, होइन जवानी चढिसकेको रहेछ नत्र यस्तो घटना किन बेहोर्नु पर्थ्यो।

घरमा मौनता चलिरहन्थ्यो। आज पनि त्यस्तै थियो। कसैले उज्यालो अनुहार लगाएका थिएनन्। झमक्क साँझ परिसकेको थियो। अँध्यारोले डम्म ढाकेको थिएन। सहरमा बत्ती बाल्ने समय भइसकेको थियो तापनि मोहनको कोठामा बत्ती बाल्नतिर कसैको ध्यान गएको छैन। कोठाको बिचोबिच एउटा ध्वाँसोले निलेको पुरानो चिम लामो तारमा झुन्डिएको थियो। कसैले पनि स्विच थिच्ने जाँगर देखाएन। उज्यालोदेखि डराउने र भूमिगत बस्न रुचाउनेहरू अथवा अँध्यारोमा बस्न अभ्यस्तहरू झैँ अथवा कुनै अनिष्टको छाया परे झैँ सबै मौन थिए। त्यसै बेला कसैले ढोका ढकढकायो। रामप्रसाद तन्द्राबाट झसङ्ग जागे झैँ भयो तर सुस्तरी उठेर बत्तीको स्विच खिटिक्क पार्‍यो। कोठामा मरणासन्न वृद्ध झैँ उज्यालो भयो। उसले तत्काल ढोका खोल्ने इच्छा गरेन। यति बेला को आयो होला ढोका

ढकढकाउन ? अबेरसम्म सहरमा किनमेलमा व्यस्त रहेपछि बास बस्न उसको कोठा खोज्दै आएको अनपेक्षित अवसरवादी कुनै गाउँले पो हो कि ? जे भए पनि साँझको पाहुनालाई ढोकाबाहिर कुराउनु ठिक नमान्दै उसले ढोका खोल्यो ।

ढोकामा एउटा उदास अनुहार देखा पऱ्यो यद्यपि भित्र कोठाको चिमको प्रकाश प्रफुल्ल वा उदास कस्तो अनुकार हो भन्ने खुट्याउन पर्याप्त थिएन । उदास अनुहार चिनेको वा कतै छरछिमेकमा देखेको मानिसको पो हो कि भनेर उसले गडेर नियाल्यो । एउटै घरका ओल्लोपल्लो कोठा भाडामा लिएर बस्ने राजधानीका डेरावालले एकअर्कालाई चिन्नु सम्भव नभएको उसले गम्यो र सोध्यो, "भन्नुस् कसलाई खोज्नुभो ?" उदास अनुहारवाला खैनीको अभ्यस्त रहेछ । उसले परिचय दिन मुख खोल्दा खैनीका तिखो हस्को मोहनको नाकमा पस्यो । उसले धेरै भूमिका नबाँधी भन्यो, "यो रामप्रसादजीको डेरा हो ? म पहाडबाट आएको, मोहनको साथी हुँ ।" मोहनको नाम सुन्नेबित्तिकै रामप्रसादको अनुहारमा उदास मानिसप्रति एकाएक आत्मीयता पलाएर आयो । उसले ढोका छेकेकोबाट हटेर उदास आगन्तुकलाई भित्र आउन निम्त्याए झैँ बाटो दियो । उदास आगन्तुक भित्र छिऱ्यो र कोठाको निरीक्षण गऱ्यो ।

"भन्नुस्, तपाईं को हो । मोहनलाई कसरी चिन्नुहुन्छ ?"

उदास आगन्तुकले एकै पटक लामो सास छाड्यो र सास भित्र नतानी खरर भन्यो, "म मोहनको अत्यन्त मिल्ने साथी हुँ । मेरो नाम जानेर फाइदा त छैन तर मेरो नाम पवन हो । ऊ र म खाडीतिर जाने सल्लाहमा थियौँ । उसले भएको पुर्ख्यौली सानो जग्गा बेचेर रकम जोहो गर्ने प्रयासमा थियो । त्यसैका लागि हामी जिल्ला सदरमुकामतिर बसमा झर्दै थियौँ । तर अफसोस नहुनुपर्ने दुर्घटना भइदियो । अहिले सम्झँदा मेरो छाती दुख्छ तर टारेर टर्न नसकिने कुरो भइछाड्छ भनेर चित्त थामथुम पार्छु ।" उदास आगन्तुक पवनले भन्यो । पवन झन् उदास भयो । रामप्रसादले टारेर नटर्ने दुर्घटना के रहेछ भनेर सोध्न सकेन ।

पवनले आफैँ भन्दै गयो, "हाम्रो पहाडसम्म मोटरबाटो त गएको छ तर बाटो खतरनाक छ । मानिसहरू ज्यान जोखिम हालेर ओहोरदोहोर गर्ने । बस पनि थोत्रा न थोत्रा छन्, साना साधन जिप पनि त्यस्तै । ती सबको अर्थ यै हो हुनेहुनामी भयो रामजी । भावीलाई कसैले टार्न सक्दो रहेनछ । ऊ र म हाँस्दै कोचाकोचको बसमा भविष्यको योजना बनाउँदै तल सदरमुकामतिर झरिरहेका थियौँ । बस बेतोडले कुदिरहेको थियो एक्कासि त्यो त हल्लँदै तल भीरतिर गुल्टिन थाल्यो र कति बल्ड्याङ खाँदै तीन सय मिटर जति तल खोलामा पछारिन पुग्यो । म त घाइते, बेहोस भइसकेको थिएँ । बसभित्रका यात्रुहरूलाई के भयो कसो भयो अर्को अर्को दिन थाहा भयो । पच्चिस जना त ठाउँका ठावैँ मरिसकेका रहेछन् । चालक पनि । चालकले मापसेको शङ्का थियो । साथी मोहन अर्धमृत अवस्थामा थियो तर भाग्यले उसलाई मैले भेट्न भ्याएँ । उसले मलाई एउटा कुरो भनेर गएको छ । हेर्नोस्, दुई महिना पहिले यो दुर्घटना भयो । उपचारकै क्रममा उसको निधन भयो । आज महनिा दिन भयो मैले उसको अन्तिम संस्कार गरेको ।"

उदास आगन्तुक पवनले साथीको सम्झनामा बरर आँसु खसाल्यो । रामप्रसाद पनि घटना सुनेर स्तब्ध भयो । अगिसम्म मरन्च्याँसे गुलुपले दिइरहेको उज्यालोमुनि अर्धअँध्यारो कोठा निस्तब्ध अन्धकारमा डुबे जस्तो भयो । यता मोहनको अकस्मात् भएको मृत्युको खबरले मधु मुर्छा परिसकेककी थिई । मधुलाई जेनतेन उनीहरूले सरकारी अस्पताल पुऱ्याएका थिए ।

दिन बिते । मधुको गर्भ रहेन, खबरको मानसिक आघातले पतन भयो । यसरी गर्भको बच्चो संसारै नदेखी बिदा भयो । खबरको अप्रत्याशित आघातको नैराश्यले उसको रक्तस्राव शिशु तुहिएपछि पनि बढेर गयो । स्वस्थ हुने क्रममा ऊ सरकारी अस्पतालको एक कुनाको बेडमा थिई । पवन उसलाई नियमित भेटिरहने गर्थ्यो । ढाडस पनि दिन्थ्यो र डाक्टरले लेखिदिएका औषधिहरू पनि किनिदिन्थ्यो । उसलाई मर्ने बेलामा मोहनले मधुसितको प्रेम र बिहेको योजना बताइसकेको थियो । एक दिन एक नर्सले देखी, मधु र पवन ठट्यौलो पारामा हाँसी हाँसी बोलिरहेका छन् । उनीहरूलाई नचिनेकाहरू ती दुई जना गाढा प्रेममा बाँधिएका प्रेमीप्रेमिका हुन् भन्न हिचकिचाउन्नथे अथवा खुबै मिल्ने लोग्नेस्वास्नी । नर्सले मधुलाई इन्जेक्सन दिँदै भनी, "त्यो पवनसित तिमी निकै मस्केर कुरा गरेको देख्छु । तिमीलाई निकै मन पराए जस्तो छ ? अनि तिमी नि ?" नर्सको प्रश्नले मधु एकछिन उदास भई । विगत बिर्सने भइसकेकी थिई तर पूर्णतः होइन । मानिसलाई उसको विगतले पूर्णतः छाड्दैन । समालिएर हँसिली भई र भनी, "जीवनमा एउटा साथी पनि चाहिँदो रहेछ । सधैँ दुःखमा डुबेर दुःखी भइरहेर दुःख टर्ने होइन । खास गरेर नारीहरूलाई पुरुष साथीको खाँचो परिहाल्छ ।"

नर्स उसको जबाफले सन्तुष्ट भई वा भइन त्यो उही जानोस् । पवनले मधुलाई मोहनले भनिछाडेको खबर भनेन । उसले भनेको थियो, "मधुलाई यो भनिदिनू, अर्को जन्ममा भेटौँला ।" अर्को जन्ममा भेटिने कुरो आफ्नो ठाउँमा थियो तर भोलिको त थाहा हुँदैन, अर्को जन्मको त झनै । कुरो यो पनि थियो गएकाहरू फर्केर आउँदैनन् । संसारनिर्ममता र नियमपूर्वक आफ्नै गतिमा हिँडिरहन्छ । मधु जस्ती सुन्दरी युवतीको जीवन त्यसै खेर जान दिन्नँ भन्ने अठोट पवनको मनमा थियो । उसको पनि अगिल्लो गृहस्थी बिग्रेको थियो । स्वास्नी दलालको प्रलोभनले उसैसँग पोइल हिँडेकी थिई । मुम्बई दिल्ली कताको कोठीमा पुगेकी थिई । उसलाई पनि एक्लो शुष्क जीवनदेखि मुक्ति चाहिएको थियो । के थाहा, मोहनले भनेको अर्को जन्ममा भेटौँला भन्ने मृत्युशश्याको सन्देशले मधुको विचार परिवर्तन भएर वैराग्य उत्पन्न गरोस् र दिनरात विरहमा प्रेमी मोहनको नाम जपेर बस्ने सन्न्यासिनी बनोस् । खतरा मोल्नु छैन । ■

# डर



◆ रामेश्वरी पन्त



सुन्दै डर लागेर आयो । राति एक्लै त्यसरी वन नजिकै पाखोमा गएर बच्चा पाउँदा बाघ आएर खाइदिएको भए ? आमालाई किन डर नलागेको होला ! मनमनै देउतालाई सम्झेँ । उनैले जोगाइदिए होलान् । आमाले राम्री बैनी पाइदिनुभएको थियो । त्यसरी एक्लै बाहिर गएर बैनी पाउनुको कारण चाहिँ बुझिनँ । आमाले पछिसम्म पनि भन्नुहुन्थ्यो- "पिसाब गर्न गएकी थिएँ, त्यहीँ जन्मिहाली ।"



"ह्याँ पैसो कसले गाडेको हँ ?"

पूजाखण्डबाट माल्दाइले मुसुमुसु हाँस्दै सोध्नुभयो ।

बिहानको खाना खानेबेला भएको थियो । आमाले भान्सामा भात पस्कँदै हुनुहुन्थ्यो । भान्साको चौकामुनि ठुल्दिदी, माइल्दिदी, म र कल्पना लस्करै बसेका थियौँ । साधना सानै थिई, यस्तै चार पाँच महिनाकी हुँदी हो । माइल्दाइका लागि मोहिरोमा पिर्का र पानी तयार थियो । गाउँतिर डुल्न जानुभएका बुवा आइपुग्नुभएकै थिएन । त्यसैले आज पूजा गर्ने पालो माइल्दाइको थियो । कान्छादाइको वर्तुन (व्रतबन्ध) गरेकै थिएन । उहाँले पूजा गर्ने कुरै भएन । वर्तुन नभएका कारण मोहिरोमा उक्लेर खाना खाने कुरा पनि भएन र कान्छादाइ पनि हामीसँगै बसेर खाना खानुहुन्थ्यो । ठुल्दाइले कहिलेदेखि घर छोडेर जानुभयो यादै छैन मलाई । उहाँ एसएलसी दिएपछि पढ्न भनेर सहर पसेको कुरा धेरै पछि थाहा पाएकी थिएँ ।

सबै जना चुप रहे । कसैले पनि "त्यो पैसो मैले गाडेको हो" भनेनन् । भनुन् पनि कसरी ? गाडेको भए पो भन्नु !

"आज बिहान जसले पूजाऽभाँडा माझ्यो उसैले गाडेहोला नि !" आमाले भन्नुभो ।

"आज कसको पालो थियो ?" माइल्दाइले फेरि सोध्नुभो ।

"यल्ले माझेकी हो" माइल्दिदीले मतिर देखाउँदै भनी ।

"तैँले गाडेकी होस् रामनी ?" देउता नजिकै बसेका माइल्दाइले सोधेपछि चुप लाग्ने कुरै भएन । नङले भुइँ कोट्याउँदै मसिनो स्वरमा "हो" भनेँ । दाइले मुसुक्क हाँस्दै सोध्नुभो "किन गाडेकी नि ! भन् त ?" सबैका आँखा मैतिर फर्केर प्रश्नवाचक भए ।

"देउतालाई चढाको पैसो लाँदा देउताले गाली गर्चन् कि भन्ने डर लाओ अनि त्यैँ गाड्दिएँ ।" मेरो कुरा सुनेर सबै जना मरीमरी हाँस्नथाले । सँगसँगै म पनि हाँसिदिएँ ।

बिहान उठेपछि क्षमता अनुसारको काम समात्नुपर्थ्यो । त्यसैले पूजाका भाँडा माझ्ने, पूजा सामाग्री तयार गर्ने काम प्रायः मेरै थियो तर पूजा गर्ने काम चाहिँ बुवाको थियो । बुवा नहुँदा माइल्दाइले गर्नुहुन्थ्यो । कान्छादाइलाई पनि यो हक थिएन । बुवा वा माइल्दाइ दुवै नहुँदा आमाले गर्नुहुन्थ्यो तर शालिग्राम भने छुनु हुँदैनथ्यो ।

हिजो आमाको आइतबारको व्रत थियो । देउता राखेको कुँडीमा कोरिएको सूर्यलाई करवीरका लामा लामा पात र लालुपाते चढाएर पूजा गर्नुभयो । तामाको दसपैसे ढ्याक पनि चढाउनुभयो । आमाले साँझको आरती गरेर भान्सामा बसेपछि म भान्सासँगै जोडिएको पूजाखण्डमा गएर बसेँ । आमाले बिहान चढाएको करवीरको फूलमाथि तामाको दसपैसे ढ्याक थपक्क बसेको देखेँ । हातमा लिएर ओल्टाइपल्टाई हेरेँ । तीनतलेका बुढाबालाई सम्झेँ । "यो दस पैसाको पुस्टकारी किन्न पाए कति धेरै दिन्थे होलान् है !" मन पुस्टकारीमय भयो ।

तीनतलेको बारीभरि उखु नै उखु थिए । उखु पेल्ने कोल पनि थियो । उखु पेलेर बुढाबाले खुदो बनाउँथे र बेच्थे । गुँड बनाएर भोर्लाको टपरीमा सिन्काले खुटेर राख्थे र बेच्थे । कहिलेकाहीँ आमाले पनि किनेर ल्याउनुहुन्थ्यो र खान्थ्यौँ । खुब मिठो लाग्थ्यो । केटाकेटीहरूका लागि भने पुस्टकारी बनाएर बेच्थे । पाँच पैसाको पुस्टकारी त मुट्ठीभरि आउँथ्यो । उनकी नातिनी थिई नानुमैयाँ । हामी तलको



घरमा गएपछि उसले खेल्ने साथी पाएकी थिई कल्पना। ऊ दिनदिनै खाना खाएपछि काखमा बिरालोको बच्चा च्यापेर हाम्रो घरतिर सोभिन्थी र "आऊ टल्पना थेल्न दाम्" भन्दै परैबाट चिच्याउँदै आउँथी। दिनभरि कल्पनासँग खेलेर साँझ परेपछि बिरालो च्यापेरै घर जान्थी। उसको बिरालो पनि उनीहरूसँगै खेल्थ्यो।

मन धेरैबेर गुलियो हुन पाएन किनकि त्यो पैसा देउताको थियो। देउताको पैसाले पुस्टकारी किनेर खाने हिम्मत आएन। डर लाग्यो देउताको। छोडौँ भने अरूले भेट्टाएर लैजालान् भन्ने पिर। माटैमाटोको थुम्को थियो पूजाखण्ड। आमाको भान्साको गारोसँगै जोडिएको। पूजाका भाँडा माभ्दा पोखिएको र देउतालाई चढाउँदा चुहिएको पानीले गिलो भएको माटोमा कुँडी नजिकै ठाडो पारेर गाडिदिएँ पैसो। कसरी देख्नुभो कुन्नि दाइले !

मपछि जन्मिएकी बहिनी कल्पना हिँड्न सक्ने भएकी थिई। एक दिन हामी बसिरहेको गाउँको मूल घरमा थुप्रै मान्छे जम्मा भए। बुवा, माइलाबुवा र कान्छाबुवा पनि जम्मा हुनुभयो। पिँढीमा घरभित्रका सबै भाँडाकुँडा ल्याएर थुपारियो। आमाले मामाघरबाट ल्याएर मदुसभित्र राखेका भाँडा पनि निकाल्नु भयो। सबै भाँडा बाहिर पुगे र भाग लगाइए। विस्तारै ती सामानको तीन भाग लाग्यो। सबैभन्दा पहिले एक भाग कान्छाबुवाले रोज्नुभयो र आफूतिर तान्नुभयो। त्यसपछि पालो आयो माइलाबुवाको। बाँकी रहेको भाग चाहिँ बुवाको रहेछ। त्यो भाग एउटा डोकोमा हालियो र पिँढीको कुनामा राखियो।

अस्ति भर्खर मामाघर जाँदा बोईले देउतालाई जल राख्ने गरेको सानो तामाको लोटा सारै राम्रो लागेर मागेर ल्याएकी थिएँ। आमाले त्यसलाई पनि मदुसमै राख्नुभएको थियो। त्यो मदुस पनि मामाघरबाटै ल्याइएको थियो। जुन मदुस सधैँभरि बोईको मायाले भरिएको हुन्थ्यो। आठ भाइ छोरा थिए बोईका। छोरी भने आमा मात्रै हुनुहुन्थ्यो। सबैले माया गर्थे। हरेक पल्ट मामाघर जाँदा आमाले टन्न कोसेली ल्याउनुहुन्थ्यो। बोईले लुकाएर दिएका चिज राख्ने ठाउँ पनि त्यै मदुस थियो।

मदुसबाट भाँडा निकाल्दै गर्दा आमाले लोटा पनि निकाल्नुभयो।

"मेरो टुङ्कुलो !"

खुसीले उफ्रँदै मैले आमाको हातबाट लोटा खोसेँ र लगाएको जामाभित्र गुटुमुटु पारेर लुकाएँ। मायाँ गरेर मैले त्यसको नाम "टुङ्कुलो" राखेकी थिएँ। सानो थियो, त्यसैले। जामाभित्र मेरो टुङ्कुलो लुकाएर म पनि आमासँगै पिँढीको एउटा कुनामा उभिएँ र आमालाई सोधेँ– "आमा ! के गरेको नि यो ?"

"औँस लाऽको" आमाले अँध्यारो मुख लगाउँदै भन्नुभो "अब हामी छुट्टिने।" के होला यो छुट्टिने ? मैले कुरै बुझिनँ।

भोलिपल्ट !

माइल्दाइले भाँडाकुँडाको डोको बोक्नुभयो। सबैले एकएक पोका च्यापे। आमाले कल्पनालाई च्याप्नुभयो। मैले चाहिँ एक हातले त्यै टुङ्कुलो समातेँ, अर्को हातले आमाको धोती। आँगनबाट गोठमा झर्ने सिँढीहरू झर्दै ओरालो लाग्यौँ गोठभन्दा पनि तल, धेरै तल। यमुना र सरस्वतीहरू भने आएनन् हामीसँग। म जन्मेको त्यो ठुलो घर त माइलाबुवाको भागमा परेको रहेछ। यमुनाहरू त्यहीँ बसे। तैपनि अलि तल पुग्दासम्म पनि आउँछन् कि भन्दै पछि फर्कंदै हेर्दै गरिरहेँ तर आएनन्। उनीहरू नै मेरा खेल्ने साथी थिए। उनीहरूले आँगनको डिलबाट हेरि मात्र रहे। कस्तो नरमाइलो लाग्यो।

तलको घरमा पुग्यौँ। माथि गाउँको घरभन्दा भिन्दै लाग्यो। वरिपरि खेतबारी। आँगनसँगै जोडिएर लमतन्न परेको खरबारी। घरको दक्षिणपट्टि पाखो गाँसेर बनाइएको गोठ र गोठसँगै टाँसिएको ठुलो आँपको रुख। घरै अगाडि पानीको कुलो। दैलोनेरै खन्युको बोट। खेल्ने, उफ्रिने, कुद्ने ठाउँ त कति हो कति !

तर मन धेरैबेर रमाउन पाएन। आँपको रुखबाट दुई चार पाइला अगाडि पुगेर खरबारीको डिलबाट यसो तलतिर हेरेको त डरलाग्दो वन पो रहेछ। नयाँ ठाउँमा आउनु के थियो, मनभित्र डरले घर बनाइहाल्यो। अझ डराउने कुरा त भन्नै बाँकी पो छ त ! चर्पी पनि त्यै खरबारीको डिलमा रहेछ। एक्लै कसरी आउने ! तलतिरबाट फुत्त बाघ निक्लेर खायो भने ! सधैँ एक न एक जना साथी आउनुपर्थ्यो। तलको घरमा बसुन्जेल साथीबिना एक्लै कहिल्यै चर्पी गइनँ। साथी भने जो भए पनि हुन्थ्यो। सानी बैनी भए पनि हुने।

दिनभर त मान्छेको चहलपहलले उत्तिसारो डर लाग्दैनथ्यो तर घाम ओरालो लाग्नासाथ घरभित्र पसिहाल्थेँ। बुवा, दिदी, दाइहरू काममा गए पनि आमा घरमै बस्नुहुन्थ्यो। घरकै काममा व्यस्त हुनुहुन्थ्यो। साँझ आमा भान्सामा खाना बनाउन बसेपछि मेरो बस्ने ठाउँ चाहिँ आमा नजिकैको पूजाखण्ड हुन्थ्यो। यो त्यही पूजाखण्ड हो जहाँ मैले त्यो तामाको दसपैसे ढ्याक गाडेकी थिएँ। आमासँग त जानै नपाइने। भान्सा छोइन्थ्यो। खाना खाएर नसकुन्जेल आमा भान्साबाट तल झर्न नहुने। कल्पना डराउँथी कि डराउँदिनथी कुन्नि ? ऊ सानै थिई। सायद उसलाई बाघको डर लाग्ने बेलै भएको थिएन।

आमाबाहेक मलाई बाघबाट जोगाउने त्यहाँ एउटै थिए– देउता। उनको नजिक बसेपछि म आफूलाई सुरक्षित महसुस गर्थें। यस्तो लाग्थ्यो, त्यहाँ बसेपछि बाघ आउँदै आउँदैन। ढुक्क हुन्थेँ म। गाई, गोरु, भैँसी सबै बाहिरै बाँधिएका हुन्थे तर बाघ कहिल्यै आएन हाम्रो गोठमा। बरु एक दिन बिहानै माथि घरमा बस्नुभएकी मुखिनीबोई (बुवाकी काइँली आमा) रुँदैरुँदै बँसीतिर झर्नुभयो। उहाँको एउटा तारीगाई थिई। उसले एउटी राम्री राति बाच्छी पाएकी थिई। हिजो राति बाघ आएर त्यसैलाई मारेर खाइदिएछ।

"राति बाच्छी" बाघले खाएको दुःख त लाग्यो नै। बाघ दिनभर जङ्गलमा सुत्छ अनि रातको समयमा गाउँतिर आउँछ भन्थे, हो रहेछ। दिउँसै लाग्ने बाघको डर मेरा लागि भनिसाध्यै थिएन। म मात्र होइन, अरू पनि त्यो वन छेउको घरमा बस्न डराएर हो या बाँदरले अतिसारो दुःख दिएर हो, सबैले बुवासँग गुनासो गरे। उता मुखिनी बोई पनि एक्लिनुभएको रहेछ क्यारे ! उहाँकै आग्रहमा बुवाले माथि गाउँमा घर बनाउनुभयो र सबै जना माथि सर्‍यौँ। मुखिनी बोई पनि हामीसँगै बस्न थाल्नुभयो।

तलको घरमा बस्दा आमाले अर्की एउटी बैनी थपिदिनुभयो। एक दिन साँझको खाना खाएर दिदीहरूसँगै आँटीमा सुत्न गएँ। हामी आँटीमा उक्लिँदै गर्दा आमा भने जुठाभाँडा माझ्दै हुनुहुन्थ्यो। बिहान उठेर तल झर्दा त आमा अँगेनापारिको ओछ्यानमा सुतिरहनुभएको देखेँ र दौडिँदै आमातिर गएँ तर आमाले आत्तिँदै "ल ल ! यता नछो है !" भन्दै मलाई परै बस्न भन्नुभो। अचम्म परेँ। आमाको छेउमा त सानो बच्चा पो सुतिरहेको। ठुल्दिदीले मेरो पाखुरामा समात्दै "त्यता नजा है ! छोइन्च। आमाले बैनी पाउनुभैच्च" भन्नुभो। मैले घुँडामा हात लगाएर वरैबाट त्यो बैनीलाई हेरेँ। कति सानी अनि कति राम्री ! साना आँखाले पिलिक्क गर्दै मलाई नै हेरे जस्तो लाग्यो। म त खुसीले फुरुक्क परिहालेँ। कतिखेर पाइहोलिन् आमाले यति राम्री बैनी ? म सुत्न जाँदासम्म त भाँडा माझ्दै गरेको देखेकी थिएँ !

अनि दिदीले बैनी पाएको कथा भन्न थाल्नुभो।

आँपको रुखपट्टिको कोठामा सुतिरहनुभएका माइल्दाइले राति एक्कासि बच्चा रोएको सुन्नुभएछ अनि ठुल्दिदीलाई उठाएर तल झर्नुभएछ र बच्चा रोएको ठाउँतिर जाँदा त आमा सिन्दुरे आँपको फेदमा अडेस लागेर बस्नुभएको रे ! आमाको काखमा बच्चा रोइरहेको। दिदी र दाइ मिलेर आमा र बच्चालाई भित्र ल्याउनुभएछ अनि दिदीले आगो बालेर दुवैलाई सेक्न थाल्नुभएछ। दाइले झोल पकाएर खान दिनुभएछ।

सुन्दै डर लागेर आयो। रातिमा एक्लै त्यसरी वन नजिकै पाखोमा गएर बच्चा पाउँदा बाघ आएर खाइदिएको भए ? आमालाई किन डर नलागेको होला ! मनमनै देउतालाई सम्झेँ। उनैले जोगाइदिए होलान्। आमाले राम्री बैनी पाइदिनुभएको थियो। त्यसरी एक्लै बाहिर गएर बैनी पाउनुको कारण चाहिँ बुझिनँ। आमाले पछिसम्म पनि भन्नुहुन्थ्यो– "पिसाब गर्न गएकी थिएँ, त्यहीँ जन्मिहाली।" धेरै पछि पो थाहा पाएँ, हुर्किसकेका थुप्रै सन्तानको अगाडि प्रसव पीडामा छटपटिन मन लागेन रे !

कान्छी बैनीलाई भने माथिको घरमा जन्माउनुभयो। अब हामी तीन छोरा र छ छोरी भयौँ। आमा भन्नुहुन्थ्यो,

"सबै बाँचेको भए पन्ध्रोटा पुग्थे।" अलिपछि थाहा पाएँ, कान्छी बैनी जन्मेपछि बुवाले नेपालगन्ज पुगेर परिवार नियोजन गर्नुभएको रे ! सायद २०३३ सालतिर हो क्यारे ! त्यसपछि भने आमाले सोह्रौं सन्तान जन्माउनु परेन।

माथिको घरमा आएपछि पनि बाघको डर कम भएन। झन् गाउँमा त राति राति गोठमा बाघ आउँथ्यो। कहिले कसकोमा, कहिले कसकोमा पसेर ससाना बाच्छाबाच्छी मारेर खाइदिन्थ्यो। हाम्रै गोठमा पनि पसेर एउटा भर्खरै जन्मेको पाडो लगिदियो। एउटा ठुलै भइसकेको बाच्छीलाई हाम्रै आँखा अगाडि नङ्ग्राले घेक्रो फोडेर रगत पिएर गयो। बुवा मधेशतिर जानुभएको थियो। घरमा आमा र हामी दिदीबैनी मात्र थियौँ। गोठमा गाई भैँसीहरू जोड जोडले कराउन थाले। हामी लाल्टिन बालेर हल्ला गर्दै नजिकै गयौँ। हामीलाई देखेर रगत पिउँदै गरेको बाघ जोडले घुर्न थाल्यो। सबै मिलेर करायौँ। बाच्छीको रगत पिउँदै गरेको बाघलाई देखेर त्यो दिन डर लागेन। निकै हल्लाखल्ला गरेपछि बाघ त गयो तर बाच्छी भने रातभर छटपटायो र बिहानीपख मऱ्यो। आमाले सतुवा घोटेर घाउमा लगाइदिनुभयो तर पनि बाँचेन। बाघले घाइते बनाएको बाच्छी कुरेर हामी रातभर लालटिनको उज्यालोमा पिँढीमा बसिरह्यौँ। बाघ पनि गोठभन्दा अलि पर बारीको डिलका बसेर रातभर आफ्ना टर्चलाइट जस्ता आँखाले घाइते बाच्छी र हामीलाई हेरि नै रह्यो र बिहानपख जब छटपटाउँदा छटपटाउँदै बाच्छीले प्राण त्याग्यो, बाघ पनि आफ्नो बाटो लाथ्यो। महिनौँसम्म मलाई बाघका ती टल्केका आँखाले झस्काइरह्यो।

गाउँको घरमा बसे पनि खेतीपाती गर्न त बेँसी नै झर्नुपर्थ्यो। खेतबारी वनकै छेउमा थियो। खेतबारीमा काम गर्दा खाजा लैजाने जिम्मा मेरै थियो। बर्खामा झ्वाम्म परेको निकै ठुलो खरबारी छिचोल्दै हिँड्नुपर्ने। कताबाट बाघ निस्केर खाने हो भन्ने डरले सधैँ मुटुले ढ्याङ्ग्रो ठोकिरहने। आखिर डर लागे पनि हिँड्नु त थियो नै एक्लै ! मेरो एक्लो यात्राको साथी उनै देउता थिए। उनलाई सम्झेपछि बाघ आउँदैन भन्नेमा ढुक्क हुन्थेँ र आरामले एक घण्टामा पुग्ने बाटो दस पन्ध्र मिनेटमै हिँडेर एकै पटक मेलोमा पुगेर सास फेर्थेँ। बाटोभरि हाम्रो परिवारले पुज्ने गरेका सबै देवीदेउताको नाम सम्झन्थेँ। बुवाले पूजा गर्ने गरेका ठाउँ ठाउँका भैरव, झाँक्री, नाग सबैलाई सम्झन्थेँ। यसो गर्दा गर्दा ती सबै नाम मिलेर एउटा मन्त्र जस्तै तयार भएको थियो।

निकै पछिसम्म पनि मैले त्यो 'मन्त्र' जपि नै रहेँ। हाइस्कुल पढ्दा मधुवनको बिचबाटो भएर हिँड्नुपर्थ्यो। कुनै दिन एक्लै पर्दा दायाँबायाँ कतैबाट फुत्त बाघ निस्केर खान्छ कि भन्ने डरले मुटु बाहिरै निस्केला झैँ गरी उफ्रिन्थ्यो। पछि कलेज जाँदा पनि त्यो वनको बाघले भन्दा पनि मनको बाघले कति पटक खायो खायो ! नखाओस् पनि कसरी, कैयौँ पटक त जम्काभेट पनि भैहाल्थ्यो। हामी हिँडिरहेको बाटो काटेर लुसुक्क गैदिन्थ्यो हाम्रै अगाडिबाट। धन्न केटासाथीहरू पनि सँगै हुनाले मुटु भने बाहिर निस्कन पाउँदैनथ्यो। फेरि मेरो 'मन्त्र' त मसँगै हुन्थ्यो सधैँ।

त्यो अनकन्टार जङ्गलको बाटो भएर केटासाथीहरूसँग एक्लै पनि हिँडियो तर डर कहिल्यै लागेन उनीहरूसँग। उनीहरू त 'मान्छे' हुन्, केको डर ! कोही नभएर एक्लै जङ्गलको बाटो हिँड्दा पनि कहिल्यै "कुनै मान्छे आएर केही गर्ला कि ?" भन्ने डर लागेन।

घरको दक्षिणपट्टि गोठ थियो। बाघले दुःख दिन थालेपछि "बाघको डोरो परेको" भन्दै बुवाले गोठलाई घरको उत्तरपट्टिको गरामा सार्नुभयो। त्यता सारेपछि भने गोठमा बाघ आएन। बरु हामीले घरभित्रै पालेर राखेको हर्केलाई समात्न दैलोमै आएर पटक पटक प्रयास गऱ्यो। हर्के पनि कम थिएन। भोटेको बच्चा न थियो ! बाघलाई नै झम्टिन्थ्यो र भागिन्थियो। हर्केले घरमा कसैलाई आउन दिँदैनथ्यो। बुवा बितेपछि हर्के नै हाम्रो सुरक्षा गार्ड थियो। गाउँका आवारा केटाहरूलाई हर्के पटक्कै मन परेको थिएन। हाम्रो बारीका फलफूल चोरेर खान बन्द भएको थियो।

एक दिन हर्के हरायो। निकै खोज्यौँ तर भेटिएन। कुकुर त जहाँ पुगे पनि एक दिन घर सम्झेर आउँछ भन्थे तर हर्के आएन। तेस्रो दिन कसैले खबर ल्यायो "हर्के त जङ्गलमा झुन्डिएको छ रे !" साँच्ची नै होरहेछ। हर्के मासुको लोभी थियो। आखिर कुकुर न पऱ्यो ! त्यही लोभ देखाएर उसलाई फकाएछन्, समातेछन् र जङ्गलको रुखमा लगेर झुन्ड्याएर मारिदिएछन्। हर्के मरेको देखेर निकै रोयौँ। हर्के मारिएपछि भने मलाई बाघको भन्दा मान्छेको डर लाग्न थाल्यो।

वर्षौंपछि एक दिन म आफू जन्मेको, हर्केको ठाउँ पुगेँ। बाघसँग डराउँदै आफैले तयार पारेको मन्त्र जप्दै एक्लै कुदेका वन, पाखा, खरबारीमा एक्लै हिँड्ने हिम्मत आएन। यस्तो लाग्यो, अब त्यहाँ बाघ होइन बाघभन्दा पनि हिंस्रक 'लोग्नेमान्छे' लुकेको छ र मौका पाउनासाथ उसले झम्टने छ। बस्ती उठेको सुनसान घरको पिँढीमा पुगेर केहीबेर बसेँ एक्लै। मनको दराजबाट अतितको किताब निकालेँ र एकएक पाना पल्टाउँदै गएँ। फेरि फर्केर नआउने ती सुन्दर र सुखद पलहरू एकएक गर्दै आँसु बनेर आँखाबाट बगिरहे। त्यो रित्तो घरमा बसुन्जेल पनि मान्छेकै डर लाग्यो र गह्रुँगा पाइला सार्दै आफन्तको घरतिर लागेँ।

समयको म्याराथनमा बाघको ठाउँ मान्छेले लिन थाले। पाइला पाइलामा मान्छेकै डर लाग्ने ! बाघ त कता हरायो कता ! मान्छेले मान्छेमाथि गर्ने हिंसाका घटना छ्याप्छ्याप्ती हुन थालेपछि मान्छे मलाई बाघभन्दा पनि भयङ्कर हिंस्रक र रक्तपिपासु लाग्नथाल्यो। जहीँतहीँ मान्छेको डरले तर्साइरहन्छ मलाई। मान्छेले मान्छेलाई मारेका, बलात्कार गरेका घटना सुन्नुपर्दा अहिले पनि "हे भगवान् !" भन्न मन लाग्छ तर पनि कुनै 'मन्त्र' बनाउन सकेकी छैन आजसम्म। ■

# पञ्चमीका चन्द्रमा



◆ काशीराज आचार्य



आज साँझ उनले मलाई खाना खान बोलाएका छन् । सानो छोरालाई फुपूकहाँ सुताएर म डराई डराई उनको निवास पुगेँ । अरू कोही पनि नदेख्दा मलाई एक प्रकारको असुरक्षा अनुभव त भइरहेको छ तर मलाई लाग्छ असुरक्षित पनि कोबाट को हुने, यो जटिल मुद्दा हो । श्रीमान् विदेश भएका कतिपय महिलाबाट यहाँ पुरुषहरू पनि असुरक्षित छन् । म पनि लोग्नेसँग बिछडिएकी अट्ठाइसबर्से युवती हुँ । मेरो सुरक्षा अरूले गरिदिनुपर्ने हो



जतातत‍ै आतङ्क र बम, गोला बारुद । कानले सुनिनसक्नु गरी पड्केका बन्दुकहरू । सुरक्षाकर्मी र आतङ्ककारीबिच हुने बेलाबखतका झडपले मूर्च्छित सहरमा दिउँसै पनि मन्द मन्द पदचापले हिँडेका मानवहरू । छिप्पेको सन्ध्यादेखि कलिलो प्रभातसम्मका क्षणले त मलाई मानसिक कोलाहल र तनावबाहेक केही दिएको छैन । दस घण्टाको काली रात मेरा लागि दस महिनाको कहाली बन्ने गर्छ । द्वन्द्वकाल राष्ट्रका निम्ति जति घातक छ, यी दिनहरूमा मेरो व्यक्तिगत जीवन–द्वन्द्व पनि थपिएको छ, कहिल्यै निको नहुने, सधैँ बल्झिरहने घाउ बनेर ।

नेपालको मध्यपश्चिम क्षेत्रको विकासोन्मुख बस्तीमा छु म । सामान्य शिक्षण पेसाले दुई जिउ पाल्न धौ धौ परेको अवस्था छ । एक्ली छु । साथी छोरा त छ, नाबालक । भर्खरै औँला समातेर हिँड्न थालेको ।

एक दिन प्रिन्सिपल सरकोमा काम विशेषले गएका बेला अचानक एक अपरिचित अधबैँसे मेरो नजरमा परे । प्रिन्सिपलले चिनाए, “उहाँ शिक्षामा दक्खल, विदेशबाट उच्च शिक्षा हासिल गरी यस जिल्लामा आउनुभएको हाकिम ।” उनी शिक्षक छनोट समितिमा विशेषज्ञ बनेर आएका रहेछन् । सुनेँ, बुझेँ– कुनै सरकारी कार्यालयका प्रशासक हुन् रे ।

आज शुक्रबारका दिन हाफछुट्टी भए पनि म विद्यालयको कामले नै ढिलासम्म बसेकी, त्यसैले प्रिन्सिपलसँग घरसम्म पुग्न गाडी भन्न गएकी थिएँ । “उहाँ पनि त्यतै जानु हुन्छ, सँगै जानु होला,” प्रिन्सिपलले हामी दुईलाई एउटै भ्यानमा राखी पठाए । सामान्य कदकाठी र मान्छे देख्दा पनि ठिकै । म त चुपचाप जस्तै थिएँ, उनी अलिक बोलक्कड रहेछन् ।

अध्ययन, अध्यापनमा मैले व्यावसायिक दक्षता हासिल गरेकी नै छु । पिताजीले “मलाई पाल्ने छोरी यही हो” भन्ने गर्नुहुन्थ्यो । काठमाडौँ लगी राम्रो विद्यालयमा आवासीय सुविधामा राखी पढाउनुभयो । उहाँ अब स्मृतिपटलमा मात्र हुनुहुन्छ । अन्यत्र कतै केही गर्न नसके पनि म माध्यमिक विद्यालयको राम्रो शिक्षकमा गनिन्छु ।

शनिबारको दिन । बिहान यौटा पसलमा म छान्दै थिएँ आफ्ना अत्यावश्यक आधारभूत सामानहरू । मेरा हैसियतका नुहाउने साबुन, सेम्पु, बिस्कुट आदि । अचानक उनी पनि मेरो भाइ पर्ने एक जना अधिकृतसँग सँगै आए । मेरो भाइ पसल चिनाउन र खरिदारीमा सघाउन आएको रहेछ ।

मलाई लागिरहेथ्यो– त्यतिबेला म उनीसँग नचिनिन पाए हुन्थ्यो । आखिर भाइले परिचय गराइछाड्यो । हामीले एकआपसमा देखिसकेको भावले नमस्ते आदानप्रदान गरेको भाइले मेसो पाएन । म घरबस्दा लगाउने मैला लुगामा नै बजार निस्केकी थिएँ । घरायसी काम गर्दागर्दै र छोरालाई बिहानको नास्ता गराई हिँडेकीले म ल्याङफ्याङ नै थिएँ । म त्यसै सिकुडिएँ, अटेस मटेस अनुभव भयो । म कसका लागि बनिबनाउ भएर हिँडूँ ? यस्तो लाग्छ कहिलकाहीँ त !

उनी यस ठाउँमा सरुवा भई आएको एक महिना मात्र भएको रहेछ ।

सामाजिक अभियन्ता पनि भएका नाताले मैले जिल्लाका धेरै जसो हाकिमलाई चिन्दछु । तिनमा यी पनि थपिए । बिदाको एक दिन, हुलाक कार्यालय अघिको चउरमा साँझपख म छोरालाई लिई बस्दै थिएँ । हुलाक हाकिमसँग उनी पनि त्यतै हावा खान घुम्दै रहेछन्, नजिकै आए । त्यहाँ उनले बदाम र सुन्तला किने । हामी चारै जना अलिक सजिलो ठाउँमा सरेर बस्यौँ ।

यसैबिच अचानक मेरो आफ्नो भनाउँदो मान्छे पनि त्यहीँ नजिकबाट गुज्रँदै थियो । मैले सङ्केत गरी उनीहरूलाई अलिक टाढाबाटै चिनाइदिएँ र भनेँ– “ऊः मेरो केही दिन अघिसम्मको लोग्ने ।” उनीहरूले जिज्ञासा राखे । मैले सबै कुरा बताएँ ।

मैले गैरसरकारी संस्था चलाएकी थिएँ। पत्रकारिता गरेँ, प्रेस चलाएँ। लागुपदार्थ दुर्व्यसन, उपभोक्ता हकहित, नारी चेतना जस्ता विषयमा कार्यक्रम सञ्चालन गरेँ। यस्ता कामबाट कति पो कमाइ हुन्थ्यो र ? पसल राखेँ, दुवै जनाको संयुक्त हात होस्, जीवन चलोस् भनेर। आफ्नो पेसा, व्यवसाय गरोस् भनी ऋण गरी उसका लागि लाखौँ खर्च गरेँ। अहँ, केही लागेन।

कच्चा उमेरमा भएको वैवाहिक निर्णय मेरो जीवन–मरणको पासो बन्यो। जति पैसा दिए पनि उसको मादक पदार्थ सेवन गरी पैसा भ्वाम पार्ने बानीले मैले जवानी, इज्जत, महत्त्वाकाङ्क्षा, सिर्जनात्मकता र पैसा सबैथोक गुमाउँदै आइरहेँ। लागुपदार्थ मेरो जीवनलाई तहसनहस पार्ने विष बन्यो। अन्य जिल्लाबाट श्रीमान् ल्याएर माइती क्षेत्रमा स्वतन्त्र रूपमा स्थापित हुन खोजेकी मलाई आफ्नैले "खुच्चिङ्" भन्दै अपमानित गरेका क्षणहरूले मलाई जिउँदो लास बनाइरहे।

ऊ प्रायः घर आउँदैनथ्यो, जाँड भए पुग्थ्यो। ऊ सुध्रेन। जे भयो, भयो। सबै कुरा बिर्सेर आफ्नो भाग्य यस्तै रहेछ भनी सहेकै थिएँ। यतिसम्म कि छोरा जन्मने बेला म अस्पतालमा छट्पटाउँदै थिएँ, ऊ बेहोस बनेर नालीमा घुर्दै थियो रे। मैले प्रसूति अवस्थामा नै यो कुरा सुन्नुपर्दा मलाई कस्तो भयो होला ?

मेरा रसिला आँखाले यति भन्दै गर्दा उनी मेरो कहानी सुनेर स्तब्ध भए।

उनीसँग मेरो भेट प्रायः विभिन्न कार्यक्रममा हुन थाल्यो। उनले एक पटक भनेका थिए– यो संसारमा धेरै जसो मान्छे सुखी छैनन्, यौटा न यौटा समस्याले जकडी रहेका छन्। महादेवलाई भष्मासुरबाट जोगिन गाह्रो भएथ्यो। सती वृन्दाप्रतिको दुराशयले विष्णुको व्यक्तित्व कमजोर बनेको थियो। देवीले महिषासुर बध गर्न महाकाली, दुर्गाको अवतार लिनुपर्‍यो। सुग्रीवको पक्षमा लागी लुकेर वाण हान्ने रामचन्द्रलाई बालिले भन्नु नभन्नु भनेको कुरा रामायणमा पढ्न पाइन्छ। श्रीकृष्णले छलछाम नगरी हुँदै भएन र अन्त्यमा यदुवंश नै सखाप भयो। यस्ता यस्ता युगनायकहरूलाई त आफ्नो नेतृत्व जोगाउन गाह्रो परेको थियो भने त्यसमाथि हामी त कलियुगका सामान्य मान्छे।

उनका कुरा धेरै तार्किक, तथ्ययुक्त, संवेदनशील, कारुणिक र कतिपय बेला विनोदी पनि हुन्थे। एकछिनलाई सबै पिरव्यथा हट्थे पनि। तर यस्ता पाठहरू मेरो अब आउने जिन्दगीका लागि उपयोगी हुन सक्लान्, ऐलेलाई त असम्भव नै भयो। किन कि जिन्दगी त मैले भोगिरहेछु। मैले मेरो भन्नेसँग छुटकारा पाउन भर्खरै सम्बन्ध विच्छेद नै गरिसकेकी छु। भोलि मात्र जिल्ला अदालतले फैसलाको पूर्ण पाठ उपलब्ध गराउँदै छ। म आफैँलाई थाहा छैन, मैले ठिक गरेँ कि बेठिक।

यी सबै कुरा मैले उनलाई भनेँ। बोल्दाबोल्दै म घुँक्क घुँक्क पो गर्न थालिछु। उनको सफल दाम्पत्यका अघि मेरो विषाक्त अभिव्यक्ति एउटा अरण्य रोदन मात्र हुन सक्ने हुन्छ। मैले बोल्दाबोल्दै पत्तो पाइनछु।

अदालतको फैसला टेबुलमाथि त्यसै अलपत्र छ। झ्यालबाट छिरेको हावाले प्रत्येक पानालाई फरफर छुट्याइरहेछ। मलाई त्यो सम्हाल्ने इच्छा पनि पलाएन। एकछिनपछि फैसलाको त्यो मुठो गिलासको पानीसमेत ढलाएर भुइँमा फ्यात्त खस्यो। सिसाका टुक्रा, नेपालीकागज र पानी एकै ठाउँमा लटपटिए। के यस्तो अपशकुन !

मेरो मनमा कुरा खेलिरहेछ– अबदेखि ऊ जेसुकै होस्, जहाँसुकै जाओस् वा लतारियोस्, खाओस् वा नखाओस्, के मतलब ? रोएको अन्तरात्माको कुनै सानो कुनामा "ऊ मेरो छोराको बाबु त हो नि !" भन्ने यौटा नमिठो उच्छ्वास अल्सरले आमाशयलाई कोपरे झैँ बसेको छ। गजब त यो छ कि न्यायाधीशको एक धर्को फैसलाले यत्रो संसार एक निमेषमै ध्वस्त हुने रहेछ तर तर मलाई यही मन्जुर छ।

निस्तब्ध रात। निद्रा लागेको छैन। नाबालक छोरो आनन्दले सुतिरहेछ। यिनै बाबुआमाको उन्मादमय प्रेमको पराकाष्ठाबाट उत्पन्न भएकाले जीवन यत्तिकै स्वर्णिम होला भने झैँ गरी सुखस्वप्नमा मस्त छ ऊ। उसलाई के थाहा उसको परिवारमा यति ठुलो दुर्घटना परिसकेको।

यो बिजुली गएको कालो रातमा मैनबत्ती बालेँ र प्रश्नैप्रश्नको प्रश्न डायरीमा लेखेँ–

मलाई छैन यो दुक्ख किन विच्छेद यो गरेँ ?<br>
छ दुक्ख सहयात्रामा यस्ताको कसरी परेँ ?<br>
मनमित कहाँ खोजूँ फिँजाई वेदनाहरू ?<br>
कसका अघि फैलाऊँ स्नेह–तृष्णा व्यथाहरू ?

किन किन मलाई नयाँ हाकिम असल लाग्छ। उनको बोली, रसिक मिजास, सार्वजनिक सभामा भाषण गर्ने कला आदि मन्त्रमुग्ध पार्ने खालको छ। मान्छे पीडित भएका वेला कसैले सानोभन्दा सानो सहानुभूति देखाए पनि त्यो ठुलो महत्त्वको लाग्ने रहेछ। एक पटक यौटा कार्यक्रम सकिएपछि उनले मलाई रोकेर भने, "आज मेरो कार्यालयमा पसी चिया खाएर जाऊँ न !" मैले हुन्न भन्न सकिनँ।

आफू पढ्न सकिएन, कुनै ठुलो पद वा पैसा आर्जन गर्न सकिएन वा सुन्दर भइएन भने त्यो कुरा आफ्नो सन्तानबाट पूर्ति भइदिए हुन्थ्यो भन्ने सबै बाबुआमाको चाहना हुन्छ। कसैको राम्रो र समझदार जोडी देख्दा "मेरो पनि त्यस्तो श्रीमान वा श्रीमती भइदिए पो" भन्ने इच्छा जागृत हुन्छ। कसैका मिलेका बाबुछोरा वा सासूबुहारी देख्दा "वा ! त्यस्तो पो सम्बन्ध" भन्ने मनमा पलाउँछ अर्थात् आफ्नो परिवेशमा जुन कुराको खाँचो छ अरूको देखेर आफ्नोमा घटाउने आकाङ्क्षा व्यक्तिको मानस पटलमा बसेको हुन्छ। यो व्यक्तभन्दा पनि बढी अव्यक्त हुन्छ। जुनसुकै मात्रामा होस्, त्यो हुन्छ, हुन्छ।

उनले बच्चालाई गर्ने प्रेम, अध्ययनमा विज्ञता र कहिलेकाहीँ उनको अफिस जाँदा आफ्ना स्टाफप्रति गर्ने व्यवहार पनि देखेकी छु। लोग्ने भनेको त यस्तो पो हुनु पर्छ भन्ने मनमा आइरहन्छ। मैले यो कुरा बुझेकी छु, उनी कदापि मेरो बन्न सक्दैनन्। किनकि उनी विवाहित हुन्, श्रीमतीसहित सन्तानका बाबु पनि। मलाई यो पनि थाहा छ, म गलत तानामा फँसिरहेछु। यसले झन् अर्को ठुलो



दुर्घटना निम्त्याउन सक्छ। तर... अबुझ र एकोहोरो बन्दै गएको मेरो मनलाई रोक्न उनैको सहयोग चाहिएला।

मलाई आफ्नो बसाइको स्थान मन परिराखेको छैन। यहाँ मेरो क्षतविक्षत जीवनमा नुनचुक दल्ने कुरौटे धेरै छन्, मेरा आफ्नै मान्छेहरू। जाउँ कतै ठाउँ छैन, आफ्नो जागिर यहीँ छ। मैले आत्महत्या गर्न सकिनँ किनकि छोरा साथमा छ। यो मेरो सहारा पनि हो र कमजोरी पनि। यो नभइदिएको भए मलाई कतै कसैसँग हिँड्न सजिलो त पर्थ्यो होला। तर कता हिँडूँ ? पहिलो त यस्तो पर्‍यो, दोस्रो ठिक पर्ला भन्ने के ग्यारन्टी ?

म आफ्नै सानो बार्दलीमा बसेर पूर्णिमाको चन्द्रमा हेरिरहेछु। कति शान्त, स्निग्ध, अटल। भन्छन्, चन्द्रमामा 'ट्रान्क्विलिटी' हुन्छ अर्थात् चरम आनन्दको शान्ति। झ्यालबाट छिरेर मेरो बिछ्यौनामा फिँजारिएको छ चन्द्रमाको प्रकाश। यो किरण सुखद दाम्पत्यका लागि अत्युत्तम प्रेमोपहार हो। तर मलाई भने यस बिछ्यौनामा घृणा लम्पसार परेको अनुभव भइरहेछ। मेरा लागि यो पूर्णचन्द्र औँसीको रात सरह बनेको छ। मैले चन्द्रमासँग आफ्नो जीवन घटाउन मिल्ने कुनै तत्त्व पाउँछु भने केवल चन्द्रमा भित्र रहेको दाग।

धेरै वर्ष पहिले एउटा हिन्दी सिनेमा 'नवरङ' हेरेकी थिएँ। कविले प्रेमी–प्रेमिकाको सम्बन्धलाई लिएर लेखेको 'आधा है चन्द्रमा' गीतमा आधी रातमा देखिने अर्धचन्द्रको आकृति, प्रेमीसँग सधैँ आंशिक कुरा मात्र व्यक्त गर्न पाइने क्षणहरू र आसैआस तथा प्यासैप्यासमा बाँचेको प्रणय कथाको प्रसङ्ग त्यहाँ छ। उत्कृष्ट लयमा प्रस्तुत गरिएको यस गीतमा कृष्णको आधा मात्रै सुरसाधना र राधाको अपूरो प्रेमकहानी, अश्रुपूर्ण नयन, कामुक आधी रात र प्रेमीप्रेमिकाका कम्पित ओठका उदाहरण दिई अपूर्ण प्रेमलाई पनि पूर्णताको भाव दिएर अजर अमर बनाउन खोजिएको छ। आधामा नै प्रेमको रस्तीबस्ती बसाउने कविको कस्तो कल्पना !

उनको सरुवा भएछ। करिब डेढ वर्ष हामी सुखदुःखका साथी बन्यौँ। उनको कार्यालयले हिजो नै उनलाई बिदाइ भोज दिएको रहेछ। आज साँझ उनले मलाई खाना खान बोलाएका छन्। सानो छोरालाई फुपूकहाँ सुताएर म डराई डराई उनको निवास पुगेँ। अरू कोही पनि नदेख्दा मलाई एक प्रकारको असुरक्षा अनुभव त भइरहेको छ तर मलाई लाग्छ असुरक्षित पनि कोबाट को हुने, यो जटिल मुद्दा हो। श्रीमान् विदेश भएका कतिपय महिलाबाट यहाँ पुरुषहरू पनि असुरक्षित छन्। म पनि लोग्नेसँग बिछडिएकी अट्ठाइसबर्से युवती हुँ। मेरो सुरक्षा अरूले गरिदिनुपर्ने हो कि म स्वयं अरूलाई असुरक्षामा पार्ने नारी हुँ। यस्तै प्रश्नले मेरो दिमाग हुँडलिइरहेछ तर जे होस्, मनपरेको मान्छेसँग जानी जानी साँझ एक्लै बस्नुभनेको जीवनमा जे जस्तो परिआए पनि बेहोर्न तयार छु भन्ने पनि हो र आत्मसुरक्षा बोध पनि हो।

उनीसँग आजको साँझ बस्दाको रमाइलो एकातिर छ भने भोलिदेखि नै उनलाई देख्न नपाउने कुरा सम्झेर म यसै मुर्झाएकी छु। मैले 'प्रेमदिवानी' राधाको तस्बिर होइन कि 'दरसदिवानी' अर्थात् दर्शन वा स्मृतिका लागि मरिहत्ते गर्ने मीराको फोटो उपहार लिई आएकी छु। आजै यतिबेला यो भान्सामा हँसिया आकारको चन्द्रमाको प्रकाश परेको छ। आज पञ्चमी तिथि हो क्यार ! चन्द्रमाको बनोट कति शिल्पयुक्त छ। एउटा गोलो घेरा त सजिलै बनाउन सकिन्छ, जसलाई पूर्णिमाका चन्द्रमा भन्न सहजै मिल्छ तर चन्द्रमा भन्नासाथै हाम्रो दिमागमा यस्तै खुर्पेचन्द्र (क्रिस्सेन्ट) को याद आउँछ। कलाकारिताको अन्तिम एकाग्रताबाट मात्रै पञ्चमीका चन्द्रमा बन्दो रहेछ। भलै यो अपुरो होस्, सुन्दरता यसमा पो ज्यादा छ।

उनका चम्किला, तेजिला र अनन्त भाव दिने खालका आँखाहरूसँग बेला बेला अनायासै मेरा आँखा जुध्ने गरिराख्या छन् तर हामी विवश छौँ, किंकर्तव्य विमूढ छौँ। हामी धेरै कम बोलेर पनि एकअर्कालाई अत्यधिक बुझ्ने पात्र बनेका छौँ। दुवै जनाको मिलीजुली स्वादबाट तयार भएको खाना हामीले लजाई लजाई खायौँ। उनका अर्धमुदित नयन र मेरा अर्धखिलित अधरहरूका अघि हाम्रा अन्तिम उपहारहरू साटासाट भए। आँखीभौँ जस्ता देखिने शुक्ल पक्षका चन्द्रमाले हामीलाई छड्के हेर्दै सन्देश दिइरहेका थिए, अर्को जुनी...।

यो छिप्पिँदै जान लागेको रातमा अब कहिल्यै नभेट्ने गरी मलाई एक्लै मेरो निवास छोडी उनी अल्पिए। कोठामा पुगी उनले दिएको उपहार खोली हेरेँ। रहेछ एउटी नारीले चिउँडोमा हात राखी आकाशका चौथाइ चन्द्रलाई एकोहोरो हेर्दै गरेको स्टिलफ्रेममा राखिएको पेन्सिलस्केच्ड चित्र र मलाई ढाडस दिएर लेखिएको एक काव्यात्मक चिठी–

तिम्रो विकल्पमा कोही जन्मने छैन विश्वमा तिमी प्रारम्भ वा अन्त्य आफैँ हौ यस लोकमा।

मान्छे भविष्यमा बाँच्छ त्यो तिम्रो वशमा छ है  
खुम्चन्छ बरु त्यो ह्याङ्की बिग्रन्न आकृति कबै।  
तिम्रो सूर्य कतै चम्की रहेको छ अवश्य हो  
गोलो पृथ्वीमहाँ कैल्यै सूर्यास्त हुन्न सत्य हो॥ ■

*(विसं २०५७/५८ सालतिर अनुभूत एक मर्मस्पर्शी सत्य घटनामा आधारित)*

**चुँदीरम्घा, तनहुँ**

# प्रेम विद्रोह



◆ नम्रता भण्डारी



मेरो बोली फुटेन, अलमलमै नजिकियो त्यो दिन । कसरी थाल्ने मेरो गृहस्थी ! बिर्सनु थियो सात फेराको कसमसँगै । तर म कसरी बिर्सन सक्थे उसलाई ? ऊ हरेक फेरामा मसँग घुमिरहन्थी सातै चोटि । उस्तै हेराइमा ! अहो, साच्चै, त्यहाँ त ऊ पो हाँसिरहेकि थिई । कही म निद्रामा त छैन, आफैँलाई चिम्टिएर हेरेँ । म जति जति ऊबाट टाढा टाढा जान चाहन्थे, ऊ त्यति मेरो नजिक हुन्थी ।



म जब ऊसँग एक्लै हुन्थेँ, म आफैँमा निकै दङ्ग, फुरुङ्ग र कता कता हराए जस्तो हुन्थेँ । कहिले उसको सम्झनाले मप्रति एकाग्रता पैदा गर्थ्यो ।

मेरा आँखाहरू अनौठो सौन्दर्य हेर्न आकुल हुन्थे । मलाई त्यो क्षण सम्पूर्ण उपलब्धि पाए जस्तो र संसार नै जिते जस्तो लाग्थ्यो । त्यस बखत धेरै अघिदेखिको चाहना बल्ल पूर्ण भएको आभास हुन्थ्यो । कता कता मधुरम आनन्दले बेरे जस्तो हुन्थ्यो र म चारैतिर आँखा घुमाउँथे । विशाल हृदयको साथ हाँसिरहेको त्यो नौलो युवतीमा अनुपम शक्ति थियो । ऊ अर्थात् मेरी... ।

घर आएको दिनदेखि नै आमाले खुसीमा लय बुनेको मलाई अझै सम्झना छ । तेरो त्यो झ्याप्ले कपाललाई ठुटे बना नत्र तलाई कसैले छोरी दिँदैनन् बुझिस् नि !

म बार्दलीबाट नै आमालाई सोध्छु, "ए आमै त्यो को नि ?" 'ज्योतिको दाइ' आमाले गिलासमा मोही पिउन दिँदा ऊ टाउको हल्लाउँदै हाँस्छ । मलाई देख्नासाथ उसले मौनतामा एक टक हेरिह्यो । केही बेरपछि त्यो मान्छे सुस्त स्वरमा बोल्यो 'भोलि सबैजना उतै पाल्नू ।' ऊ हिँड्दाहिँड्दै म बाबालाई सोध्छु "कस्तो खाउँला झैं तलदेखि माथिसम्म नियालेको, को हो त्यो ?" "भोलि थाहा हुन्छ, चुप लागेर सुत" बा केही नभनी भित्र छिर्छन् ।

बिहानै मिर्मिरेमै आमाले चिया दिँदै यति भनेकी हुन्छिन्, "राम्ररी हेरेस् तेरो संसारलाई । जब म विवाहै  गर्दिनँ" जान्न अर्काको छोरी हेर्न म अटल रहेँ आफ्नै शब्दमा ।" कत्रो रहर, इच्छा बुनेको थिएँ । "अझ पढा तेरो हाकिम साहबलाई" बा एकाएक पड्किए तर धन्न त्यहाँ सामुन्ने आमा थिइनन् नत्र त्यहाँ कतै रिसको ज्वाल फुट्थ्यो ।

छोटो अवधिमा बा फेरि एकाएक आमासँग तर्के, त पनि मसँग जाने कि न जाने ? अर्काको छोरी हेर्न । आएँ, आएँ... आमा भित्रैबाट बोलिन् । निस्किने बेलामा दोधारमै आमाले मलाई पछ्याइ नै रहेकी थिइन् तर मैले गोडा नसारेपछि, चुपचाप छेउबाट मलिन हुँदै गइन् । किन किन खुला रूपमा मन उदास मात्र थिएन कि म आफैँ निरास पनि थिए । लामो समयसम्म घरको बार्दलीमा बसिरहेको म कति बेला खोलाको छेउमा पुगेछु पत्तै पाइनँ । आफू कसैको प्रेममा निथ्रुक्क भिजेको थिएँ तर कसैलाई भन्नै सकिनँ । आफैँमा कतै विलुप्त भए, ती पलहरू ।

कहिले घाम, कहिले पानी रहेछ जीवन । सधैँ एकनास के हुन्थ्यो र ? आफैँलाई आफैँले सान्त्वना दिएँ तैपनि मन निक्कै अशान्त थियो । खोलामा झैँ मेरो मनमा पनि बाढी बडेको थियो । किन आमालाई बासँग अघि पठाएँ त्यो अनजान ठाउँमा, कहीँ रिसको झोकमा आमालाई थप्पड त बजाउँदैनन् नि !  त्यो लामो बाटोमा एकाएक मन कुँडियो ।

मैले आमालाई सम्झिँदै विलाप गरेका ती आवाजहरू खोलाकै दोभानमा पहराहरूबिच अलप भए । एकैछिनपछि दौडमा दौडिरहेको घोडा झैँ ठाडो बाटो आमालाई पछ्याउँदै म दौडिरहेँ । अलि पर देखियो विस्तारै हिँडेका ती निरास, उदास पाइलाहरू । कुदेको कुदै आमा सामुन्ने आएर टक्क रोकिए मेरा गोडाहरू । हातबाट झट्कारेर छुटाएको स्नेह पुनः पाउँदा आमाले शिरमा विस्तारै हात राखेको चाल पाएँ । खुसहाल समय थियो । छिटो छिटो जाऊँ म आफैँ पनि त्यो केटीलाई हेर्न आतुर छु तर कर गर्न पाउनु हुन्न नि मेरो पहिलो सर्त थियो ।

त्यहाँ त हिँड, कहीँ केटीले पो तँलाई नकार्ने हो कि, बाबाले विस्तारै मतिर हेर्दै



आक्रोश पोख्नुभयो। भित्र भित्रै निक्कै रिस उठे पनि चुपचाप आफ्नो मायाको संसार निभ्दा पनि केही नभनी दोधारमा पछि पछि हिँड्दै थिएँ। पहिलो पटक केटी हेर्न जाँदा मायाको पखेटा काटिएका थिए। मन रोमाञ्चित थिएन तैपनि समयको प्रभावले मलाई उनको घर पुऱ्याएर छोड्यो।

आफूलाई आत्मसात् गर्न नसक्दा सबै अर्थहीन एवं समयको रफ्तारमा एक गन्तव्यहीन यात्राको साक्षी भएँ म, कमसेकम आमाले त मेरो मनको ढुकढुकी बुझ्नुपर्ने हो, मैले मनमनै सोचेँ।

घरको आगनमा स्वागतद्वार राम्ररी बनाइएको थियो। टेबुलमाथि टीका, अक्षता र फूल तथा दुबोको माला किस्तीमा राखिएको थियो। दियो बाल्नुअघि केटीसँग केही छलफल गर्ने अनि मात्र निर्णय दिने निधो गरेँ। अलि असहज मान्दै आखिरमा सबैले सहमति जनाए। मलाई त्यहाँबाट भित्र कुनाको कोठामा लगियो। अलि अलि अप्ठ्यारो तथा सङ्कोच मान्दै, रातो साडीमा आधा घुम्टो ओडेर चुपचाप मेरो अगाडि आएर बसिन, कस्तो अच्चम, केही सोध्नु छ कि भन्दा टाउको मात्रै हल्लाइन्। आफ्नो प्रेयसीको प्रेम र स्नेहमा अमूर्त छु। मेरी प्रियतमा प्रेमपत्र पोखेको छु। प्रेमका कारण तपाईंसँग विवाह गर्दिनँ। अस्वीकार गर्दिनु एक विरही प्रेमीको मनोदशा भाव पोखेँ।

एकाएक मन हलुङ्गो एवं आत्मसन्तुष्ट भयो। लामो लामो सास फेर्दा रातो माटोको बास्ना बाहिरबाट आइरहेको। वातावरणमा शान्त, गम्भीरता छ तर कस्तो विडम्बना त्यो केटीलाई आफ्ना सारा व्यथा बेलिबिस्तार लाउँदा पनि मसँगै टीकाटाला गरिन्। थाहा छैन, उसलाई के कुराले रोक्यो, केले बाँध्यो। उसको त्यो स्वभावले आफ्नो मन बिचलित भयो, त्यहाँबाट फर्किंदा म निकै खिन्न तथा अलमलमा थिएँ।

राति सुत्ने बेला आमाबासँग गनगन गर्दै हनुहुन्थ्यो, कसरी सक्ने यति ठुलो कार्य, घर मर्मत गर्नु पर्छ, रङ्रोगन पनि गर्नु पर्छ। नकरा, नकरा, बाबाले मिलेर कार्य पूरा गर्छौं त चिन्ता नगरेस् भन्दा म छटपटीमै बेरिएको थिए। रातभर निद्रा परेन, अनुहार पनि न्याउरेको थियो। आपनत्वको आँखाबाट परपर भागिहिँड्थे। म घरको एक्लो छोरो कसरी प्रेम (विद्रोह गर्न सक्थे) कसरी रोक्न सक्छु यो विवाह मैले केही बुझ्नै सकिनँ।

मेरो बोली फुटेन, अलमलमै नजिकियो त्यो दिन। सरी थाल्ने मेरो गृहस्थी! बिर्सनु थियो सात फेराको कसमसँगै। तर म कसरी बिर्सन सक्थे उसलाई? ऊ हरेक फेरामा मसँग घुमिरहन्थी सातै चोटि। उस्तै हेराइमा!

अहो, साच्चै, त्यहाँ त ऊ पो हाँसिरहेकि थिई। कही म निद्रामा त छैन, आफैँलाई चिम्टिएर हेरेँ। म जति जति ऊबाट टाढा टाढा जान चाहन्थे, ऊ त्यति मेरो नजिक हुन्थी। उसलाई देख्ने बित्तिकै पहिलो नजरमा नै विश्वासको अनन्त आभासमा हराएको थिए।

राति कोठामा मधुर प्रकाशको उज्यालो फैलिएको थियो तर त्यो अन्जान युवती निहुरिँदै प्रेमपत्र पढ्न आग्रह गर्दैथिइन्। स्मृतिले पुनः आफूले दिएको प्रेमपत्र अस्वीकार गर्ने प्रेयसीको याद दिलायो। म ढोका खोलेर बाहिर निस्किएको मात्र के थिएँ, हाम्रो संसारलाई कहिल्यै बिर्सन सक्दिनँ जब त्यो शब्द बोलिन् म हेरेको हेरै। त्यो मुस्कान, मेरो प्रेमको उत्सव। ■

**तारकेश्वर–७, काठमाडौँ**

# रजोनिवृत्ति



◆ लक्ष्मी थापा



रजोनिवृत्तिका समयमा जीवन सङ्गिनीको ख्याल नराख्दा सम्बन्धमा आएको चिसोपनालाई प्रभातले अब माया, साथ र सहयोगले न्यानो बनाउने अठोट गर्छ । यतिका वर्षसम्मको सुमधुर सम्बन्ध ठुलो दुर्घटना हुनबाट जोगिएको महसुस गर्दै मन र तनभरि नयाँ स्फुर्ती बोकेर दुवै जना घर फर्किन्छन् ।



हिजोआज समयले रातलाई माया गर्न थालेको छ । ऊ धेरै समय रातलाई दिन्छ । रातको अँध्यारोसँग मितेरी गाँस्न केही घरका बस्ती उठिरहेका छन् । सरलाको घरका अन्य कोठाका बत्तीले विश्राम लिए पनि उसको शयनकक्षले भने विश्राम लिन पाएको छैन । यो वर्षका छोटा दिन अनि लामा रातसँग ऊ आत्तिएकी छ । दिन त जसो तसो गरेर नि कटाएकी सरलालाई रात काट्न भने साह्रै गाह्रो भएको छ । घडीको सुई टिकटिक गर्दै एकनासले आफ्नै गतिमा कुदिरहेको छ । उसको मनमा पनि छटपटीका सुई कुँदिरहेका छन् उही गतिमा ।

तातिएको मनलाई शान्त बनाउन सरला करुवाको चिसो पानी घटघट पिउँछे । यो आवाजले उनको श्रीमान् प्रभात निद्राबाट ब्युँझन्छ । बत्ती अबेरसम्म बलेको देखेर प्रभातका आँखा चनाखा हुन्छन् । घडी हेर्छ । रातको साढे एघार बजेको छ । “आज पनि यति बेलासम्म सुतेकी छैनौ ? हैन भको चाहिँ के हो तिमीलाई ?” अलि पहिला नरम भएर सोध्ने प्रभातको बोलीमा हिजोआज कठोरता मिसिएको छ । “केही भएको छैन । त्यत्तिकै निद्रा नै लागेन ।” आफूलाई पूर्ण रूपमा स्वस्थ भएको आभास दिलाउन खोज्छे सरला तर आवाज कापिरहेको हुन्छ । प्रभात त्यसपछि केही बोल्दैन । जुरुक्क उठ्छ । तकिया लिएर लिभिङ रुमको सोफामा सुत्न जान्छ । पुसको चिसोले सोफामा एउटा ब्ल्याङ्केटको भरमा के सुत्न दिन्थ्यो र ! ऊ जबरजस्ती गुजुल्टिएर निदाउन खोज्छ ।

सरला प्रभातको व्यवहारले झन् आत्तिन्छे । उसको पछि पछि लिभिङ रुममा जान्छे र बेडरुममा जान आग्रह गर्छे तर असफल हुन्छे । बाबु बाहिर लिभिङ रुममा सुतेको छोराछोरीले थाहा पाउलान् भन्ने छुट्टै आँधीले उसको मनलाई हल्लाउँछ । चाल मारेर फेरि प्रभातको हालचाल बुझ्न खोज्छे । प्रभात पनि निदाउन सकेको छैन । दुवै एकअर्काको तत्कालको हालचालबारे अवगत हुन्छन् तर रात जस्तै दुवै मौन रहन्छन् । सरला आफ्नै कोठामा फर्किन्छे । बत्ती निभाउँछे । चिसो ओछ्यानमा चिसै मन लिएर बलजफतले चिसा आँखा चिम्लन खोज्छे ।

अध्ययनका क्रममा प्रभात र सरलाबिचको गहिरो मित्रताले वैवाहिक सम्बन्धको खुट्किलो टेकेको थियो । दुवैबिच अगाध प्रेम थियो । दुवै जना आआफ्नो योग्यता अनुसार कार्य क्षेत्रमा लागेका थिए । यसै क्रममा दुई सन्तानको जन्मले उनीहरूको जीवनलाई पूर्ण बनाएको थियो । हरेक वर्षमा आउने जुनसुकै मौसमले पनि आफ्नो अलग्गै विशेषता छरे जस्तै जीवनमा आउने अलग अलग मोडहरूले पनि आफ्नै विशेष महत्त्व राखेका थिए उनीहरूका जीवनमा । सुखदुःख अभाव वैभव सबैसँग बरोबर साइनो गाँसेका थिए । दिनभरिको थकानलाई मधुमय रातले मेटाउँथे र भोलिको दिनलाई नयाँ ऊर्जा दिन्थे । यही रीतले उनीहरूको वैवाहिक जीवनले चौबिसौँ वसन्त पार गरेको थियो । उनीहरूले परिवारसँग खुसीका साथ स्वस्थ जीवन बिताएका थिए ।

गएको दसैँमा नवरथाभरि नै सरलालाई एकातिर कामको बोझले थिचेको थियो भने अर्कोतर्फ महिनावरी भइएला र घरको काम जति छोरीको भागमा

थपिएला भन्ने छटपटीले मन र मस्तिष्क गिजोलेको थियो । प्रभातसँग महिना त अष्टमीको दिनमा पुग्छ । औषधि खानुपर्ला जस्तो छ । बेलुका बजारबाट घर फर्किंदा औषधी लेराउनु पर्छ कि जस्तो छ भनेकी थिई । उसको कुरा काट्दै प्रभातले "छोरीले गर्न सकिहाल्छिन् । त्यसमाथि म छु । छोरा छ । हामी मिलेर तिमीले गर्ने काम गरौँला किन जान्ने हुनु पर्‍यो" भनेको थियो । प्रभातको यति मिठो माया देखेर टीका लगाउन नपाए पनि केही छैन । आफूले नहुँदा गर्ने मान्छे भएपछि ढुक्क भइने रहेछ भनेर मनलाई सम्झाएकी थिई । फुरुङ्ग पनि परेकी थिई । कहिलेकाहीँको चाडमा त अरूले पकाएको खान पाउँदा पनि त आनन्दै आउँछ नि । कति आफैँ मात्र मरिमेट्नु हो सोची ।

तर सरलाले सोचेको भन्दा फरक हुन गएको थियो । ऊ मनलाई एकक्षणका लागि आनन्दको आभास दिलाउँथी । फेरि मनमा अनेक कुरा लेराउँदै चिढिन्थी । "चाडबाडमा के रिसाइरहेकी हो । प्रभातको कुराले सचेत भएर खुसी हुने कोसिस गरेकी थिई । महिना नाघ्यो तर पहिलाको जसरी पन्छिएर बस्ने दिन नै आएन । दसैँ त्यसै तनावग्रस्त भयो । प्रेग्नेन्सी टेस्टपछि चिन्ता पनि हट्यो । दुवैले लामो सास फेरे ।

दसैँपछि जति दिन अगाडि बढ्दै गयो सरलाको स्वभावमा पनि परिवर्तन देखिन थाले । साना साना कुरामा पनि उसको अनुहार रातो हुनपुग्थ्यो । चिसो हुँदै गएको मौसममा पनि गर्मीको महसुस गर्थी । अफिस पनि मन नलागी नलागी जान्थी । अझ यो समस्या उसलाई रातमा हुन थाल्यो । निद्राले उसलाई सजिलै जित्न सकेको थिएन । प्रभातको न्यानो आलिङ्गनमा लुटपिटिँदा खुसीको उत्कर्षमा पुग्ने सरलालाई जीवनसाथीको स्पर्श मात्रले पनि पसिना पसिना हुन थाली । एउटै बेडमा प्रायः सँगै आराम लिने जोडीका आँखाहरूमा प्रभातको आँखाले मात्र विश्राम लिन थाले ।

प्रभातले केही दिन त सरलालाई सन्चो नभएर होला भन्ने सोचेको थियो । अब त उसको जस्तै अस्थिरता अहिले प्रभातमा देखा परेको छ । ऊ सरलासँग चिढिन थालेको छ । सरलाले व्यक्त गरेका कुरालाई नाटकको संज्ञा दिन थालेको छ । उसलाई अझ समस्या रातसँग छ । सरलाले शारीरिक सुख नदिएको आरोप लगाउन थालेको छ । के श्रीमान्‌ले शारीरिक सुखका लागि मात्र श्रीमतीलाई माया गर्छन् ? अहिलेसम्म प्रभातले उसलाई गरेको माया शारीरिक सम्बन्धका कारण मात्र थियो ? यस्ता प्रश्नका बाणले उसको मनलाई हानिराख्छ । प्रभातलाई रिझाउन ऊ तयार हुन खोज्छे । प्रभातले कतै बाटो मोड्ने हो कि भन्ने मनको भूतले उसलाई झन तर्साउँछ । वनको बाघले खाओस् नखाओस् मनको बाघले खान्छ भने जस्तै उसलाई मानसिक आघातले नराम्ररी खाइरहेको छ ।

एक दिन सरलाले आफ्ना शरीरका एक एक अवयवलाई ऐनामा खुब केलाउँछे । कपाल सुम्सुम्याउँछे । फुस्रो लाग्छ । एक हप्ता अगाडि फुलेको कपाल छोप्नलाई लगाएको कलरले जरालाई अलि समयसम्म लुकाउन सकेको थिएन । आँखा वरिपरि डार्कसर्कल हाँसिरहेको पाउँछे । गाला छाम्छे । झोल्लिएको पाउँछे । शरीर फुलेको पाउँछे । साथीले भने जस्तै आफू प्रभातको अगाडि निकै बुढी भएको पाउँछे । डरका अनेक रूप उसका मनमा जबरजस्ती बास बस्न खोज्छन् । एक दिन साँझ, अफिसबाट फर्केका प्रभातको बेढङ्गका पाइलासँगै नमिठो गन्ध कोठाभित्र प्रवेश गर्छ । सरला झस्किन्छे । एकक्षण अगाडि सिमलको भुवा बनेको उसको मन फेरि साउनको बादल बन्छ । "तपाईंले पिउनुभएको ? होइन ! तपाईंले पिएरै आउनुपर्ने त्यस्तो के गरेकी छु र ? अस्तिसम्म त झगडा गर्नुहुन्थ्यो । कराउनु हुन्थ्यो । त्यही सही लाग्थ्यो बरु तर हिजोदेखि न बोल्नुभएको छ राम्ररी । हुँदा हुँदा पिउन थाल्नुभयो होइन । छोराछोरीले थाहा पाए के भन्लान् ?

सरलाको कुरा नसकिँदै उसले नमिठो वचनको प्रहार गर्न थाल्यो, प्रभातको अप्रत्याशित व्यवहार र वचनले सरला लुगलुग काम्न थाल्छे । पिएको मान्छेसँग बहस गर्नु उचित ठानिन । त्यसमाथि छोराछोरीले थाहा पाउलान् भन्ने चिन्ता । बाथरुम जान्छे । आँसुसँगै गह्रुँगो मन पखाल्दापखाल्दै त्यही ढल्छे ।

होसमा आउँदा सरलाले आफूलाई हस्पिटलको इमर्जेन्सी वार्डमा पाउँछे । केही दिनको हस्पिटलको बसाइले सरला र प्रभातलाई धेरै कुरा सिकाएको छ । जुन कुरालाई न त प्रभातले बुझ्न खोजेको थियो न त सरलाले बुझाउन सकेकी थिई आफ्नो मन र प्रभातलाई । अहिले डक्टरको सल्लाह र सुझावबाट उनीहरूको समस्याले निकासा पाउँछ । गएको चार महिनादेखि शरीरमा आउने प्राकृतिक परिवर्तनलाई सहज रूपमा नलिँदा दुवैले भोगेका मानसिक तनावको हिसाबकिताब गर्छन् । रजोनिवृत्तिका समयमा जीवन सङ्गिनीको ख्याल नराख्दा सम्बन्धमा आएको चिसोपनालाई प्रभातले अब माया, साथ र सहयोगले न्यानो बनाउने अठोट गर्छ । यतिका वर्षसम्मको सुमधुर सम्बन्ध ठुलो दुर्घटना हुनबाट जोगिएको महसुस गर्दै मन र तनभरि नयाँ स्फुर्ती बोकेर दुवै जना घर फर्किन्छन् । ■

**सल्लाघारी, भक्तपुर**

कथा

# निस्तब्धता



◆ निर्मलकुमार आचार्य

डाँको छाडेर रोएको आवाज सुन्नासाथ रामबहादुर घरबाहिर निस्किए । माथ्लाघरे बाको घरमा रुवाबासी चलेको रहेछ ।

झाँक्रो फिँजाएर रोइरहेकी माथ्लाघरे आमालाई वरपरका दिदीबहिनी शान्त पार्ने असफल प्रयास गरिरहेका थिए ।

पिँडीमा माथ्लाघरे बालाई राखिएको थियो । ससाना केटाकेटी ट्वाल्ल परी हेरिरहेका थिए । परबाट हरिप्रसाद बाजे सकी नसकी आइरहेका देखिए । बाजेले माथ्लाघरे बाको नाडी छामी उनी बितिसकेको ठहर गरेका मात्र के थिए, आमैको पीडा झन् उम्लियो । उच्च स्वरमा आमाले रुँदा गाउँ नै हल्लिए जस्तो लागे पनि सान्त्वना दिन कोही आएनन्, भए पो आउनु !

कुनै बेलाको गुलजार ठाउँ, बग्रेल्ती घर छन् तर मानवशून्य, अधिकांश घरमा ताल्चा झुन्डिएका छन् ।

"अब घाट लैजानु पर्छ" जसै बाजे बोले, रामबहादुरको मनमा तर्कना चल्न थाल्यो । एक, डेढ घण्टाको बाटो छ, कसरी लाने घाट ? महिला र ससाना केटाकेटी मात्रै छन् ! आफूसरहको अर्को कोही नदेख्दा अधबैँसे रामबहादुर पिरोलिए । लक्ष्मी दिदीका छोरा, बुहारी पनि काठमाडौँबाट पर्सिको सट्टा आजै आइदिए हुन्थ्यो नि भन्ने पनि लाग्यो । भएका एक जना माड्साब पनि जँचाउन सहर गएका छन् !

घाटबाट अलि छिटो फर्कनसके बाँदर र बँदेलबाट अलि अलि भए पनि बाली जोगाउन सकिन्थ्यो कि भन्ने पनि छ । अँध्यारै पऱ्यो भने त चितुवाको पनि साह्रै डर ! रामबहादुर यसरी सुर्ताइरहेका बेला भावुकतासाथ हरिप्रसाद बाजेले हात कमाउँदै भने, "म पनि छु बाबु !" "हैन बाजे, हजुर ८८ वर्षको मान्छे बोक्न सक्नुहुन्न, बरु खटमा नहालेर डोकोमा लगे कसो होला ?" रामबहादुरले अनुमति मागे ।

"हुन्छ बाबु, परिस्थिति अनुसार कर्म गर्ने हो । गाउँमा बलियाबाङ्गाको चेहरै देख्न नपाइने भइहाल्यो, के गर्नु, सबैतिर यस्तै चाला छ... !" बाजेले लामो सुस्केरा हाले । ■

# ढुङ्गा



◆ ममता मृदुल

पहाडको टुप्पोबाट पहिरो खस्यो माटो सँगसँगै ढुङ्गो तल खोलामा खसेकाले धन्न चोट लागेन । बजारिनु पछारिनुको पीडाले थिलथिलो भएको भए पनि केहीबेरमा चिसो पानीको स्पर्शले तरङ्गित बनायो । खोलाको स्पर्शले कति मनमा सङ्गीत गुञ्जन थाल्यो । पानीबिना जीवन चल्दैन जस्तो लाग्यो । झरनाको मधुर धुनमा रमाउन थाल्यो ।

खोला पनि कम छैन छाल बनेर जिस्काउँथ्यो । ढुङ्गो उन्मादले मात्तियो । दुई वटा ट्रक लिएर आएका मान्छेले खोलाबाट ढुङ्गा झिकेर लगे । ढुङ्गा रोयो, बेस्सरी चिच्यायो । ढुङ्गाको आँसु कसैले देखेनन् र छोडेनन् । बाँच्ने खुसी पनि हरायो । बाटोको छेउमा लगेर थुपारे । आगो बले जस्तो रापिलो ठाउँमा बस्न पटक्क मन छैन । एउटा मान्छेले भुँइबाट ढुङ्गा उठायो । बाच्ने रहर मरिसकेकाले रोक्न मन लागेन । ओई साँहिला यता हेर त ! कति राम्रो सुँड भएको गणेश भगवान्को मूर्ति रहेछ । पख पख मन्दिरमा राख्नु पर्छ । आहा कति राम्रो भाग्यमानी रैछस, जे माग्छस् पुग्छ । ढुङ्गाले अचम्म मान्दै सोच्यो । आफ्नो पीडा पोख्न नसक्ने मैले अरूको भाग्य बनाउन सक्छु ? हस्याङ फस्याङ गर्दै आएकी केटीले भनी बा दस दिन अगाडि हराएको गाई र बाच्छी भेटियो । ■

# कलामा राजसी प्रतीक र विम्ब



◆ मुकेश मल्ल



गोलाकारको यो विम्बलाई लाइट अफ नलेजको प्रतीकात्मक विम्बका रूपमा सोलार सिम्बोलका रूपमा पनि बनाउने प्रचलन विश्वभर छ । पूर्वी एसियामा चक्रको विम्बलाई मूर्ति र शिलालेखका लागि शृङ्गार गर्ने महत्त्वपूर्ण विम्बका रूपमा प्रयोग हुने गरेको पाइएको छ । पहिलो पटक सिन्धु घाँटीको सभ्यता उत्खनन भएपछि चक्रको महत्त्व र अर्थलाई आधिकारिक रूपमा भन्न थालिएको हो । यसपछिका दिनहरूमा यी प्रतीकात्मक विम्बको चर्चा विश्वभर फैलिएको हो ।



कलामा प्रतीक वा विम्बहरू हजारौँ वर्षदेखि राजसी ढङ्गले ठाँटबाँटका साथ बसिरहेका देखिन्छन् । समुदायबिच कहिले कला आफैँ विम्बका रूपमा देखा पर्दछ । (चैत्य, स्तूप, प्रतिमा स्वयं बौद्ध धर्मको प्रतीकात्मक विम्ब हो) । चैत्य र स्तूपलाई (वास्तुकला) आज कसैले केही भन्न पर्दैन । बौद्ध धर्मको प्रतीकात्मक विम्बको रूपमा जसकसैले पनि चिन्ने र भन्ने गर्दछन् । विशेष गरेर स्तूपको अगलबगलमा धर्मचक्रका विभिन्न रूपहरूलाई स्थापित गरिएका हुन्छन् । मूल गेट अनि स्तूपको मुनि फेदको भागमा दुई मृगको बिचमा राखिने धर्मचक्रको त अझ एक अलग अर्थ र मतलब छ । धर्म-चक्र बौद्ध धर्मको यस्तो एउटै मात्रै प्रतीकात्मक विम्ब हो जसले बुद्धिस्ट ल को प्रतिनिधित्व गर्दछ । भगवान् बुद्धले पहिलो पटक सारनाथको जङ्गलमा उपदेश दिँदा यो प्रतीकात्मक विम्बलाई बुद्धिस्ट ल को रूपमा स्थापित गरेका थिए । गोलाकारको यो विम्बलाई लाइट अफ नलेजको प्रतीकात्मक विम्बका रूपमा सोलार सिम्बोलका रूपमा पनि बनाउने प्रचलन विश्वभर छ । पूर्वी एसियामा चक्रको विम्बलाई मूर्ति र शिलालेखका लागि शृङ्गार गर्ने महत्त्वपूर्ण विम्बका रूपमा प्रयोग हुने गरेको पाइएको छ । पहिलो पटक सिन्धु घाँटीको सभ्यता उत्खनन भएपछि चक्रको महत्त्व र अर्थलाई आधिकारिक रूपमा भन्न थालिएको हो । यसपछिका दिनहरूमा यी प्रतीकात्मक विम्बको चर्चा विश्वभर फैलिएको हो ।

कहिले चाहिँ कलाभित्रै पनि समुदायका लागि अलग्गै थप विम्बहरू सिर्जना हुने गर्दछ । विम्बभित्र अर्को विम्ब, यसभित्र पनि अर्को विम्ब जन्मदै जानु पनि विम्ब र प्रतीकहरूको निजी स्वभाव हो । कमलको फूलमाथि नै देवी लक्ष्मीलाई उभ्याउनु पर्ने कमलको फूल चाहिँ अर्को प्रकारको प्रतीकात्मक विम्ब हो । रौद्ररूपमा बन्ने गरेको भैरवले बोक्ने गरेको धारिलो खड्गले (आयुध) अर्कै प्रकारको विम्बलाई प्रतिनिधित्व गरिरहेको हुन्छ । यसलाई मान्छे वा जनावरलाई काट्ने भनेर होइन रिस, राग, द्वेष आदिलाई काट्नलाई कल्पना गरिएको प्रतीकात्मक विम्ब हो भनी वर्णण गर्ने गरिन्छ । नेपाली परम्परागत थाङ्का र पौभा चित्रहरूमा यस्ता यस्तै पचासौँ आयुधहरूको कल्पना गरिएका छन् । यसैमा किसिम किसिमका आसन अनि हस्तमुद्रालाई समेत जोड्दा त यस्ता अनिगन्ती विम्ब प्रयोग भएको देख्न सकिन्छ । यस्ता विम्ब कैयौँ डेकोरेटिभ फर्ममा अनि कुनै चाहिँ गहिरो अर्थ, आसयका साथ बनेका देखिन्छन् ।

**हिजोआज**

गहन अर्थ बोकेर आएका यी दुई, तीन वटा अलग अलग विम्ब अनि यसका प्रक्रिया चाहिँ समुदायकै अगलबगलमा देखिनु यसको निजी स्वभाव नै हो । अलि पछिल्लो कालमा आएर चाहिँ कलामा निश्चित विम्ब र प्रतीक फरक ढङ्गबाट परिभाषित भइआएको देखिन्छ । प्यारोडी र व्यङ्ग्य अनि कतै सवाल र मुद्दाहरूका प्रतीकका रूपमा पनि प्रयोग गर्न थालेका छन् । कतै मौलिकता र परम्परा, पहिचानलाई देखाउन पनि आजका कलाकारहरूले यसलाई पुनर्व्याख्याका साथ अर्को प्रतीकात्मक विम्बका रूपमा प्रयोग गरेको आजको कलामा देख्न सकिन्छ । जहाँ शैक्षिक, उपदेशात्मक सन्देश, व्यक्तिगत अवधारणा र विचारलाई सम्प्रेषण गर्न यस्ता विम्ब प्रयोग भएको देखिन्छन् । शिक्षा वा स्वास्थ्यका सन्देशलाई प्रभावपूर्ण



रूपमा ग्राहक, प्रयोगकर्ता, ग्रहणकर्ता, उपभोक्तामा पुऱ्याउन अनेक विम्ब सिर्जना हुने गरेको पाइएको छ। कलाकारहरू जति स्वतन्त्र बन्दै गए प्रयोगात्मक कलाको गति तेज भयो। कलामा सिर्जनशीलताले उग्र रूप लियो। त्यति नै मात्रमा यस्ता प्रतीक र विम्बहरू अनेकौँ रूप र स्वरूपमा बन्ने गरेको पाइएको छ। कलाकारले समाजलाई हेर्ने दृष्टिकोण, फरक पर्न थालेपछि कलाकार आफैँले अनेकौँ विम्बलाई जन्म दिएका छन्। कहिले थिमको रूपमा, कहिले सवाल र मुद्दाका रूपमा निश्चित विम्बहरू बन्नु बनाउनु यसैको चरम उत्कर्ष हो।

## थोरै समयका लागि बनेका विम्ब

मानवको दिनचर्याभित्र लुकेर बसेका यस्ता कलागत प्रतीक र विम्बहरू फेरि अलिक अलग्गै प्रकारको हो। जुन चाहिँ सस्कृति, संस्कारमा आबद्ध भएका हुन्छन्। शास्त्रीय विधि–विधान, कर्मकाण्ड, चाडवाड जात्रा आदिमा प्रतीकात्मक विम्बहरू केही चाहिँ स्थायी रूपमा अनि केही चाहिँ अस्थायी रूपमा देखा पर्ने गर्दछ। सबैभन्दा रमाइलो पक्ष चाहिँ यसको अस्थायी रूप हो। जुन चाहिँ थोरै समयका लागि सिर्जना हुन्छन् एक क्षणका लागि प्रभावकारी भूमिका खेल्छन्। यसपछि भौतिक रूपमा यसको अस्तित्व सकिन्छ, मात्र हाम्रो मानसपटलमा यसका प्रभावहरूलाई अभिलेखन हुने, गर्ने काम हुने गर्दछ। अहिले विश्व कला वजारमा उत्तरआधुनिक कलामा देखा परेको यो इन्स्टलेसन कलाको परिकल्पना हाम्रा पुर्खाले उहिले नै लगाइसकेका रहेछन् भन्ने थाहा लाग्छ।

यस्ता अनगन्ती पूजाआज गर्ने प्रचलन छ। उदाहरणका लागि अष्ठचिरञ्जीवी वा रुद्री–पूजाको सानो सन्दर्भ जोडौँ। जहाँ अनेकानेक देवी देवतालाई कुनै अर्कै वस्तुले थोरै समयका लागि विम्बका रूपमा सिर्जना गर्ने गरिन्छ, यसलाई भगवान आह्वान गर्ने भनिन्छ। यसबेला बोलाइएका देवीदेवताहरू साक्षत् रूपमा प्रकट हुन्छन् भन्ने विश्वास र जनआस्था छ। अनि कार्यक्रम सकिइसकेपछि यसलाई नियमबद्ध रूपमै विधिवत् बिदा गर्ने गरी भत्काउने प्रचलन छ। भुइँमा षटकोण बनाउनेदेखि लिएर, कुशको प्रयोग अनि अधिकांश अमूर्त वस्तुलाई विम्ब बनाइएका हुन्छन्। विम्बका पनि विम्ब बनेका यस्ता देवीदेवता केही क्षण आउँछन् अनि पछि आआफ्ना वासस्थानमा जान्छन् भन्ने जनविश्वास छ। यी आदि इत्यादि देवीदेवताका प्रतीकात्मक विम्बहरू नै हुन्। एकक्षणका लागि बनेका यस्ता विम्ब जजमानको पूर्ण आस्था, भक्तिसमेत रहेको हुन्छ। यो विम्बको पनि अर्को प्रतीकात्मक विम्ब हो। पूजापाठ गर्दा कलाका कैयौँ प्रतीकात्मक विम्बहरू अर्थ बोकेर संस्कारको प्रक्रियामा बस्दा यसको मानक उच्च स्तरमा हुने गर्दछ अनि यसमाथिको आम समुदायको



आस्था अझ बलियो भएर देखा पर्छ। यसर्थ पनि कलाको इतिहासमा यसको भौतिक स्वरूप अनि प्रक्रिया स्पष्ट रूपमा देखा पर्ने गरेको छ। धार्मिक वा राजनीतिक, सामाजिक, इतिहासमा यस्ता पचासौँ उदाहरण लिपिबद्ध गरिएका छन्। साहित्यको गद्य, पद्यमा चाहिँ भाषासँग खेल्ने हुनाले शब्दलाई नै प्रतीकात्मक विम्ब बनाएर प्रयोग गर्ने प्रचलन छ।

अझ रमाइलो कुरा त सामाजिक रूपमा विकास भएका उखानको टुक्कामा, लोक गाथामा वा विशेष गरेर सामाजिक रूपमा मान्यतागत कथनहरूमा (जस्तै बिरालोले बाटो काट्दा नराम्रो हुन्छ) रहेका यस्ता पशुपन्छीलाई प्रतीकात्मक विम्बका रूपमा लिइ अनेकौँ कलाको निर्माण भएको इतिहास छ। समाजका कुनै रीतिरिवाजका लागि नभएर मूलतः आफ्नै भाव–अभिव्यञ्जनाका लागि पनि कलाकारहरूले यस्ता विम्बहरूलाई किसिम किसिमका संयोजन गरी चित्रहरू बनाइएको देखिन्छ। एक कलाविद् कागलाई (जुन समाजमा मृत्युको प्रतिमा रहेको भन्ने गरिन्छ) चित्रपटको मुख्य विषय बनाएर अनेकौँ कालखण्डमा बनाइएको अनेकौँ चित्रको बयान गरेका छन्। यस्तै आखाँको, ऐनाको, क्यान्डलको, म्युजिकल इन्स्ट्रुमेन्टको, सूर्य, चन्द्रमा वा जनवारको अनेकौँ प्रतीक अनेक अर्थको साथ कलाकारले प्रयोग गरेका छन्। यसको आफ्नै एक अलग इतिहास छ। यस्ता प्रयोग प्रचलन यस्तो रूपमा बढेर गयो कि अहिले बन्ने गरेको कुनै पनि चित्रमा यस्ता प्रतीकात्मक विम्बहरूलाई समेटिएकै हुन्छ।

## प्रतीक र विम्बको गहिराइ

भावकलाई जत्ति मात्रामा चित्रमा प्रयोग भएको कमलको फूलको चित्रणको अर्थ स्पष्ट हुन्छ। थाहा हुन्छ अर्थात् ज्ञान हुन्छ। यो परिकल्पना कसको मथिङ्गलमा कहाँबाट आयो थाहा लाग्छ, कुन कलाकारले कसरी यो परिकल्पनालाई सादृश्य बनायो। यसबारे जब उनको शिल्प दक्षताको मूल्याङ्कन हुन्छ। यी सबको बारेमा जति जान्न सकियो त्यत्ति नै यो चित्रको, महत्त्व यसको गहनता, यसको सामाजिक, आर्थिक मूल्य–मान्यता उत्कर्षमा रहेको थाहा लाग्छ। धर्मका यी देवीमाथि अझ भक्ति भाव बढ्ने, भगवान् समेतलाई स्पष्ट बुझ्ने प्रक्रिया रहन्छ। अनि यो कलामा रहेका वास्तविक एस्थेटिक्सको (सौन्दर्यताको) नजिक पुगेको हामीलाई आभास हुन्छ। यही एस्थेटिक्स जजमेन्टको संस्कार बस्न सक्यो भने मानव, समाज अनि राष्ट्र स्वयं पनि अब्बल दर्जामा रहेको यसले प्रत्याभूति दिन्छ।

## शब्दकोशको व्याख्या

नेपाली बृहत् शब्दकोशका अनुसार प्रतीक– भनेको समान गुणका आधारमा दृश्य वा अदृश्य अन्य कुनै वस्तुको कल्पना गरी प्रतिविम्बका रूपमा राखिएको वस्तु वा चिनु हो। अन्य कुनै वस्तुको भावनात्मकता वा प्रतिनिधित्वका रूपमा व्यवहार चलाइने कुनै अर्को पदार्थ, चिह्नः लक्षण निसाना, चित्र, मूर्ति, प्रतिमूर्ति प्रतिमा आदि पनि हो। कुनै एउटा मन्त्र, श्लोक वाक्य आदिको पूरा अर्थबोध गराउन राखिएको कुनै अर्को पद अक्षर आदि पनि हो। विम्ब भनेको चाहिँ ऐना हो। पानी आदिमा देखिने छायाँका रूप, छायामण्डल, प्रतिविम्ब, प्रतिमूर्ति प्रतिमा, कुनै कुराको आभास वा झलक हो।

धेरै ठाउँमा यसको अर्थ र परिभाषा अलग अलग ढङ्गले भएको पनि देखिन्छ। जस्तै अर्के शब्दकोशमा चाहिँ मार्क क्यारेक्टरका रूपमा यसलाई परिभाषित गरिएको छ। अनि यसले वस्तु, कार्य र प्रक्रियालाई समान रूपले प्रतिनिधित्व गर्छ भनिएको छ। यो एउटा यस्तो वस्तुका रूपमा आफूलाई उभ्याउँछ जसले मटेरियलाइज्ड वस्तुको लागि अमूर्त जस्तो देखिने वस्तुको रूपमा देखा पर्दछ।

यसैलाई अझ सजिलो गरी बुझ्न अर्को कथन आएको छ जसले भन्छ, यो प्रतीक सजिलै पहिचान गर्न सकिने ठोस (सोलिड) वस्तुका रूपमा देखा पर्दछ जनावर, रुखपात आदि यसका रूपहरू हुन्। जुन चाहिँ केका लागि पनि भनिन्छ भने जुन कुरा भन्न अन्य कुनै वस्तु यसो हुन वा गर्न सक्षम भइरहेको थिएन। अर्को अझ

गहन पक्ष भनेको कला आफैँमा अभिव्यक्त गर्ने यस्तो माध्यम हो जुन साधारण शब्दले बयान गर्न सक्दैन। प्रतीकका रूपमा कला एउटा सोलिड, सजिलै पहिचान हुन सक्ने वस्तुका रूपमा जस्तो कि जनावर, प्लान्ट वा अन्य वस्तुहरू मूर्ति वा चित्रमै पनि सहजै देखाउन सकिन्न। यसका लागि यस्तै विशेष प्रकारको प्रतीक र विम्बको सिर्जना गरिन्छ।

## ऐतिहासिक आरोह अवरोह

पाषण युगदेखि आफ्नो एक अलग्ग अस्तित्व बोक्दै आएका यी कलागत विम्बहरू आजको दिनसम्म पनि अनेकौँ ढङ्गबाट सिर्जना भइरहेका छन्। गुफा युगमा गुफाका भित्तामा कारकुरमा बनेका साधारण रेखाचित्रहरू यस बखत सिकारको सहयोगका लागि प्रतीकात्मक-विम्ब थियो। सन्देश पठाउने खास अभिप्रायले जनवारका चित्रहरू कोरिन्थ्यो। जसलाई अर्को व्यक्तिले बुझी सँगै मिलेर सिकार खेल्न जान्थे। यसबेला यो कलामा प्रतीकात्मक विम्ब समूहको वलका रूपमा देखा परेको थियो। यसबेला यो विम्बलाई बोल नफुटेका मान्छेका लागि (यसबेला भाषा थिएन।

मान्छे पनि मान्छे जस्तो भइसकेका थिएनन्। एक प्रकारको जनवार जस्तो) भाषा र सञ्चारका अन्य कुनै माध्यम नहुँदा यही कलागत विम्बहरू शक्तिशाली सञ्चारका माध्यम थिए। आफूबिच मिलेर बलियो हुने योजनाको बलियो आधार बनेको यो प्रतीकात्मक विम्ब आज पनि कलाविद्हरू अनेकौँ कोणबाट यसलाई व्याख्या विश्लेषण गर्ने गर्छन्। यसै बेला दह्रो किसिमबाट प्रतीकात्मक विम्ब बोकेका भित्तेचित्रहरू पछि आफैँ अक्षरमा परिणत भएपछि पनि साहित्यमा अर्कै प्रकारले विम्ब नै बोकेर आएको देखिन्छ।

एक जना अमूक विद्वान्ले उठाएको प्रसङ्ग हेरौँ न, उनी भन्छन् कलामा कुन आइटमले कसरी प्रतीकको प्रतिनिधित्व गर्दछ ? प्रतीक वस्तुको (सब्जेक्ट) रूपमा वा क्रियाको (एक्सन) वा वस्तु वा क्रियामाथि रहेको प्याट्रनमा वा रङमा रेखामा कहाँ हुन्छ ? यसलाई कसरी हेर्ने हो ? सम्भवतः यसको उत्तर कहीँ, कोहीसँग छैन। यो दुविधा हुँदा हुँदै पनि कलाविद्हरूले कला आफैँको वा आफूभित्र निहित रहेको प्रतीक र विम्बहरूलाई आआफ्नै ढङ्गले उत्खनन गर्ने काम भने छोडेका छैनन्।

समयसँगै परिवर्तन भइरहने कलाको शैली, प्रवृत्तिहरू कहिलेकाहीँ बिनाअर्थ पनि परिवर्तन भइरहन्छन्। विषयवस्तुदेखि रङ वा रेखाहरू पनि परिवर्तन भइरहन्छन्। यस बेला चाहिँ यी विषयवस्तु वा यसका प्रक्रिया रङ र रेखा कुनै पनि प्रतीकात्मक विम्बका रूपमा देखा परेका होइनन्। थाहा पाएर नपाएर वा गुरुका आज्ञा पालन गर्न यस्ता रङहरू प्रयोग पनि गरिएका हुन्छन्। रूपहरू अनि मोटिफहरू पनि राखिएका हुन्छन्। जसलाई अलि गहिरेर बुझ्न खोजियो भने कहिलेकाँही कलाकार आफैँसँग यसको उत्तर हुँदैन। ऊ मात्र अनुसरण गरिरहेको हुन्छ। यस्तो बेलामा प्रयोग भएका यी रूप, रङहरू निश्चय पनि प्रतीकात्मक विम्ब होइनन्। यसर्थ पनि कलामा प्रतीकात्मक विम्बको सीमा, परिभाषालाई खोट्याउन स्वाभावतः गाह्रो कुरा हो। हरेक जस्तो कलाकारका आआफ्नै विशेषता अनि दर्शनका पछाडि पनि यसलाई कलात्मक बनाउने तौरतरिका अलग अलग हुने गर्दछ। आजको दिनमा त हामीमा यसलाई केलाउने चेत आएको छैन भने त्यसबेला त यसतर्फ कसैको ध्यान कसरी जान्छ र ? यस्ता पुराना चित्र वा मूर्ति थोरै आइकोनोग्राफीका कुराबाहेक अरू केही कुरा हुन नसकेको पनि सत्य नै हो। यी आदि कुराले गर्दा पनि प्रतीक र विम्बलाई अलग्याउन थोरै अन्योल सिर्जना गर्ने गरेको छ।

## कलामा अन्तर्निहित सदृश्य-भाषा

कलामा सदृश्य-भाषा हुन्छ। भिजुयल भनेको आँखाले प्रत्यक्ष पढ्ने भाषा हो तर शब्दले भने झैँ यसलाई व्याख्या गर्न सकिँदैन। यसको प्रकृति भनेको आमभावकले सीधै महसुस गर्ने हुन्छ। मनमस्तिष्कले कलाको अर्थ, आशय अनि प्रभावलाई भावकले तत्क्षण आत्मसात् गर्दछन्। बाह्य चक्षु, मन, मस्तिष्कको समन्वयतात्मक भूमिकाले कलाको गुण अवगुणलाई ग्रहण गर्छ। अनि भावक आनन्द विभोर हुन्छन् वा पीडालाई महसुस गर्छन् वा रोमाञ्चित हुन्छन्। सीधा अर्थमा भन्ने हो भनेदेखि प्रतीक र विम्बले मानवको भित्री भागलाई कोट्याउँदा यसो भएको हो। तैपनि खोजीको विषय चाहिँ छँदै छ। यसो हुनु यहाँ कुनै न कुनै प्रतीकको भूमिका हुन्छ त ? सायद चित्त बुझ्ने गरी भन्न यसको उत्तर कहीँकतै छैन। कुनै विम्ब अनि प्रतीकलाई (सम्भवतः कुनै सब्जेक्ट माथि अब्जेक्टको उपस्थिति अनि एक्सन मिलेर कथा बन्ने प्रक्रियामा रहन्छ) ...? कथामा बुनेर सम्झँदा भावक आनन्दित हुनु, दर्दको महसुस हुनु शाश्वत सत्य हो। यो प्रक्रियामा कहीँ न कहीँ विम्बको भूमिका त हुन्छ नै। कलामा प्रतीक वा बिम्ब बन्न सकेन भने कथा पनि बन्न सक्दैन। कथा नभएपछि भावकले कसरी यसको प्रभावलाई ग्रहण गर्छ त ? जसले गर्दा कुनै पनि कलालाई पढ्न, बुझ्न भावकले आफ्नै कलामाथिको समझलाई (आर्टिस्टिक अन्डरस्टाडिङ) बाहिर ल्याउँछ, अनि बाहिर चक्षुले भनिदिए अनुसार उनले कलालाई अर्थ लगाउने हुन्छ। यसैलाई अलि सजिलो पार्न सम्भवतः देखिने गरी कलाका प्रतीक र विम्बहरूको प्रचलन तीव्र रूपमा विकास भयो। ■

**मल्ल वरिष्ठ कला समीक्षक तथा आधुनिक कलाकार हुन्।**

कविता

# लकडाउन



◆ डा. बेन्जु शर्मा

हाँस्दा दिल फुकाएर
निर्विघ्न हाँस्न नहुने
रुँदा दर्द दबाएर
धुँक्काको आवाजलाई थुनेर
मुखमा कपडा कोच्नुपर्ने
आँसु बहाउन पनि
अँध्यारो कुनो खोज्नुपर्ने
हिँड्दा पाउ दबाउनुपर्ने
बोल्दा सास मात्र चल्नुपर्ने
सवाल, जवाफ गर्नै नमिल्ने
हरेक प्रश्न चिह्नलाई
पूर्ण विराम लगाउनुपर्ने
तर्कलाई तरबारले काट्नुपर्ने
बाङ्गो रुखलाई सोभ्फो भन्नुपर्ने
'हो' लाई 'होइन' भन्न नहुने
उत्सर्गमा पुगेको उत्सुकतालाई
किल्किलेमै ताला मार्नुपर्ने
घुम्टो र बुर्काको पर्खालको
लक्ष्मण रेखाभित्र
हतकडी र नेलमा जकडिनुपर्ने
अनेकौँ गाली र गलौजको प्रहारले पनि
कान थुन्न नपाइने
क्षतविक्षत हुँदै कुटिँदा पनि
'ऐया' भन्न नमिल्ने
बाबुको तगारोमा थुनिएर
लोग्नेको पत्रैपिच्छेका ढोकाहरूमा
ताला मारिएर
कोठाभित्र पनि सन्दुकलो ढप्काएर
बाहिरको उज्यालो कस्तो हुन्छ ?
सूर्य कसरी उदाउँदै अस्ताउँछ ?
फूल कसरी मुस्कुराउँछ ?
समुद्रको छाल छुनु त कहाँ हो कहाँ
बागमतीको पानीमा
डुबुल्की मार्न नपाएका
अनेक जन्जिर र हतकडीको
लकडाउनमा थुनिएका
परतन्त्र रातहरू, दिनहरू
इच्छाहरू, आकाङ्क्षाहरू
बाबुको, लोग्नेको, छोराको, नातिको
परतन्त्रताका साँगुरा, अँध्यारा
हावाबिनाका गल्लीहरूमा
सम्पूर्ण जीवन नै लकडाउनमा बिताएका
अबोध, निरीह, पराजित
बज्यै, आमा र हामीहरू
लकडाउन कस्तो हुँदारहेछ ?
परतन्त्रता कति भयावह हुँदोरहेछ ?
स्वतन्त्रताको 'स' पनि
उच्चारण गर्न नपाएका
अधिनायकवादी, विभेदकारी
सामाजिक कानुनमा
जीवन बिताएका हामीलाई त
केही फरक परेको छैन
केही भएकै छैन
देख्यौ ?
पुरुषत्वको हाँक दिनेहरू हो
अनुभूत गर
स्वतन्त्रता कति प्यारो हुँदोरहेछ
परतन्त्रता कति बाधक
कति घातक हुँदोरहेछ
हामी त घात र प्रतिघातले
छरपस्ट छटपटीहरूले
बुर्का र घुम्टीहरूले
लकडाउन नै लकडाउनले
ढुङ्गा बनाइएका अहिल्या
हामीलाई त यो लकडाउनले
केही लछार्दैन, केही पछार्दैन
हामीले भोग्दै आएको दिनचर्या
युगौँ युगदेखिको लकडाउन
सम्पूर्ण जीवन नै लकडाउन
सम्पूर्ण युग नै लकडाउन
धर्मका नाममा लकडाउनमा परेका
यी अधार्मिक बन्धनका कोरोना र कानुनका
कुनै पनि भाइरसले
भताभुङ्ग जीवन हुने छैन
प्रतिरोधात्मक क्षमताका बलवान खोप लिएर
हाम्रा नयाँ पुस्ताका
स्वतन्त्र सत्व र अस्तित्व प्राप्तलाई
अब कुनै लकडाउनले लडाउन सक्ने छैन। ■

कविता

# बाढी र कमल सदा



◆ उषा शेरचन

हरेक वर्ष मनसुन
काला काला बादलका
दलहरू बोकेर
हामीमाथि खनिन आउँछ
बाढीको कहर बनेर
हामीमाथि उर्लिन आउँछ
अनि
हाम्रा तमाम खुसीहरू
हाम्रा तमाम सपनाहरू
हाम्रा तमाम रहरहरू
सँगसँगै
हाम्रा घरबारहरू
हाम्रा परिवारहरू
हाम्रा गाउँलेहरू
हाम्रा भविष्यहरू
सबैसबैलाई बगाएर लैजान्छ ।

सरल रेखामा
जिन्दगीलाई हिँडाउने
जतिसुकै प्रयत्न गर्दा पनि
अहँ कहिल्यै
हिँडाउन सकिएन

सधैँ सधैँ हात पर्‍यो
बक्ररेखाहरू मात्रै
सधैँ सधैँ झेल्नु पर्‍यो
अभाव र पीडा मात्रै
सधैँ सधैँ सहनु पर्‍यो
भोक र शोक मात्रै !



कहिल्यै सकेनौँ
जिन्दगीलाई
आफ्नै हिसाबले चलाउन
कहिल्यै पाएनौँ
जिन्दगीलाई
आफ्नै हिसाबले नचाउनै !
जीवनको उत्तरार्धमा
पर्दा खस्नु र घाम डुब्नु
स्वाभाविक प्रक्रिया नै हुन्
तर
हाम्रा गाउँघरमा त
जीवनको पूर्वार्धमै
पर्दा खस्न थाल्छ
घाम डुब्छ थाल्छ
अनि अभागी हामी
आफ्नै मुटु मारेर
आफ्नै मुटुलाई ढुङ्गा बनाएर
बाढीले निलेर
दिवङ्गत भएका
कमल सदा जस्ता
आफ्ना मुटुका टुक्राहरूलाई
त्यही बाढीमै समर्पित गर्न
अभिशप्त हुनु पर्छ !
चाहे चिसो याम होस् वा शीतलहरी
चाहे चर्को घाम होस् वा बाढी
विपत्को सामना पनि
हामीले नै गर्नु पर्छ
सिमानाको सुरक्षामा पनि
हामी नै मर्नु पर्छ
अनि थप चेपुवामा पनि
हामी नै पर्नु पर्छ !

हाम्रा लागि भलै ईश्वर नहोला
हाम्रा लागि भलै सरकार नहोला ।
र, पनि आखिर
यही देशकै नागरिक हौँ हामी !
नेपाल आमाकै सन्तति हौँ हामी !! ▪

# स्वर्णिम इतिहासका पाना पानामा



◆ रविमान लमजेल

शासक तिमीले
देशको इतिहास
लुकाउनु हुँदैन थियो
विजय हासिल गर्ने योद्धाहरूको
पराक्रम र बलिदानको रगतमा
नुनचुक छर्कन हुँदैन थियो
देशभक्तिको उच्च स्वाभिमानले
प्रेरित भएर
आफ्नो ज्यानलाई
हत्केलामा राखेर
घुतुमुने छोरा र छोरीलाई
भर्भराउँदो जवानी भरिएकी श्रीमतीलाई
र डाँडाका जून जस्ता भइसकेका बाबु र आमालाई
असुरक्षित अवस्थामा छोडेर घरमा
वीर सपुतहरू उत्साह र दृढताको
धरहरा उभ्याएर आफूभित्र
तुफानी वेगमा दौडेका थिए
समरभूमिमा
कम्मरमा खुकुरी भिरेर
चियाउँदै शत्रुका किल्लाहरू
कहिले गन्जु लामाका रूपमा
कहिले गजे घलेका रूपमा
कहिले रामबहादुर पेधाको अवतारमा

निराश भएनन् उनीहरू
नाङ्गो खुकुरी नचाउँदै सूर्य किरणसँगै
कहिले हाम फालेर होमिए– युद्ध मैदानमा
कहिले सिंह झैँ गर्जँदै पसे– शत्रुको घेरामा
र मुला कटाइ गर्दै
समाप्त पारे विपक्षीहरूलाई
अनि कुर्ले उत्साहको वेगसाथ
पखाले खुँडा र खुकुरीको रगत
टिस्टाको पानीमा
अनि फर्के आफ्नो देशमा
विजयको माला पहिरेर घाँटीमा
स्यावासी थाप्न सम्राट्बाट
यस्ता वीरहरूलाई स्यावासी दिने
र हर्ष बढाइँ गर्ने कुरा
सम्राट्ले गर्दै गरेन
वीरहरूको सहास र स्वाभिमानको
लेखाजोखा गर्दै गरेन
आफ्नो सत्तालाई
आफैँले गरेको विजय ठानेर
नाक ठड्यायो
र लेख्न लगायो प्रशस्ति
त्यसैले इतिहास
अपाङ्ग हुन गयो
स्तुत्य घटना ढाकछोप गरियो
वीरहरूको त्यागमय भावनाहरूलाई
इतिहासमा लेख्ने काम
अब हामीबाट हुन्छ
इतिहासका पाना पानामा
वीरहरूको अमर गाथा भरिन्छ
अनि मात्र राष्ट्रको स्वाभिमान
सूर्य जस्तै उज्यालोले भरिन्छ। ■

**इलाम**



# एमोलिया पोपेभिचप्रति



◆ रमेश तूफान

तिम्रो भावनाले मेरो हृदय छोयो
एमोलिया
तिम्रा क्रन्दनपूर्ण गीतले
मेरो आँखा रसाए
मलाई लाग्छ
पुटिन र त्यसका मिलेसियाले
तिम्रो अन्तस्क्रन्दनलाई बुझ्न सक्दैनन्
एमोलिया पेपोभिच
तिम्रो गीत जीवन्त छन्
यो एउटा यथार्थ हो
२
र युद्धका बेला होइन,
होइन आक्रमणका बेला
बङ्करमा जन्मिएका तिमी जस्तै
असङ्ख्य लालाबालाको पीडा हो
इटलीका ती स्वतन्त्र मैदान
जहाँबाट
तिमी आफ्ना हजुरबुवा र हजुरआमालाई
सम्झिरहेको देख्दा
मलाई पनि तिम्रो अनुभूतिले रुवायो
म महसुस गर्न सक्छु
युक्रेनका मैदानबाट
असहाय निरीह असङ्ख्य साना नानी
३
भगाभागमा व्यस्त छन्
हो यस्तो बेला
सुरिलो आवाज
तिनका लागि मलमको काम गर्न सक्छ
एमोलिया, निश्चय पनि
४
तिम्रो भावनाप्रति न्याय हुने छ
तिमी धैर्य गर
तिम्रो भूमिबाट ती आततायीहरू अवश्य फर्कने छन् ।

(नौ वर्षीय युक्रेनी बालिका एमेलिया पोपेभिचले रोममा गाएको शान्ति गीत आई ड् माई लाइफ सुनेपछि । उनी त्यतिबेला युद्धबाट त्रसित भएर रोम गएकी थिइन् ।) ■

# गजल



◆ राजेन्द्र चोथाले

तिम्रो बानी चिनेपछि तिम्रो छलको के अर्थ भो
मूर्तिमा ढुकढुकी खोज्ने म पागलको के अर्थ भो

पवित्र छु, शुद्ध छु म, चोखो छु म भन्दाभन्दै
हिलोसँगै मिसिई बग्ने गङ्गाजलको के अर्थ भो

हेर्दा कालो घना बन्दै घाम जून छेके पनि
वर्षा ल्याई नबर्सिने त्यो बादलको के अर्थ भो

भोको पेट लिई भोकै छटपटाउँदै मर्नेलाई
मृत्युपछि पिण्ड बन्ने त्यो चामलको के अर्थ भो

जब टुट्यो विश्वास तिम्रो भित्रैदेखि गल्यो यो मन
अब तिमीले बजाउने मादलको के अर्थ भो । ■

कविता

# मेरो छायाले मलाई पछ्याइरहेछ ...



◆ मोहन दुवाल

ढाट्न नजानेकैले मेरो छाया
मलाई पछ्याइरहन्छ
तल/माथि जहाँ गए पनि
कहिलेकाहीँ म तर्सिन्छु
मेरो छाया देखेर
तर ऊ कहिले तर्किएको
र फर्किएको छैन
यो उनको सदासयता हो
म सधैँ हेरिरहन्छु
म उनी पछि लागेको हेरिरहन्छु ।
०० 
मलाई लाग्छ; म भएर नै छाया भएको हुनु पर्छ
मलाई थाहा छ; छाया रहेकैले मेरो अस्तित्व रहेको हो । ▪
००



## मुक्तक



◆ सुविद्यादेवी सिग्देल

खान पाए कुकुर, बिरालो, बाँदर पनि जुट्छन्
भए जति नङ्ग्रा मिलाई कमजोरलाई लुट्छन्
दिगो विकास गर्न सके पो देश उँभो लाग्छ
भागबन्डा मिलाउन नसके आफैँ आफैँ फुट्छन्

सिप र बुद्धिले पाएन काम गर्ने ठाउँ
दुःखले युवा पलायन, रित्तो भयो गाउँ
कहिले टुङ्गिन्छ देशमा भाषण र नारा
मिलिजुली खानेहरू तिनैको छ नाउँ

जडीबुटी वन जङ्गलले गाउँबस्ती ढाकेका छन्
पौरखी र परिश्रमी युवा जमात डाकेका छन्
कस्तुरी मृग झैँ बास्ना खोज्दै किन भौँतारिन्छौ ?
जिजुबाजे तिम्रै निम्ति देवीदेवता भाकेका छन्

देशका लागि केही त, गर्न बाँकी छ
गहिरो सागर अझै तर्न बाँकी छ
सबै काम सके जस्तो लाग्छ कहिले त
जीवनमा ठुलो काम त मर्न बाँकी छ

होनहार सन्तानहरू विदेशीका दास
बन्धक होइन राजीनामै गरे सन्तान पास
यिनकै रगत पसिनाले भ्रष्टाचारी पुस्टिए
देशले पनि यिनैबाट गर्छ धेरै आस । ▪

कलङ्की, काठमाडौँ

# सकसकी



◆ वियोगी बुढाथोकी

उहिलेको ऐतिहासिक, सुन्दर र सफा सहर
काठमाडौँको नयाँ सडक
नयाँ सडकमा ठिङ्ग उभिएको
बुढो पीपलको रुख
केही दशक अगाडिसम्म
राजनीतिले थचक्क थिचेका कारण
पीपलको बोटप्रतिको सन्देश, भरोसाको केन्द्रबिन्दु
घरदेशदेखि परदेशसम्मका सत्य, तथ्य र केही असत्य
राष्ट्रियदेखि अन्तर्राष्ट्रिय समाचार बोकेर उभिएको भेटिन्थ्यो ।

बुढानीलकण्ठ,
सतुङ्गललगायत छिमेकी गाउँ अर्थात् काँठबाट हुर्दुराउँदै
समाचारका भोका मनहरू
लखरलखर हात्तीछाप चप्पल पड्काउँदै पुग्थे
र बासी हुन बाँकी सन्देश बोकेर
गाउँ फर्किन्थे
गाउँको चौतारीमा भेला भएका
सुन्न इच्छुक, लालसी मनहरूको अभिलाषाभित्र पसेर
सकसकीको पत्रपत्रिकाको वर्षा कुर्ने
मानौँ खडेरीले पटपटी फुटेका सुर्का मनहरू भिज्थे ।

प्रविधिको विकासले थिचेर विनाश ल्यायो कि
प्रगतिको ढोका खोल्यो
नयाँ सडकको पीपलको बोटले
लोकतन्त्रको नारा घन्काएको दिन सम्झिरहेछ

उसको सम्झना गर्नेहरू कता गए, हराए
घरी वीर अस्पताल घरी धरधरातर्फ नियालेर
न्यास्रिएर निसासिएको कुरा फलाक्छ, कोही सुन्दैन ।

देखिन्छन्
केही थोत्रा जुत्ता टल्काउने मैला मनहरू
चिउँडोमा हात राखेर गमक्क परेकै छन्
भेटिन्छन्
हतारिएका जात्रुहरू ।

सफल राजनीतिले अघाएकाको अनुहार देखेर
आफू जति रोगाए पनि
अतिशय भोकाए पनि
वा शोक व्यक्त गरे तापनि
कठै भन्नेहरूको अभावमा
लाग्छ आफू स्वयंले असफलता भोगेको दुःखेसो
पोख्ने
अन्तिम इच्छा स्वरूप
गोरखापत्रको माध्यमबाट देशभर समाचार बनेर पुग्न
त्यतै आँखा तन्काइरहेको सुन्छु
के यो समाचार साँचो हो सम्पादक महोदय ! ■

**शिवपुरी सन्देश निवास हात्तीगौँडा**



कविता

# हामी र पृथ्वी



◆ प्रज्वल अधिकारी

आमाले पिस्दै गरेको
जाँतोमाथि कमिला हिँडे जसरी
घुमिरहेको पृथ्वीको जाँतोमाथि
हिँडिरहेछौँ
उडिरहेछौँ
पौडिरहेछौँ
घस्रिरहेछौँ, हामी

हिँडिरहेको मान्छे–
उड्ने रहर गर्न सक्छ
पौडिन आतुर हुन पनि सक्छ

मान्छे–
जब जङ्गल पस्छ, जङ्गल आफ्नो बनाउँछ
जङ्गलबाट भागेर उसको बस्तीमा आयो भने कोही
सके चपाइदिन्छ, नसके धपाइदिन्छ

बाटो बिराएर कुनै दिन आयो भने हात्ती
ऊ हात्तीलाई बौलाह भनिदिन्छ
स्याँ स्याँ गर्दै आएको मृगको पाठोलाई
ऊ आफ्नो सर्वाधिक प्रिय भोजन बनाइदिन्छ
मेवाको रुखमा आएर बसेको सुँगालाई
जालमा पार्छ र आफ्नो भाषा सिकाउँछ

बाघ मार्न निस्केको मान्छेलाई
कुनै दिन बाघले मार्‍यो भने
ऊ आफू बाँच्न पाउने एमनेस्टी उर्दी गर्छ
सर्प मार्न हिँडेको मान्छेलाई
सर्पले जित्यो भने युद्धमा
ऊ सर्पलाई संसारबाट हटाउन अभियान चलाउँछ

घुमिरहेछ पृथ्वी– वर्षौंदेखि
घुमाइरहेछ कसैले– वर्षौंदेखि
ठ्याक्कै आमाले जाँतो घुमाए जसरी

को हो त्यो
घुमिरहेको पृथ्वीनजिकै बसेर
जानी नजानी हातो समाइरहेको
ठ्याक्कै आमाले समाएको जाँतोको हातो समाउन
झगडा गरिरहेको बच्चा जस्तो

अहो कस्तो जिद्दी बच्चा ! आमाको हात हटाएर उसले
के के घान हाल्दै छ
बच्चा भने पनि ऊ पनि मान्छे नै त हो
हेर त
उसले आफैँलाई घान हालिरहेछ ! ■

# गीत



◆ प्रिती कौर

यता पनि उता पनि ढाट्यौ तिमीले
एउटै मुटु चारैतिर साट्यौ तिमीले

राख्यौ सधैँ अँधेरीमा मिठो बोलेर,
जब जब बोल्ने गर्थ्यौ दिलै खोलेर
धोकाको नै जाली डोरी बाट्यौ तिमीले,
यता पनि उता पनि ढाँट्यौ तिमीले

लाग्दैनथ्यो कोही माया गर्ने तिमीभन्दा
छैन ठान्थेँ मुटु ओछ्याई मर्ने तिमीभन्दा
विश्वासघातको करौँतीले काट्यौ तिमीले
यता पनि उता पनि ढाँट्यौ तिमीले । ■

कविता

# निरुत्तर



◆ शिव पलाँस

म जङ्गलको ढुङ्गो थिएँ
मान्छेहरूले  बोकेर सहर ल्याए
कालिगडहरूले हथौडाले हान्दै गए
छिनोले खोप्दै गए
खै के आकारमा ढाल्न खोजिरहेका थिए

बाघको सालिक
मृगको सालिक
सहीदको प्रतिमा
मन्दिरको मूर्ति

वा अन्य केही
मैले दुख्यो भनिनँ
मैले आँशु बगाइनँ
सहनु पर्छ भनेर चुपचाप सहेँ

सुनेको थिएँ
घन र छिनोको प्रहार खाएको ढुङ्गोले
देउता बन्ने सौभाग्य पाउँछ
वा अन्य केही जीवन्त आकृति

छिनो बज्रियो
घन बज्रियो
जोडतोडले बज्रियो
मेरो शरीरभरि बज्रियो
सहन सक्दासम्म सहेँ
सहनै नसकेपछि



अन्ततः  म टुक्रा टुक्रा भएँ !
ठुलो थिएँ सानो भएँ

सग्लो थिएँ टुक्राटुक्रा भएँ
बलियो थिएँ निर्बल भएँ

न जङ्गलमा रहेँ
न सहरको भएँ
न पहिले झैँ निराकार रहेँ
न कुनै नयाँ आकार पाएँ

ए कालिगड
मलाई सालिक बन्नु पनि छैन
देउता बन्नु पनि  छैन
कुनै पहिचान खोज्नु पनि छैन
म ढुङ्गो थिएँ फेरि ढुङ्गै  मात्र बन्न चाहन्छु
के तिमी
मलाई पुरानै स्वरूपमा फर्काइदिन सक्छौ ?

कालिगडको गहमा सागर भरियो
ऊ निरुत्तर भयो
उसलाई भित्र कतै बेस्सरी दुख्यो
चामललाई पिठो बनाउन सकिन्छ
पिठोलाई चामल बनाउन सकिँदैन । ▪

**नर्थ क्यारोलाइना, अमेरिका**

# क्रिकेट



◆ कृसु क्षेत्री

तिमी र म क्रिकेट खेल्न
मैदानमा उत्रिएको दिन

टस जितेर
मैले ब्याटिङ रोजें
तिमीले फिल्डिङ

तिमी वार्म अप हुँदै गर्दा
मैले नै गरेको हुँ
ओपेनिङ

मैले ब्याटमा
अलिकति क्रिम दलेँ
र चिल्लो बनाएँ

कहिले क्रिजतर्फ
कहिले आकाशतर्फ
कहिले लेफ्टतर्फ त कहिले राइटतर्फ फर्काएर
गरिरहें ब्याटिङ

कहिले चौका हानें त कहिले छक्का
कहिले असिनपसिन दगुरेर
थपिरहें रनमाथि रन

तिमीले यदाकदा गऱ्यौ
फास्ट बलिङ
अनि स्पिन बलिङ

बल क्याच गर्न
असिनपसिन हुँदै
दौडिरह्यौ यताउता

बेला बेला
मेरो बल समात्न
विकेट किपर भएर पर्खिबस्यौ

शतक पूरा नहुँदै
तिमीबाट बोल्ड आउट भएँ म
र क्रिजबाट फर्किएँ पेभिलियनमा

हाम्रो अनुहारमा
उस्तै खुसी झल्केको थियो
तिमीले विकेट लिँदा
र म आउट हुँदा

हो त्यही दिन
अर्थात् बिहाकै पहिलो दिनदेखि
हामीले खेल्न सुरु गरेका थियौँ
टेस्ट म्याच सिरिज । ■



कविता

# साझा सपना देख्न सकिन्छ



◆ महानन्द ढकाल

महोदय
चर्को नबोल्नुहोस् ।
सुस्तरी बोले पनि सुनिन्छन् कुराहरू
विस्तारै बोले पनि बुझिन सक्छ भाषा
र प्रस्ट हुन सक्छ आशय

तपाईंको आवाजमा
किन मौलाइरहेछ चिड्चिडाहट ?

चर्को बोल्न
तपाईंकै अहम्ले सिकाएको हुनु पर्छ
तपाईंकै पद प्रतिष्ठाले उक्साएको हुनु पर्छ
दम्भ जन्माएको हुनु पर्छ तपाईंको शक्ति र सम्पर्कले

तपाईंलाई थाहा छ
अहम्को आयु धेरै हुँदैन
टिक्दैन लामो समय पद, प्रतिष्ठा र दम्भ
हुन त मान्छेको आयु नै कति पो हुन्छ र ?

सुन्नुभएकै होला
फलेको हाँगो निहुरिन्छ जहिल्यै
तर हजुर त फल्न नपाउँदै
झन् झन् ठडिँदै हुनुहुन्छ फूलेको बाँस झैँ ।

भुइँ हेर्न छोड्नुभयो हजुरले
झारपात देख्नु हुन्छ सबैलाई
झिँगा र भुसुना सम्झनु हुन्छ दुनियाँलाई
कतै तपाईंको चस्मामा दोष त छैन ?

कहाँ हरायो
तपाईंको मह जस्तो महिमा ?
सुन जस्ता सपना कहाँ छुटे ?
गुराँस बन्ने चाहना पलास बनेर फूलेदेखि

माहुरीको हुल छोडी झिँगासँग डुलेदेखि
हजुरको रङ उडेको छ
छुटेको छ तपाईंको पैतालाबाट गन्तव्यको बाटो ।
कुहाएको छ दम्भले हजुरलाई
गन्हाउन थाल्नुभएको छ डुङडुङ्ती ।
हुन त झिँगा हिँड्ने बाटोमा कहाँ चल्छ र वासना ?

सगरमाथा चढे पनि झर्नु पर्छ फेदीतिर
लट्टाइ छोडेको चङ्गा पनि फर्किन्छ जमिनतिरै
पाकेको फल बस्दैन सधैँ हाँगो समाएर ।

आँखामा आक्रोश र मनमा कल्मस बोकेर
खै कहाँसम्म पुग्नु होला दम्भको यात्राले ?
कसरी बाँच्नु होला र संसार हँसाएर ?
समुद्रमाथि उड्ने काकाकुल पनि
पानी पिउन नपाई मर्छ घमण्डले
हुटिट्याउँले सगर थामेको सम्झे झैँ
संसार हाँक्ने ठेक्का हजुरको हुँदै होइन
तपाईंले बोकेको पदको पगरीले तपाईंलाई बोक्नै सक्दैन
तपाईंले उचालेको दम्भले तपाईंलाई उचाल्न सक्दैन ।

महोदय
चर्को नबोल्नुहोस् ।
सुस्तरी बोले पनि सुनिन्छन् कुराहरू
विस्तारै बोले पनि बुझिन सक्छ भाषा
र प्रस्ट हुन सक्छ आशय ।

बरु आउनुहोस्
हातमा हात मिलाऔँ
र मिलाऔँ पाइलामा पाइलाहरू
मुस्कुराएर बोल्न सकिन्छ नरम बोली
सुस्तरी बोले पनि सुनिन्छन् कुराहरू
बुझ्न सकिन्छ भाषा र प्रस्ट हुन सक्छ आशय

एउटै पृथ्वीको
एउटै समाजको
एउटै सहरमा बसेर
एउटै सपना देख्न सकिन्छ
सपना साझा बनाउन सकिन्छ ।

के तपाईंका कुनै सपनाहरू छैनन् ? ■

**कोहलपुर-१२, बाँके**

# कविता फुरेन



◆ त्रिलोचन आचार्य

चालें चलाएँ कति शब्दलाई
नाचें नचाएँ कति भावलाई
व्याख्यान भो विम्ब कुनै जुरेन
खै आज यौटा, कविता फुरेन ।

होस् छन्द भन्दै उपजाति छानें
लेघ्रो पसारीकन तान्नु तानें
छुने गरी भित्र बनें भनेन
लौ चित्तबुझ्दो, कविता बनेन ।

अभाव टारेन भरी भकारी
विचार ल्याएन बनी विचारी
हाँस्ने बटार्नेतिर यो गएन
पाना भरी यो, कविता रहेन ।

गर्नें थियो सागरको बखान
भर्नें थियो मङ्गलको उडान
सङ्केत झिल्को यसमा बलेन
भो शब्दखेती, कविता फलेन ।

न भोज भो भोजन क्यै भएन
न मोज भो रोज कुनै भएन
तारा छुने झन् तरिका भएन
नारा भयो यो, कविता भएन ।

खोलेन साझा परसम्म बाटो
टालेन देख्दा घरभित्र फाटो
लेख्यो छपायो मनमा पसेन
बाँच्ने नमर्ने, कविता बसेन ।

नाङ्गाहरूको मित यो बनेन
निर्धाहरूको हित यो भनेन
उल्लास भर्ने पथमा गएन
यो के भयो के, कविता भएन ।

लुट्दै छ देखेर सकेन रोक्न
ढाँट्दै छ रोकेर सकेन ठोक्न
बेला विचारेर नदी तरेन
हानें झटारो, कविता झरेन ।

हे भानु लक्ष्मी सम लेखनाथ
आऊ सिकाऊ म बनें अनाथ
भो व्यर्थ बाटो गतिलो परेन
यो लेखनीले, कविता झरेन ।

बेला गयो व्यर्थ बुझौं कि लाग्छ
नेतागिरी गर्न कुदौं कि लाग्छ
कि लाहुरे बन्न उतै म धाऊँ
साथीसँगी लौन सुझाव पाऊँ । ▪



कपन काठमाडौं

# म कविता लेखिरहेको छैन



◆ पुष्कर विष्ट

छैन कुनै इतिहासको गौरवगाथा
मैले लेख्दै गरेका शब्दहरूमा
न त छ सत्ता र शासकको महिमागान

हो, छँदै छैन तिमीले 'वाह' गर्ने
संस्कार, संस्कृतिको वर्णन र व्याख्या
किनकि म कविता लेखिरहेको छैन

कवितामा त आउनुपर्थ्यो
ढाका टोपी र दौरा सुरुवालको गन्ध
लाली गुराँसको सौन्दर्य
चन्द्रमा र सूर्यको सजीवता
हुनुपर्थ्यो कवितामा
अखण्ड राष्ट्रको जयजयकार
मैले लेख्दै गरेका शब्दहरूमा त्यस्तो केही छैन

अछुत बनाइएकाहरूका केही निःस्वास छन्
मान्छे हुन नपाएकाहरूको आक्रोश धुन छ
भोका सडकहरूको आँधी छ
सत्ताको बुटले कुल्चँदै गरेका आँखाहरू छन्

कवितामा त आउनुपर्थ्यो
सगरमाथाको उचाइ र गहिराइ
जूनको शीतलता र शीतको लज्जा
फूलहरूको मगमगाइ
अथवा हुनुपर्थ्यो प्रियसीका अधरको सुकोमलता
मैले लेख्दै गरेका शब्दहरूमा त्यस्तो केही छैन

पाञ्चालीहरूको विद्रोह छ
अहिल्याहरूको रोदन छ
केही अनुहारको च्यातिएको इतिहास छ
केही केही आवाजहरू छन्
-बम जस्ता
-बारुद जस्ता !

कवितामा हुनुपर्थ्यो समृद्धिको उत्सव गीत
कम्तीमा त हुनुपर्थ्यो- मेरो राष्ट्र- मेरो गौरव !

त्यस्तो केही छैन मैले लेख्दै गरेका शब्दमा
किनकि म कविता लेखिरहेको छैन । ▪

सल्यान, हाल युएई

# गजल



◆ जीवन निरौला

जिउँदै मानिस जल्ने, गर्छन् रे नि त प्यारमा
आकाशका जुनतारा, झर्छन् रे नि त प्यारमा

चिरेर छाती आफ्नै, साटिन्छ यहाँ मुटु
मुटु मुटु बसाइँ, सर्छन् रे नि त प्यारमा

खाइन्छ बाचा कसम, भाकेर देवी देउता
देउताले फूलपाती, छर्छन् रे नि त प्यारमा

ओढेर सिङ्गो आकाश, बिछ्याई धर्तीलाई
सँग सँगै जिउने सँगै, मर्छन् रे नि त प्यारमा

नासा नासामा माया, रगत रगतमा माया
झिकेर रगत सिउँदो, भर्छन् रे नि त प्यारमा । ▪

# म सानो छँदा



◆ पूर्ण वैद्य

सानो छँदा
रात पर्दै आएपछि आमाले
बत्ती बालेर अन्धकारसित जुध्न
मलाई सिकाएकी थिइन्

यो घाम
यो जून
आफैँ बलेर
अन्धकारसित जुधिरहेछन्
राति खेत, बगैँचामा
कति किराहरू त आफ्नै आधा जिउ बालेर
अन्धकारसित जुध्न सिकिरहेछन्
........
प्रत्येक रुखबिरुवा, घाँस, पात
चुपचाप घामका ताप बटुल्दै रहेछन्
अन्धकारसित जुध्न तम्सिरहेछ
तिनीहरूलाई उत्तेजनामा ल्याउनु छ
तापमा के हुँदैनन् र ?
रापमा के रहन्छ र ??
अन्धकारसित लड्न
वेगमयी झरनाको पानी पनि बल्न सक्छन्
कालो बादलमा बिजुली छुटेर निस्के जस्तै
अन्धकारसित भिड्न
यो ढुङ्गा, इँटाले पनि आगो बटुलिरहेछ
मात्र निरन्तर लागिरहनु पर्छ,
अन्धकारले टाउकोमा कुल्चेर आएको थाहा दिनु पर्छ
केवल तिनीहरूलाई तताउनु पर्छ
अन्धकारले कुल्चिँदै आएको चेत दिनु छ
........
म सानो छँदा
रात पर्दै आएपछि आमाले
बत्ती बालेर अन्धकारसित जुध्न
मलाई सिकाउनुभएको थियो

**अनुवाद : गगनदीप सर्व**

नेपालभाषाका कवि पूर्ण वैद्यले नेपाल भाषामा लेख्नुभएको कविताको नेपाली अनुवाद । ■

# दृष्टिभ्रम



◆ युवराज शर्मा

सम्मानित पदमा आसीन
सुन्दर आकृति
मिलेको जिउडाल
आधुनिक पहिरन
पोसाकमा सम्पन्नता
दुनियाँले देखेको
वास्तविकता यही हो ।

महोदयको पहिलो व्यवहारबाट
समाजले पूर्ण अनुभव गऱ्यो
व्यवहारमा विपन्नता
विचारमा दरिद्रता
स्वभावमा उग्रता ।

एक दिन सार्वजनिक सुनुवाइमा
राज्यको चौथो अङ्गबाट प्रश्न भयो
एउटै व्यक्तिमा
देखिने र भोगिने फरक किन ?
जनता जनार्दनसँगै
आकाश र धर्तीबाट एकैपटक गुन्जियोः
यही त हो दृष्टिभ्रम । ■

# मन



◆ राजु महत

मन मनलाई मन दिएर
मायाको मन्दिर बनाउँछ
घामभन्दा प्यारो
जूनभन्दा उज्यालो
मायाको पथमा
मन खुसीले रमाउँछ ।

मौन बस्छन् अधरहरू
बन्द हुन्छन् कानहरू
नजरले इसारा बोक्छ
मनलाई चञ्चल बनाउँछ
मन बेचैनी बस्छ
दिन बिर्सन्छ

रात अनिदो बिताउँछ ।
हृदयको सम्फनामा
मन मनलाई खोज्छ
निःस्वासका आरोहमा

मन अलमलिन्छ
कतै कतै मन हराएर
विश्वास हराउँछ
सपना हराउँछ
माया हराउँछ

मनलाई मन दिनु पर्छ
आशाका दियो दिनु पर्छ
मायाको आभास
मुटुको धड्कन

घामको न्यानो
जूनको उज्यालो
हृदयको विश्वास दिएर

संसारका खुसीहरू खोज्नु पर्छ
मनलाई मन दिएर
मायाको मन्दिर बनाउनु पर्छ । ■

चन्द्रागिरि–१५, तीनथाना

# गीत



◆ ज्ञानेन्द्र गदाल

फूलमा देख्छु तिमीलाई, जूनमा तिमीलाई
देख्छु म त मुरलीको, धुनमा तिमीलाई ।

म रमाउने संसारको, बलियो आधार तिमी
मेरो मनलाई खुशी दिने, अटल प्यार तिमी
दिनमा देख्छु तिमीलाई, रातमा तिमीलाई
देख्छु म त सधैँ मेरो, साथमा तिमीलाई

तिमी नजिक भइदिँदा, जून फिक्का लाग्छ
सारा दुःख बिर्सिन्छु म, बाँच्ने रहर जाग्छ
प्रितमा देख्छु तिमीलाई, गीतमा तिमीलाई
देख्छु म त बिहानीको, शीतमा तिमीलाई । ■

फिक्कल, इलाम
हाल : अमेरिका

# केवल पसिनाको गन्ध हुँ !



◆ श्रीबाबु कार्की

सपना बन्धकी राखेर
घामसँगै ब्युँभिने एक अथकित प्राण हुँ म
अर्धमृत आकाङ्क्षाहरूको
पलपल मलामी गएर
निरन्तर श्रमको पसिनामा नुहाइरहेको
तिम्रो सौन्दर्यमा कहीँ कतै नजोडिएको
केवल पसिनाको गन्ध हुँ !

विज्ञानको यो कुरूप शताब्दीमा
कर्मशील औँलाहरू बोकेर
बलिया स्पातका पाखुराहरू जडेर
सिङ्गो पृथ्वीलाई जुरुक्क बोक्ने काँध लिएर
श्रमको सम्पूर्ण भार थाम्ने
सुक्खा खेत झैँ ध्वाजा फाटेका पैताला टेकेर
तिम्रो अगाडि ठिङ्ग उभिएको



यो कुरूप स्वरूपमा अरू कोही नभएर
केवल पसिनाको गन्ध हुँ !

धरौटी राखेर आकाङ्क्षाहरू
लिलाम गरेर फोस्रो आडम्बर
फोहोरा उठेका यी घाइते औँलाहरू खियाउँछु
अनि तिम्रो चुलो बल्छ
पहाड जस्तो यो रुखो शरीरबाट
शिलाजित जस्तै अविछिन्न श्रमको सञ्जीवनी बगाउँछु
अनि तिम्रो दरबारमा बिहान बेलुकी जाउलो पाक्छ
न एकछाक खाना गतिलो छ
न एकरात सुत्न छाना गतिलो छ
न एकधरो लगाउन नाना सुकिलो छ
म एकोहोरो मौरी झैँ निरन्तर कर्ममा विश्वास गर्छु
र, तिमी मह खान्छौ
जिन्दगीको हिसाबबाट उछिट्टिएको जीवित मेसिन हुँ
केवल पसिनाको गन्ध हुँ !

म गोरु जस्तो जोतिन्छु
म जाँतो जस्तो घोटिन्छु
म गिटी जस्तो चुटिन्छु
जोतिनु र घोटिनु र चुटिनु मेरो जीवनको नियति हो
म श्रमको नमिठो कथा हुँ
भोकको सारङ्गी रेटिरहेको दुःखद् उपन्यास हुँ
पसिनाले लेखिएको निबन्ध हुँ
केवल पसिनाको गन्ध हुँ !

जिब्रोको स्वाद निचोरेर
आधा गाँस खाने म निरीह श्रमिक
अहमहरूलाई दागबत्ती दिएर
एकधरो लुगामा जीवन चलाउने श्रमिक !
भोकलाई भऱ्याङ बनाएर पुग्नेहरू कहाँ कहाँ पुगिसके
जीवन अभावमा डुबाएर
ढुङ्गा झैँ चुपचाप बाँचिरहेको श्रमको साधक !
कर्मको रङमा निरन्तर डुबुल्की मारिरहेको र,
अभावको घनले निर्घात चुटिरहेको
केवल पसिनाको गन्ध हुँ ! ■

कविता

# अनन्त यात्रा



◆ गङ्गा खड्का

हरेक सपनासँगै जोडिएको
मेरो देशको मानचित्र
हृदयमा सजाउन पाउँदा
जीवन सार्थक भएको भावानुभूतिमा
मलाई देशको पहरेदार हुनका लागि
भौतिक मोह र विदेश पलायनको अध्याय
पूर्णविराम लगाएर
मैंरै देशको वक्षस्थलमा लडीबुडी खेल्दै
सन्तुष्टिको मिठो हाँसो हाँस्नु छ

आँखा बन्द गर्दा पनि
मेरो देशको शिरमा टुसुक्क बसेर
मुस्कुराउने हिमालको हाँसोले
सुख सागरमा डुबुल्की मार्न सिकाउँछ
बिचमा हरियो कछाड बेरेर
लालीगुराँसको मोहनी रूपमा
नतमस्तक पार्दै पहाडले
उकाली, ओह्राली र भन्ज्याङ चौतारी
चाहर्न लालयित बनाउँदै
सुन झैँ बयली खेलेका धानका बालासँगै
तराईका फाँटमा लुट्पुटिन सिकाउँछ।
चन्दन झैँ मगमगाउने माटो
पर्यटकका पदचाप नाप्न हतारिएका बाटो
मेरा हृदय पटलमा बगिरहँदा
झरनाको झरझर र नदीको कलकलले
मेरो अङ्गप्रत्यङ्गमा स्पर्श गर्दै यही देशमा स्वर्ग
उतारिदिन्छन्
पूर्णिमाको रातमा
फेवामा पौडी खेल्न आतुर चाँदनीले
मेरा मनका अन्तरकुन्तरलाई पनि
धपधप बल्ने स्फुर्तिको उपहार समर्पण गर्दा
साँच्चै मेरो देश मलाई सर्वस्व लाग्छ। ■

**बुढानीलकण्ठ, काठमाडौँ**

# गीत



◆ त्रिचन्द्र प्रतीक्षा

जलेर आफैँ यहाँ खरानी नै भएछु
त्यही बिलाउन म हुरी कुरिरहेछु।
मर्दैन आत्मा, कसैले चिता जलाई दिँदैमा
सुक्दैन तृष्णा प्रेममा विछोड भई दिँदैमा।

प्रेमको हिसाबमा विश्वास कहाँ देखिन्छ
विछोडको घेराभित्र आँसु आफैँ पोखिन्छ,
आत्मा जलाई आफ्नै, शान्ति खोजिरहेछु
जीवन बचाऊँ भन्दा मृत्यु रोजिरहेछु।

आफ्नो आँसुको मूल्य लगाउन खोज्दा
अतीतको स्थितिले आफ्नो मुटु घोच्दा,
कसले सहारा माग्छ, यहाँ लिलाम हुनलाई
कसले हँसाउन खोज्छ हर रात रुनेलाई।

यही रुवाइमा अर्थ खोजी हिँड्दै छु
रोएर बाँच्नुभन्दा हाँसी मरिरहेछु,
आफैँ जलेर यहाँ खरानी नै भएछु
त्यहीँ बिलाउनलाई हुरी कुरिरहेछु। ■

निyात्रा

# हृदयतलमा देवघाट साँचेर...



◆ वसन्त पराजुली



देवघाट यति बेला सबैभन्दा बढी पहिरोकै कारण सङ्कटमा छ । २०७२ वैशाख १२ मा गएको भूकम्पमा चर्किएको देवघाटको त्रिशूली नदीमाथि देवघाटतर्फको भाग पहिलो पटक सोही वर्षको जेठमा झरेको हो । गलेश्वर आश्रमले चर्चिएको उक्त जग्गामा रहेका १३ ओटा घर र झन्डै नौ रोपनी जग्गा त्यो बेला पहिरोले लगेको थियो । अहिले हरेक वर्ष पहिरो झरिरहेको छ ।



"हेल्लो... !"

एकोहोरो घण्टी बजिरहेपछि मैले मोबाइल उठाएँ । परिचितकै फोन थियो । औपचारिकता आदानप्रदानपछि नियमित रूपमा जसरी जिस्किँदै फोनमा एकछिन ठट्टा भयो । उनी हुन्– पठन संस्कृति विकासमा लागिरहेका अभियन्ता एवं सम्पूर्ण किताब, नारायणगढका सञ्चालक लेखराम सापकोटा ।

देवघाट जाने सडक । जङ्गलको बाटो । सूर्य लालिमामय स्वरूपमा पश्चिमबाट अस्ताउँदै थिए । हामी तिनै सूर्यले छरेको लालिमामय रङमै पोतिँदै, हरिया रुख–बिरुवासँग मितेरी लगाउँदै बाटो काट्दै थियौँ । बागीश्वरी अनि शव बिसौनी चौतारो र धारो हुँदै हामी साँझ एक डेढ घण्टाको हिँडाइमा देवघाट पुग्यौँ । देवघाटमा भानुजीको ससुराली परिवारले हामीलाई भव्य स्वागत गऱ्यो । अझै उनीहरूले तात्तातो जेरीले स्वागत गर्दा भोकाएर पुगेका हामी कम्ता खुसी भएनौँ । पछिल्लो समय चिनी खान छाडेको मैले पनि त्यस दिन तीन ओटा जेरी खाएँ ।

सामान्य औपचारिकता पूरा गरेर हामी देवघाटतर्फ नै लम्किरहेका थियौँ । रात परिसकेका कारण पुलमा अलि अलि यात्रु थिए । आहोरदोहोर गर्न त्यति भीड थिएन । तर पनि उज्यालोको अभावमा हामी त्यहाँ मोबाइलको बत्ती बालेर हिँड्यौँ ।

बिस्तारै हामी पुल तरेर केही छिनको पैदलयात्रामा महेश संस्कृत गुरुकुल विद्यापीठ पुग्यौँ । त्यहाँ हाम्रो स्वागत भव्य भयो । महेश संस्कृत गुरुकुल विद्यापीठका पहिला चार पाँच पुस्तासँग मेरो राम्रो चिनजान छ तर अहिलेका नयाँ पुस्ता मलाई चिन्दैनन् ।

मलाई यहाँ आउँदै गर्दा एउटा घटना सधैँ सम्झनामा आउँछ । जब विद्यापीठमा डा. स्वामी रामानन्द गिरिज्यू पीठाधीश हुनुहुन्थ्यो, एक समय विद्यापीठ एवं आश्रमलाई आर्थिक सङ्कट परेको थियो । म पेसाले पत्रकार भएका नाताले यहाँको समस्यालाई समेटेर गोरखापत्र दैनिकमा समाचार लेखेको थिएँ । त्यसपछि यो आश्रमको खातामा पैसा आउन कहिल्यै रोकिएन । आर्थिक समस्या झेल्नु परेन भनेर स्वामी डा. स्वामी गिरिज्यूले सधैँ प्रशंसा गर्नुहुन्थ्यो । समाचारकै प्रभावले देवघाटको आश्रममा आर्थिक जोहो भएको गलेश्वर आश्रम पनि एक हो । यहाँको अन्नभण्डार बन्द हुने अवस्थामा पुग्दा गोरखापत्रकै समाचार आर्थिक जोहो गर्ने माध्यम बनेको थियो ।

देवघाटका आश्रमहरूको एउटा राम्रो पक्ष छ । खाना खाने बेला जोकोही लाइनमा गएर बसे उनीहरूले निःशुल्क खाना खान पाउँछन् । यहाँका आश्रमहरूले निःशुल्क अन्नभण्डारसमेत सञ्चालन गरिरहेका छन् । यो सबै दाताहरूकै भरमा चलेको हो ।

कार्यक्रम सुरु भयो । एकपछि अर्को कविताले मेरो मन तानिरहे ।

समयको रुगरुगाउँदो बारीमा<br>
उफ् ! वसन्तले किन म्वाइँ खाएन ?<br>
आएन, आएन...<br>
किन यौवन आएन... ।

झन्डै आठ दशक उमेर पार गर्दै गरेका भाषाविद् प्राडा दयाराम श्रेष्ठले ६० वर्षअघि लेखेको रचना सुनाउँदै गर्दा दर्शकदीर्घाबाट ताली परर बज्यो । हुटिङ आयो । पुस मसान्तमा मध्यरात हुँदै गर्दा शृङ्गार रसले भरिएको प्राडा श्रेष्ठको यो कविता ओठमा भरखरै रेखी बसेर साहित्यको नवरस लिँदै गरेका ठिटादेखि

कवितामै ख्याति प्राप्त प्रौढसम्मले चाख मानेरै सुने ।

ए ! कन्तुरबाट सिर्जित

मुटु डाक्टर एक घुट्को यौवन त पिउन देऊ उसलाई

एक बित्ता मात्रै भए पनि जिउन देऊ उसलाई

किनकि उसको बाँझो काखमा दिन मूर्च्छा खाएको छ नसा नसाले... ।

'मकर काव्य यामिनी' मा कविहरूले आआफ्ना कविता वाचन गरे । नवआगन्तुक कविदेखि अनुभवीसम्मको अपूर्व मिलनले कार्यक्रमको ओज थप बढाएको पाइयो ।

मकर काव्य यामिनीको यो २१ औँ शृङ्खला हो । २०६० सालदेखि विद्यापीठले हरेक वर्ष यो कार्यक्रम गर्दै आएको छ । चितवन, नवलपरासी र तनहुँको सङ्गमस्थलमा माघ १ मा श्रद्धालुले अघिल्लो राति भजनकीर्तन गर्दै जागा बसेर भोलिपल्ट स्नान गर्ने चलन रहेको र तिनैमध्येका काव्यपारखीलाई रातभर काव्यको आनन्द दिलाउन 'मकर काव्य यामिनी' आयोजना गर्ने गरिएको महेश सन्न्यास आश्रमका पीठाधीश रमणानन्द गिरिले बताए ।

यस वर्ष 'मकर काव्य यामिनी' मा ५० भन्दा बढी कविले कविता वाचन गरे ।

काव्य यामिनी सकिँदै गर्दा रातको एघार/बाह्र बज्दै थियो । त्यस दिन हाम्रो सुत्ने गन्तव्य भने गलेश्वर आश्रम थियो । हामी त्यहाँबाट गलेश्वरतर्फ लाग्यौँ । गलेश्वर आश्रमतर्फ लाग्दै गर्दा सँगै आएका चार जना त थियौँ नै, कवि बालकृष्ण थपलिया पनि जोडिए ।

पहिला त उनी हामीसँग जाने नजाने अन्योलमै थिए । तर हाम्रो रमाइलो टिम देखेपछि र मैले गलेश्वर आश्रममा सुत्न पाइन्छ भनेर कर नै गरेपछि उनी पनि पछि लागे ।

अनि गलेश्वर आश्रम जाने बिच बाटोमा थियो– वृद्धाश्रम ।

वृद्धाश्रमभन्दा ठिक माथिपट्टि रहेको मणिमुकुन्दसेन चक्रवर्ती महादेव मन्दिर र सँगै रहेको पुष्पवाटिकाले जोकोही पर्यटकको मन तान्छन् । अझै यो सुन्दर बगैँचामा रहेका चन्द्रगन्धा, श्रीखण्डलगायत रूखका बास्नाको सुगन्ध त टाढाटाढासम्म फैलिन्छ/ फैलिरहन्छ । मणिमुकुन्दसेनको मन्दिरको आफ्नै जनविश्वास छ । राजा मणिमुकुन्दसेनले कालीगण्डकीको तीरबाट ल्याएर राखेको त्यो शिला दिनदिनै बढ्दै गएको विश्वास छ ।

देवघाटमा रहेका विभिन्न मठमन्दिरले आआफ्नै ढङ्गले धर्मशाला सञ्चालन गरे पनि सरकारका तर्फबाट समेत त्यस्ता कुनै धर्मशाला नहुँदा पनि यहाँ एक किसिमको समस्या छ । मकर सङ्क्रान्ति मेलामै स्नान गर्न आएका भक्तजन कतिपयले राति विश्राम गर्न नपाएर जाग्राम बस्नुपर्ने बाध्यता पनि छ । धन्न हामीले त दिउँसै गलेश्वर आश्रमका प्रबन्धक महेन्द्र प्याकुरेललाई भनेका थियौँ र त्यहाँ सुत्न पाइनेमा ढुक्क थियौँ ।

देवघाट क्षेत्रभित्र रहेका विभिन्न मठमन्दिर र विद्यापीठले सञ्चालन गरेका गुरुकुल, मठमन्दिर, सीता भासिएको गुफा आदि क्षेत्र संस्कृत विद्या आर्जन गर्ने थलो पनि बन्दै छन् । चितवनतर्फ भएको महाबौद्ध गुम्बा र विभिन्न मठमन्दिर पनि पर्यटकको रोजाइमा छन् । अझै नदी किनारमा भेटिने शालिग्राम मुक्तिनाथदेखि कालीगण्डकीले बगाएर ल्याएको महत्त्वपूर्ण शिला हो । यसलाई हिन्दु धर्मावलम्बीहरूले भगवान् विष्णुको प्रतीकका रूपमा पूजा गर्छन् ।

महेश संस्कृत गुरुकुल विद्यापीठबाट हिँडेका हामी यस्तै धार्मिक चर्चा र विश्लेषण गर्दै केही मिनेटको पैदल यात्रापछि गलेश्वर आश्रम पुग्यौँ । महेश जस्तै गलेश्वर पनि देवघाटको ठुलो आश्रम हो । दुवैले सयौँको सङ्ख्यामा बटुकहरू राखेर निःशुल्क आवासीय शिक्षा दिइरहेका छन् ।

"काम गर्नाको दुःखले जोगी भएँ, जोगी भएको भोलिपल्ट भोकै रहेँ ।"

यो उखान हाम्रो समाजमा प्रख्यात छ । घर व्यवहार र परिवारबाट विरक्तिएपछि मानिस सन्न्यासग्रहण (जोगी बन्छन्) गर्छन् भन्ने मान्यताबाट यो उखान बढी परिलक्षित छ तर देवघाटमा रहेका योगी–सन्न्यासीका हकमा यो उखान गलत साबित हुन्छ । यहाँका योगी–सन्न्यासीहरू आफूले मात्रै खाँदैनन्, देवघाट आउने जोकोहीलाई निःशुल्क भोजनको व्यवस्था पनि गर्छन् । यसमा सन्न्यासीहरूले सञ्चालन गरेका आश्रमहरूको भूमिका महत्त्वपूर्ण छ । गलेश्वर आश्रमले त सदाव्रत अन्नभण्डार सञ्चालन गरेको छ । हरिहर आश्रम र महेश सन्न्यास आश्रममा पनि आउने जोकोही भक्तजन भोको पेट लिएर फर्कनु पर्दैन । त्यसमाथि यहाँ रहेका विद्यार्थी, बटुकहरूले पनि निःशुल्क आवाससहितको भोजन र शिक्षा लिइरहेका छन् ।

देवघाटमा दानदातव्यबाटै संस्कृत गुरुकुल सञ्चालनमा छन् । तिनमा आचार्यसम्मको अध्ययन गर्न सकिने व्यवस्था छ । यसलाई नेपाल संस्कृत विश्वविद्यालयले मान्यता दिएको छ । यहाँका गलेश्वर, महेश र हरिहर सन्न्यास आश्रम विद्यापीठ तहका कक्षा सञ्चालन गर्ने ठुला आश्रम हुन् । देवघाटमा अन्य धेरै साना मठमन्दिरले पनि बटुकहरूलाई पढाइरहेका छन् ।

विद्यापीठ चलाउन आवश्यक रकम नेपालभित्र र बाहिर विभिन्न देश पुगेर प्रवचन गरेर नै जोहो हुने गरेको छ । आर्थिक सङ्कलन गर्न नै यहाँका स्वामीजीहरू कहिले अमेरिका, कहिले अस्ट्रेलिया त कहिले युरोपका देश पनि पुगेका छन् ।

देवघाटधामको पहिचान गलेश्वर बाबा (ईश्वरानन्द ब्रह्मचारी) ले गराएका हुन् । १९९२ सालमा गलेश्वर आश्रम स्थापना गरेर देवघाटको संरक्षण र प्रवर्धनमा लागेका गलेश्वर बाबापछि पनि योगी–सन्न्यासीहरूले यसको



विकास गरिरहे । देवघाटमा विद्यालय, खानेपानी, सडक जस्ता विकासका पूर्वाधार पनि यिनै योगी–सन्न्यासीहरूको पहलमा भएको देखिन्छ । तनहुँको देवघाटतर्फ विशेष तीन आश्रमको बढी योगदान भए जस्तै चितवनतर्फ शिक्षा र पूर्वाधार विकासमा स्वामी डिल्लीराम बाबा (दण्डी स्वामी) को पहलकदमी बढी छ । गलेश्वर आश्रमले भने विकासको फड्को मार्न लागेको वर्तमान पीठाधीश आत्मानन्द गिरिको पालादेखि रहेको बताइन्छ । उनी २०५३ चैत २९ बाट गलेश्वर आश्रमको पीठाधीश छन् । महेश सन्न्यास आश्रमले सञ्चालन गरेको गुरुकुल विद्यापीठ ब्रह्मलीन डा. स्वामी रामानन्द गिरि र हरिहर सन्न्यास आश्रमको विद्यापीठ ब्रह्मलीन स्वामी परमानन्द सरस्वतीले स्थापना गरेका हुन् । अहिले हरिहर आश्रमका पीठाधीशमा स्वामी ज्ञानानन्द सरस्वती र महेश सन्न्यास आश्रमका पिठाधीशमा स्वामी रमणानन्द गिरि छन् ।

देवघाट यति बेला सबैभन्दा बढी पहिरोकै कारण सङ्कटमा छ । २०७२ वैशाख १२ मा गएको भूकम्पमा चर्किएको देवघाटको त्रिशूली नदीमाथि देवघाटतर्फको भाग पहिलो पटक सोही वर्षको जेठमा झरेको हो । गलेश्वर आश्रमले चर्चिएको उक्त जग्गामा रहेका १३ ओटा घर र झन्डै नौ रोपनी जग्गा त्यो बेला पहिरोले लगेको थियो । अहिले हरेक वर्ष पहिरो झरिरहेको छ । अहिले त पहिरोले गलेश्वर आश्रम बगाउने हो कि भन्ने चिन्ता पनि छ । तर पनि यसको ठोस नियन्त्रणको प्रयास हुन सकेको छैन ।

शेरबहादुर देउवा प्रधानमन्त्री भएका बेला अर्थमन्त्री ज्ञानेन्द्रबहादुर कार्की थिए । उनले आफ्ना पिताको अस्तु देवघाटमा विर्सजन गर्न आउँदा पहिरो देखेर नियन्त्रणका लागि तत्कालीन पश्चिमाञ्चल सिँचाइ डिभिजन कार्यालयलाई डिपिआर बनाउन लगाएका थिए । झन्डै ३२ करोड रुपियाँ लागत लाग्ने गरी डिपिआर पनि बन्यो तर लगत्तै सरकार फेरबदल भएपछि त्यो रोकियो । केपी शर्मा ओली प्रधानमन्त्री हुँदा पनि राष्ट्रिय योजना आयोगका तत्कालीन सदस्य डा. कृष्ण ओलीले चरणबद्ध रूपमा पहिरो नियन्त्रण गराउन भनी आयोगको कार्ययोजनामा पाँच करोड रुपियाँसहितको बजेट तर्जुमा गराएर अर्थ मन्त्रालयमा सिफारिस गरेका थिए तर तत्कालीन अर्थमन्त्री डा. युवराज खतिवडाले त्यो बजेट काटिदिँदा देवघाटले अहिले पनि समस्या भोगिरहेकै छ ।

तत्कालीन अर्थमन्त्री डा. प्रकाशशरण महतले पनि चासो राखेर गत असोज २० मा पहिरोग्रस्त देवघाटको अवलोकन गरेका थिए । पहिरो नियन्त्रणका लागि सङ्घीय सरकारले बजेट विनियोजन गर्ने विश्वास दिलाएका थिए तर अहिलेसम्म ठोस बजेट आएको छैन । झारा टार्ने साना खुद्रे बजेटले पहिरो नियन्त्रण हुन सक्ने अवस्था पनि छैन ।

...

बेनी पुगेपछि लेखरामजीलाई के भूत चढ्यो, थाहा भएन । फेरि त्यहाँबाट फर्केर केही किमि दुरीको कालीगण्डकी पुल जाने इच्छा देखाए । देवघाटलाई पूर्वी नवलपरासीको गैँडाकोट नगरपालिकामा पर्ने ढोडेनीसँग जोड्न केही वर्षअघि मात्रै यो पुल बनेको हो ।

लेखरामजीको 'घमण्ड' का अगाडि कसैको केही चलेन । मलगायत सबै साथी अब सुत्नु पर्छ भन्नेमै थियौँ तर उनकै जोडबलले थकित शरीर लिएर बिस्तारै बिस्तारै उनकै पछि लाग्न बाध्य भयौँ । महेश सन्न्यास आश्रमसम्म त हामी ठिकै थियौँ, त्यहाँबाट अघि लागेपछि भने मेरो शरीर लखतरान भयो । खुट्टा लत्र्याक लुत्रुक भए । आरपिजीलाई पनि त्यस्तै भएछ । लेखरामसहित अन्य तीन जना भने अघि अघि थिए । हामीले त्यहाँ लेखरामजीलाई घमण्डी, जे भन्यो त्यही गर्नै पर्ने भनेर गाली पनि गर्‍यौँ तर उनलाई यस्ता कुराले के छुने !

हामी बल्ल बल्ल कालीगण्डकी पुग्यौँ । पुल पुगिसकेपछि कालीगण्डकीको सुसाहट र त्यहाँको प्रकृतिक

छटाहरूले भने मन तान्यो। त्यहाँ फोटोसेसन गरी पुल तरेर गैँडाकोटलाई चरणस्पर्श गर्दै हामी फर्कँदै थियो। बिच बाटोमा एउटा होटल खुल्लै देखियो। साथीहरूलाई चिया खान मन भयो। राति दुई बजेको थियो सायद। अनि होटलमा कसैले चिया त कसैले चाउचाउ खाने निधो गऱ्यौँ र अर्डर गऱ्यौँ।

बाहिर धुनी लागिरहेको थियो। त्यहाँ दुई किशोरी पनि रहेछन्। उनीहरूलाई देख्नेबित्तिकै मैले सोधेँ, "नानी हो, तिमीहरूको घर यतै हो ?"

"हैन, अङ्कल उः पारि ढोडेनी हो," एउटीले उत्तर फर्काइन्।

"अनि कोसँग घुम्न आएका त ?"

"ममीसँग आएका," उत्तर अर्की किशोरीले दिइन्।

"खै त ममी ?"

"ऊ भित्र कोठामा, अङ्कलसँग हुनुहुन्छ।"

"अनि तिमीहरू के गरिरहेछौ त यहाँ ?"

"के गर्ने, ममी बिहान फर्कने भन्नुहुन्छ। हामीलाई त साथी पाए अहिल्यै जान मन छ। रातिमा एक्लै जान पनि सकिँदैन," एक किशोरीले आफ्नो बाध्यता सुनाइन्।

उनीहरूका कुराले मलाई भने अलि गम्भीर बनायो। म पनि छोरीको बाबु। मेरै छोरीको उमेरका ती किशोरीहरूलाई देख्दा दया लाग्यो। अनि भनेँ, "हामीले पुल कटाइदियौँ भने जान सक्छौ त ?"

"भो जान्नौँ, अङ्कल। फेरि ममी रिसाउनुहुन्छ। छाडेर गइस् भन्नुहुन्छ," उनीहरूले एकसाथ उत्तर दिए।

ममीसँगै कोठामा बस्ने अङ्कल को थिए, मलाई कौतूहल भयो। अनि मध्यरातमा छोरीहरूलाई बाहिर राखेर ती ममी अङ्कलसँग भित्र के गर्दै होलिन् ? अनि यी चिचिला नानीहरूको मस्तिष्कमा यो घटनाले कस्तो प्रभाव परेको होला ?

धेरै शङ्का उपशङ्का उठेर पनि थप प्रश्न गर्न मलाई मन लागेन। त्यसैले यति मात्र सोधेँ, "तिम्रो बाबा घरमा हुनुहुन्न र, नानी ?"

"बाबा साउदी जानुभएको चार वर्ष भयो," एउटीले उत्तर दिइन्।

ती दुवै किशोरी हाम्रो खाजा आउने बेला हुन लागेर हो वा के भएर हो, आफैँ त्यहाँबाट अन्यत्र सरे। हाम्रो चियाखाजा आयो। साथीहरूले खाजा खाए मैले भने चिया मात्रै। मलाई यो वर्ष जसरी पनि स्नान गर्नु थियो। लामो समय पत्रकारिता गर्दा देवघाटको समाचार धेरै लेखियो। तर माघेसङ्क्रान्तिको रात्रिकालीन समाचार लेख्न सकेको थिइनँ। किनकि म देवघाटमा राति बसेकै थिइनँ। खाजा खाएपछि त्यस्तै रातिको तीन बज्दै थियो। हामी त्यहँबाट सरासर उठेर बेनीतर्फ हानियौँ। बेनीमा स्नान गर्नेहरूको भीड लागिसकेछ।

मकर सङ्क्रान्तिसँग देवघाटको धार्मिक एवं सांस्कृतिक सम्बन्ध छ। दामोदर कुण्ड स्रोत भएर बहँदै आएको त्रिशूली र मुक्तिनाथ हुँदै आएकी कालीगण्डकी नदीको सङ्गम देवघाटको बेनी धार्मिक रूपमा पनि महत्त्वपूर्ण छ। सूर्य मकर राशिमा भई उत्तरायण हुने मकर सङ्क्रान्तिका दिन देवघाट आएर बेनीमा स्नान गरे मनोकाङ्क्षा पूरा हुने विश्वास सर्वसाधरणमा छ। यही विश्वासले पनि हरेक वर्ष मकर सङ्क्रान्तिका दिन लाखौँ स्वदेशी तथा विदेशी भक्तजन यहाँ स्नान गर्न आउँछन्।

धार्मिक मान्यता अनुसार मकर सङ्क्रान्तिका रात देवताहरू देवघाटमा स्नान गर्न आउँछन्। हामी पनि यही देवघाटमा रातभर जाग्राम बसेर अहिले स्नान गर्न आएका हौँ। हामी चार जनाले स्नान गऱ्यौँ। बिहान मात्रै भाउजू र नानीहरूले कपडा लिएर आउने भएकाले बालु दाइले भने स्नान गर्न सक्नुभएन। स्नान गरेर हामीले आआफ्ना पितृलाई तर्पणसमेत दियौँ।

स्नान गरेपछि गलेश्वर आश्रम आएर पुनः शिव मन्दिर परिक्रमा गर्दै दर्शन गरेर गुरुहरूको आशीर्वाद लिएर हामी चार बजे चितवन फर्कन तयार भयौँ। झलुङ्गे पुलबाट हामी फर्कियौँ। वारि आएर हामी पैदलै फर्कने योजनामा थियौँ तर कवि भानुजी थकित र रातभरको जाग्रामले होला, पैदल फर्कन सक्ने अवस्था नभएको भन्दै एउटा म्याजिकमा बसे। उनी म्याजिकमा त बसे तर त्यहाँ रहेका अन्य यात्रुहरूको हुलिया र हाउभाउ देखेर उनी झरिहाले।

"किन भानुजी, नजाने यसमा," मैले सोधेँ।

"हैन सर, यसमा त जान सकिँदो रहेनछ।"

"किन ?"

"किनकि त्यहाँ त सबै तेस्रो लिङ्गीहरू रहेछन्। उनीहरूको हाउभाउ र रूप–ढङ्ग देखेर नै डर लागेर म त गाडीबाट झरेँ।"

मकर सङ्क्रान्तिका दिन रात्रिकालीन देवघाट होटलमा भेटिएका ती किशोरी अनि तिनका ममीहरू र कवि भानु गाडीबाट ओर्लिनुपर्ने अवस्थाले के सन्देश दिन्छ ? के यस्ता गतिविधि धार्मिक क्षेत्रका लागि सुहाउने गतिविधि हुन् ? प्रश्नहरूले मलाई तर्साइरहे। यी विविध विषयमा समीक्षा गर्दै हामी पैदलै आँपटारीतिर लाग्यौँ।

...

मकर सङ्क्रान्तिसँगै देवघाटमा साउने सोमबार पनि भक्तजनको भीड लाग्छ। यसले पछिल्ला वर्षहरूमा देवघाटको धार्मिक–पर्यटकीय आकर्षण बिस्तारै बढाउँदै गएको छ। देवघाटप्रति भक्तजनको आस्था पनि छ। यसरी बढ्दै गएको जनविश्वास र आस्थाले धार्मिक पर्यटनको विकास गर्न सकिने प्रचुर सम्भावना देखाउँछ तर संरक्षणसम्बन्धी नीति तथा योजना नबन्दा र प्रचार प्रसारको अभावमा देवघाट अझै ओझेलमा परेको छ। ■

संस्मरण

# पैडी खेल्न खुर्पाले कपाल काट्यौँ



◆ मोतीराज बम



पहिला त भित्री बाउतबाटै बाउत सिकिन्थ्यो । यसलाई हामी भ्यागुता बाउत भन्थ्यौ । त्यसपछि सिपालु कसैले जुणी (टुपी) समाएर सिकाइदिन्थे । बाउत सिक्नका लागि जुणी राख्न घाँस काट्ने आसीले कपाल काट्थ्यौँ । कति लाटा हामी कपाल समातेर पनि बाउत सिक्न सकिन्थ्यो तर कपाल काट्नै पर्ने । धनराज दाइ ठुलो आसीले भेडा मुडे झैँ मुड्नु हुन्थ्यो हाम्रो कपाल । यति दुख्थ्यो कि भनेर साध्य छैन ।



सदरमुकाम मान्मबाट १६ कोस पश्चिमोत्तरमा पर्छ पचाल झरना गाउँपालिका । विसं २०५७ सालमा स्पेस टाइम राष्ट्रिय दैनिकमा 'विश्वकै अग्लो हुन सक्ने पचाल छहरो' शीर्षकमा मेरो आलेख प्रकाशित भएपछि पचाल झरनाको प्रचार प्रारम्भ भएको हो । यस झरनालाई स्थानीयहरू अहिले पनि पचाल छहणो नै भन्छन् । स्पेस टाइममा छापिएको मेरो आलेख पढेर कामको सिलसिलामा कालिकोट पुगेका स्विस राजदूतले मान्ममा एक होटल साहुनीलाई पचाल छहणो कहाँ पर्छ ? भनी सोध्दा साहुनीले खै थाहा छैन भन्दा राजदूत छक्क भएको कुरा पछि ती साहुनीले मलाई बताएकी थिइन् ।

यो छहणा (झरना) को एउटा अलग्गै विस्मयकारी मिथक छ । मिथक यस्तो छ कालासिल्लो मस्टो र पचालो मस्टो दुई दाजुभाइ हुन् । यौवनास्थामा पचालाको एक राक्षसकी छोरीसँग प्रेम बस्यो । यो थाहा पाएपछि सारा देवीदेवता मिलेर सम्बन्ध विच्छेद गर्न खोजे तर पचालाले मान्दै मानेन बरु भाग्नु उचित ठानेर उक्त राक्षसकी छोरी भगाएर यही छहणो भित्र लुकेर बस्यो । पचालो मस्टो भागेर यहीँ बसेपछि यसको नाम त्यस दिनबाट पचाल छहणो रहन गयो । त्यही राक्षसनीबाट एउटा छोरा पनि जन्म्यो । त्यसको नाम हो लुवासुरी । आजभोलि आफ्नै पैठमा पतुर्नु धामी नाच पऱ्यो भने आफ्नै भाषामा पचालाले छोरा र लुवासुरीले बुवा भनेर सम्बोधन गर्छन् । साबिकको राम्नकोट गाविसको खार्दु गाउँमा पर्छ पचाल छहणो । राज्य पुनर्संरचना आयोगले हाम्रो सुझावलाई उपयुक्त ठान्दै पछि यस पालिकाको नाम पचाल झरना नै राख्यो । साबिकको राम्नकोट, बदालकोट र नानीकोट गाविसलाई मिलाएर पचाल झरना गाउँपालिका बनेकाले अब यो पचाल छहणोबाट पचाल झरनामा रूपान्तरित भएको छ ।

मेरो आलेखबाट चर्चा सुरु भएपछि स्थानीय, राष्ट्रिय र अन्तर्राष्ट्रिय सञ्चारमाध्यम पनि यसको वास्तविकताको खोजीनितीमा लागे । प्रचारप्रसारले व्यापकता पाएपछि तत्कालीन जिल्ला विकास समिति, वर्तमान गाउँपालिका र गैरसरकारी सङ्घसंस्थाको पहलमा नापजाँच गरी पचाल झरनाको वास्तविक उचाइ ३८१ मिटर पुष्टि भयो । तत्पश्चात पचाल झरना विश्वकै अग्लो नभए पनि दक्षिण एसिया र नेपालको अग्लो हुन पुग्यो । अहिले नेपाल सरकारले यस झरनालाई आन्तरिक पर्यटकीय गन्तव्य स्थलको ६४ औँ स्थानमा दर्ज गरेको छ । दक्षिण एसियाकै अग्लो झरना पचाल झरना गाउँपालिकालाई चिरा पारेर बिच भागमा बग्छ नेपालकै लामो कर्णाली नदी ।

मानसरोवर तालको लङ्कारी दह मुहान भई बग्ने धार्मिक विशेषता बोकेका ऐतिहासिक नदी सतलज, ब्रह्मपुत्र, सिन्धु र कर्णाली हुन् । यही कर्णाली नदी तिब्बत हुँदै भारत पुग्छ । हिउँदमा जौपाते रङ र बर्खामा हिलाम्मे कालो रङ बनाएर बग्छ । स्थानीय स्तरमा कर्णाली नदीले हामीलाई बर्खामा काठदाउरा, हिउँदमा माछा, पौडी खेल्न र पिउने सुविधा मात्र दिएको छ । त्योबाहेक कर्णाली नदीबाट अरू कुनै उपादेयता देखिँदैन । कर्णाली नदीले पचाल झरना गाउँपालिकालाई यसरी विभक्त गरेको छ । वारिपट्टि राम्नकोट र बदालकोट पर्छन् पारिपट्टि नानीकोट पर्छ । वारिपट्टि बगरमा जारकोट, पारिचौर झुगला, लाफा, पारिलाफा, पणेच्छा, गङ्खेत, बाग्या फाँट छन् । पारिपट्टि घाटकाचौर, सिगाबगर, चाट्याबगर, भैस्यासैन, भुराबगर फाँट छन् । पणेच्छा पालिकाको सदरमुकाम हो । अन्य सबै

खेतीयोग्य जमिन हुन्। यी जमिनलाई जिउँला भनिन्छ। यी जिउँलाहरूमा धान र गहुँ खेती मात्र गरिन्छ। तरकारी खेतीको अधिक सम्भावना भए पनि किन हो किन यहाँ  तरकारी खेती गर्ने चलन छैन। स्थानीय बासिन्दा सुर्खेतबाट झिकाएर महँगोमा तरकारी खान राजी छन् तर आफ्नै खेतबारीमा तरकारी लाउन राजी छैनन्। यो बिडम्बना नै भन्नु पर्छ।

एक पटक मेरा  बुवा भक्तबहादुर बमले खेतमा बन्दागोभी तरकारी लगाउनुभयो। बन्दागोभी पनि खुब फल्यो। बन्दागोभी  देखेर गाउँभरिका मान्छे बन्दागोभी माग्न आए, दिनुभयो। पछि पछि त पात माग्न थाले, पात पनि सकिए, त्यसपछि डाठ माग्न सुरु गरे। यसरी हैरान भएपछि पछिल्लो वर्ष बुवाले बन्दागोभी नै लाउनु भएन। आफू पनि अरू पनि सब चिल्लाराम। रायो, गोलभैँडा, फर्सी, काँक्रा, भिन्डी, भेन्टा, स्कुस, घिरौँला, तितेकरेला जस्ता तरकारी मनग्गे फल्ने ठाउँ हुन् यी ठाउँ। यी सबै नदी किनाराका फाँट। यी फाँट र जिउलोको बगरभरि सिसौ, बेणु, तिमिला, खनाया, बैँस, टटाल्नु, सिमल, पीपल, टुसारो, खणिक, सिउतारो, केराका बोटहरूले झपक्कै देखिन्छ मेरो जन्मथलो जारकोट।

हामी साना केटाकेटीमा गाई बाख्रा चराउन जाने मैले केटाकेटीमा भैँसी चराउने, गाईबाख्रा चराउने, घाँस काट्ने, दाउरा ल्याउने जस्ता सबै काम गरेको छु। हाम्रा गाई, बाख्रा चराउने, घाँसदाउरा र स्याउला काट्ने प्रायः वन एउटै हो। सिसौ, पीपल, खणिक र खच्याका स्याउला वैशाखजेठमा कति काट्थ्यौँ कति। पशु चराउने हाम्रा वन थिए थिर्पुतिर। तर्पर्या, बाम, चाखुणकाठिया, गहतेणी, मुइन्खाणा यता लाफातिर कटेरा, करुवाढाण, पेटारी, ह्याङ्लु, चुफीढुङ्गा, बगौरा, पारिचौण बालिकुना आदि। गाई, बाख्रा चराउनु हाम्रो बाध्यता थियो भने बाउत (पौडी) खेल्नु रहर। बाउत खेल्ने अरू विकल्प थिएन कर्णाली नै हो। थिर्पुतिर गोठालो गयो भने बाउत खेल्ने मोहोर हो। लाफातिर गयो भने पारिचौणको बालुवा सोताको ढुङ्गो डुबाउने र बगाउने पानीमा बाउत सिक्न धेरै अप्ठ्यारो। पहिला त भित्री बाउतबाटै बाउत सिकिन्थ्यो। यसलाई हामी भ्यागुता बाउत भन्थ्यौ। त्यसपछि सिपालु कसैले जुणी (टुपी) समाएर सिकाइदिन्थे। बाउत सिक्नका लागि जुणी राख्न घाँस काट्ने आसीले कपाल काट्थ्यौँ। कति लाटा हामी कपाल समातेर पनि बाउत सिक्न सकिन्थ्यो तर कपाल काट्नै पर्ने। धनराज दाइ ठुलो आसीले भेडा मुडे झैँ मुड्नु हुन्थ्यो हाम्रो कपाल। यति दुख्थ्यो कि भनेर साध्य छैन।

मेरा बालसखाहरू थिए मुनबहादुर, बालसिंह, राजेन्द्र, कम्म, देउल्या, जैपाल्या, पवित्ता, चल्ली, बुच्याहरू। यी सबैभन्दा मैले नै छिटो बाउत सिकेँ।



बाउत सिकिसकेपछि एउटा नियम थियो, पहिला सोताको ढुङ्गो क्रस गर्ने। त्यसपछि सीधै कर्णाली छिन्ने। कर्णाली छिनिसकेपछि मात्र बाउतमा दीक्षित भएको मानिन्थ्यो। मैले बाउत सिक्न लागेको १०औँ दिनमा कर्णाली छिनिसकेको थिएँ। हाम्रो कर्णालीमा बाउत खेल्ने उपयुक्त समय फागुन १५ देखि जेठको १५ सम्म हो।

जेठपछि नदी बढ्दै जान्छ। पानी पनि धमिलो हुँदै जान्छ, खतरा भइहाल्छ। नदी किनाराको बस्ती असाध्य गर्मी हुने। यस कारण पनि बाउत सिक्नै पर्ने। एक दिन वैशाख महिना थियो। गहुँ काटेर खेतहरू खाली जस्तै थिए। खेतमा गाईगोरु, बाख्रा, भैँसी चर्थे। यस प्रक्रियालाई हामी उदाउनी भन्छौँ। म तीन कक्षामा पढ्थेँ।  मेरो साथी कम्म दाइ पनि तीन कक्षामा पढ्थ्यो। स्कुल जान उकालो दुई घण्टा हिँड्न पर्थ्यौं। ऊ अलि ठुलो म सानो। माथि डाडा डाङ्ग्री धन्जय जेठाबाको घरमा पुगेपछि उँधो हेर्‍यौँ। तल जिउलामा गाईबाख्रा उफ्री उफ्री चरिरहेका। बिहानी हावाले पीपलका पात फिर्फिर हल्लँदै। सिमलको कोसा फुटेर भुवा आकाशमा उडिरहेको देख्दा मनले उकालो उक्लनै मानेन। यत्तिकैमा कम्म दाइले जुक्ति झिक्यो र भन्यो, ए मोती आज उदाउनी बिदा हो था छैन, स्कुल बन्द हुन्छ फर्कुं।

हो त नि भन्दै खुसीले फुरुङ्ङ हुँदै फर्कियौँ। झोला कम्म दाइको घरमा राख्यौँ, उसको घर अलि छेउतिर एक्लै थियो। अनि बामगाणको किनारै किनार गाउँलेलाई छल्दै मोहोर पुग्यौँ। त्यहाँ नुहाउनेको भिड थियो। हामीलाई देखेर खासखुस गर्न थाले।आज यी दुई टोका (बच्चा) स्कुल गएनछन्, अब मास्टर र घरपरिवारको रामधुलाइ खाने भए।

नभन्दै परिवारलाई त जसोतसो कुरा मिलायौँ। शिक्षकबाट बच्न सकिएन। हाम्रा गुरु हुनुहुन्थ्यो, बिर्खबहादुर सेजुवाल। उहाँले भने भोलिपल्ट स्कुलमा हिजो किन नआएको भन्दै मिहिणे झारको स्यागुठाले पिट्न थाल्नुभयो। जिउभरि राता चाठाहरू देखिए, रगत

आउला झैँ भयो । अझै भएन भनेर दुई औँलाको कापमा मोटो भाटो राखेर औँला च्याप्नु भयो । ज्यादै असह्य भएर म चिच्याएँ, रोएँ । पछि टिक्न नसकेर भनिदिएँ, यै कम्म दाइ हो, उदाउनी बिदा हो भन्यो । अनि मलाई छोडेर गुरु त्यतै फर्कनुभयो । ऊ रुँदै थियो म कक्षा कोठामा छिरिहालेँ । पछिल्लो दिन कम्म दाइले पनि मलाई हप्कायो ! "आजदै म तोकन मह पनि दिँदैन साथ पनि लिँदैन ।" म केही बोलिनँ चानुमानु बसेँ । उसको घरमा मह मनग्गे हुन्थ्यो । हामी अन्निरोटीसँग दिनहुँ मह चोरेर खान्थ्यौँ । मह चोरेपछि त्यो भयबाट उम्किन बाआमालाई मेरो नाम जोडेर भन्थ्यो, "मोती आएर खाउँ भन्यो अनि खायौँ ।" उसका बा असाध्य भलाद्मी थिए । मेरो नाम लिए केही भन्दैनथे किनकि हामी दुवैका बा राम्नकोट गाउँका बहुतै मिल्ने दोस्ती थिए ।

चैतवैशाखमा नदी किनारमा कमिला झैँ हुन्थे बाउतेहरू । हामी ६, ७ जना साथीको कथा बेग्लै थियो बाउत हान्नुमा । मैले १२, १३ वर्षको उमेरसम्म कम स्कुल बढी गोठालो जाने काम गरेँ । राम्नकोटमा हाम्रा दुई वटा बस्ती छन् । १२ महिनामा (महिना बेँसी जारकोट र ती महिना लेक राम्नकोटमा बसोबास हुन्छ । प्रायः हाम्रो परिवार जारकोटमै बस्ने भएकाले बाउत सिक्न, खेल्न पनि सहज भयो । हाम्रो गोठालो जाने वनहरू भनेकै ह्याङ्लु, कटेरा, बल्ल्याजुद्वा, पेटारी हुन् । त्यतातिर गाईबाख्रा छोडुवा धपायो पारिचौण बालुवामा बाउत खेल्यो हाम्रो बाल दैनन्दिनी थियो । नदी किनारामा पनि तीन वटा बालुवास्थान थिए– सोताको ढुङ्गो बालुवा, माझको बालुवा, बालिकुनाको बालुवा । विशेष गरी पहिलो बालुवा नै नुहाउन र बाउत खेल्न सजिलो र चर्चित स्थान हो । बालुवाको पानी चागो परेको, वारपार गर्न पनि सहज हुन्थ्यो । त्यहीँमाथि झुगलो (झोलुङ्गो) भएकाले मान्छेको आवतजावत बाक्लो हुने हुँदा भर पनि लाग्थ्यो ।

बाबियोको लट्ठा बाटेर दुवै किनाराको नेवमा बाँधी बिचमा दुदिलाका सेटा हालेर बनाइएको झुगलोमा मान्छे र भेडाबाख्रा मात्र तर्न मिल्थ्यो । गाईभैँसी घोडाघोडीहरू कर्णालीबाटै तारिन्थ्यो । कसैले यस्तै खाले पशुवस्तु किनेर ल्याएमा घाँटीमा डोरी बाधेर एक बाउते अगाडि एक बाउते पछाडि सिर्कनाले हान्दै तार्नुपर्थ्यो । एक दिन म र एक जना साथीले धौलागोहका मान्छेको गाई यसरी नै तार्‍यौँ । गाई तारेबापत एक मोहोर तराउनी पाएको थिएँ । त्यसपछि त कसैले वनबाट गाई धपाउँदै ल्याए पनि अब तराउनी मोहोर पाइन्छ भन्दै नदी किनारामा कुरी बस्थ्यौँ । हाम्रो समाजमा एउटा नैतिक संस्कृति के छ भने जो गोठालो जान्छ, साँझ घर फर्कंदा रित्तै आउँनै हुँदैन । घाँसदाउरा जे पाइन्छ, ल्याउनै पर्ने । यदि कोही गोठालो पशुवस्तुसँग रित्तै आएमा उसलाई अल्छे, धतुरे, फत्तुरे, बिनाकामको, गरी खान नसक्ने भनेर नैतिक प्रश्न उठाइन्छ र गिज्याउने गर्छन् पनि । गाउँघरको चलन, लोकलाजबाट बच्न पनि केही न केही ल्याउनै पर्थ्यो । म प्रायः दाउरा नै ल्याउँथे । दाउरा पनि बाङसो, कुकुवा, आखो, गुइँयटठो, मिहिण्या, धुच्चु आदिका झिँजामिजा । दिनभरि बाउत खेल्ने बालुवामा बालुवाको लिगुणी हाल्ने हाम्रो दिनचर्या थियो । पहिला पहिला घर भन्थ्यौँ पछि राष्ट्रकवि माधवप्रसाद घिमिरेको कलाकार अरनिको कविता किताबमा छापिएपछि मन्दिर भन्न थाल्यौँ । बालुवाको मन्दिर बनाउँदै उक्त कविता पाठ गर्थ्यौं । चैतवैशाखका लामा दिन फेरि नदीमा जति नुहायो उति भोक लाग्ने । अन्नि लिने चलन थिएन बिहान खायो एकैचोटि साँझ । कहिलेकाहीँ रोटी बचेका छन् भने मात्रै । नत्र अन्नि अनिवार्य थिएन ।

एक दिन त भोकले साह्रै भएको थियो । आँखा तिरमिर भएका थिए । पेटमा मुसा दगुर्न थालेका थिए । झुगलामा तराउनी माग्ने ठेकेदारहरू बस्थे । तराउनीबापत कहिलेकाहीँ रोटी, टाट्या (पुरी) खिर पनि मिल्थ्यो । म र साथी  जैपाल्या त्यही आसले झुगलातिर गयौँ । ठेकेदार हुनुहुन्थ्यो बाजे गम्भीर बम । उहाँले एकजना सिकु बाहुनकी छोरी माइतबाट पोइल गोठी जान आएकी रहिछन् उनले बाजेलाई तराउनी च्युरीको पातमा बाँधेको टाट्याको पोको दिइन् । हामीले देखिहाल्यौँ । मुख रसायो जिब्रोबाट पानी आउन थाल्यो लय ट्वाटकियो खाऊँ भन्छन् कि सोचेको त बाजेले त्यो पोको आफ्नो पट्नीमा बाँधेर पर गन्बान्नामाथि ढुङ्गाले च्यापेर पो राखे । आफू वर खणिकको रुखमुनि बसेर ताकु कात्न थाले । मैले जैपाल्यालाई भने ऊ दलितको छोरो भए पनि मसुर थियो । "ए, जाजा त्यो चोरेर ल्या बड्डो ताकु कात्तै छ था पाउँदैन । जैपाल्या पट्नीको नजिक के पुगेको थियो बाजेले देखिहाल्नुभो । ठुलो स्वरम ए, साले गधा भन्दै लट्ठी ल्याएर आइहाल्नुभो । ऊ भागेर बेपत्ता, मैले  पनि सुइँकुच्चा ठोकेँ । हाम्रो भेट भोलिपल्ट त्यै बालुवामा भयो । उसले हाँस्दै भन्यो, "बडडाले मकन मारिअल्याछिया यार ठाकुर, अब त्यसो नगर्ने यार दाइ बरु बाङसोको फूल खाने त्यहाँ पनि गुलियो रस हुन्छ नि । भोक लाग्यो भन्दैमा वन गएको गोठालो घर जान मिलेन । ठेकेदारले पनि सातो लिइहाले ।" त्यस दिनबाट हामीले नुहाएपछि भोक मेटाउन बाङसोको फूल चुस्न थाल्यौँ । कोही कोही यसलाई असुरो पनि भन्दा रहेछन् । जारकोटमा प्रशस्त पाइन्छ बाङसो । यसका पात काटेर धानको बेर्नामा पनि हालिन्छ । यसको फूल सेतो हुन्छ । फूलको पिँधमा गुलियो रस हुन्छ । यही रस चुसेर भोक मेटाउँथ्यौँ । यो रस चुस्न भँवरा, माहुरी, बारुला पनि आउँथे । हामी भोका मनुवा यी कीटपतङ्गलाई बाङसोकै झुप्पाले धपाएर रस चुस्दै अघाएपछि वनमा छरिएर रहेका गाईबाख्रालाई बटुलेर घाँसदाउराको भारीसँग साँझपख घर फर्किन्थ्यौँ । ■

# ऋषिङ्ग भ्रमणको झझल्को



◆ नारायणकैलाश सिग्देल



ऋषिङ्गे राजाले हतियार भण्डारण गर्ने स्थान वर्तमानको राईथोक गाउँको ठिक माथि अवस्थित छ । ऋषिङ्गे राजाको कोत हतियार भण्डारणस्थल हालको दुर्गा भवानी मन्दिरमा टोप, ढाल, खोडा र तरबारहरूको केही अवशेषहरू देख्न सकिन्छ । संरक्षणको अभावमा प्रायः सबै हतियार चोरी भइसकेको र हराएको अवस्था छ । हामीले थाहा पाउँदासमेत ३६७ वटा तरबारहर थियो । जुन म आफैँले गन्ने मौका पाएको थिएँ ।



नव वर्ष २०७९ को पावन उषासँगै हामी पाँच जनाले यात्रा सुरु गरेका थियौँ । यात्रा थियो भिमाद नगरपालिका मालेबगर हुँदै ऋषिङ्ग गाउँपालिकाको अन्तिम विन्दु भिरकोटसम्म । बिहान ९ बजे घरबाट प्रस्थान गर्ने योजनाबमोजिम म घरबाट निस्केको थिएँ । नारायण खनाल सर र मैले अन्य साथीहरूलाई "धेनुङ भन्ज्याङमा पर्खने जानकारी गरायौँ र हामी उकालो लाग्यौँ । धेनुङ देउराली भन्ज्याङमा अवस्थित 'धेनुङ देउराली खाजा पसल' पसेर नमकिन, समोसा र चना चपाइवरी सक्नु, विष्णु, विश्व र तीर्थ सर टुप्लुक्क भेटिनुभयो । उहाँहरू भेटिनुभन्दा पहिला मैले स्थानीय गजेन्द्र श्रेष्ठसँग यो ठाउँको नाम धेनुङ रहनुका कारण के होला भनी जिज्ञासा पोखेको थिएँ । यस सम्बन्धमा उनले धेरै वर्ष पहिले यहाँ मानवीय आवश्यकता पूरा गर्ने कामधेनु गाई थियो रे । कामधेनु गाई स्वर्गे भएपछि उनैको सम्झना स्वरूप पुर्खाले एउटा ढुङ्गोमा उनैको मूर्ति बनाएका रहेछन् । त्यसैको सम्झना स्वरूप यो ठाउको नाम कामधेनु हुँदै धेनुङ भएको जानकारी गराए । अर्को तर्क अनुसार धेनु+ल्हुम अर्थात् ढुङ्गामा कुँदिएको गाईको मूर्ति' भएकाले धेनुङ भनिएको हो भन्ने खबर पनि ग्रहण गर्‍यौँ ।

मोचबारीबाट ओरालो लागेको बाटो धारुङ भन्ज्याङमा पुगेर मैदानमा परिणत हुँदो रहेछ । घारुङ भन्ज्याङ निकै पुरानो ठाउँ हो भन्ने त सुन्दै आएको थिएँ । आजभन्दा २५ वर्ष पहिले त्यहाँ केवल ४, ५ वटा सामान्य प्रकारका घर थिए । तर यतिखेर भने बजारका दुवै किनारमा लस्करै भवन बनाउने प्रतिस्पर्धा नै चलेको पाएँ । धारुङ भन्ज्याङको झिनो बसाइपछि हामी ऋङ्ग ऋषिको तपोभूमि ऋषिङ्ग नामक गाउँको अवलोकनका लागि उकालो लाग्यौँ । धारुङ भन्नाले धाराबाट झरेको पानी यसको मतलब मगर भाषाको 'धारुङ डी'कै अपभ्रंश रूप धारुङ हो भन्ने लाग्यो । 'भन्ज्याङ'को अर्थ त दुई बाटाको सङ्गम वा मिलन भइहाल्यो ।

'धारुङ भन्ज्याङ–ऋषिङ्ग खण्ड' दुरीको हिसाबले खासै लामो छैन अपितु ती दुई स्थानका बिचमा जैविक विविधताको अन्तर भने निकै रहेको पायौँ । यति छोटो दुरीको ऋषिङ्ग खण्डमा पनि लाली गुँरास, चुत्रो, मगरकाँची, चौटाजोरलगायतका जडीबुटी र वनस्पती पाइँदो रहेछ । त्यहाँ त डरलाग्दा पहाड, छङ्गासुर भिर, बज्र चट्टाने पहरोलाई चिरेर निर्माण भएको फराकिलो मोटरबाटो देख्दा हामी त छक्क पर्‍यौँ । परापूर्व कालदेखि नै आडैमा रहेको चौतारी जसलाई ऐरी चौतारी भनेर चिनिने गरिन्थ्यो, त्यसको स्वरूप देख्न नपाउँदा मन भने खिन्न भयो ।

### कुण्ड

शृङ्ग ऋषिको तपोबलले जमिनमा त्रिशूल धसेर एकातिर सेती र अर्कोतिर काली नदीको पानी उत्पन्न गराई स्थानीयका लागि उपलब्ध गराएको भन्ने किंवदन्ती रहेछ । समुन्द्रको सतहदेखि करिब एक हजार एक सय २० मिटरको उचाइमा अवस्थित त्यो कुण्ड त्यस निर्जर, बन्जर र सुक्खा डाँडाको छातीमा रहनु पक्कै पनि सबैका लागि एउटा आश्चर्यको विषय हुन सक्छ । प्रकृतिको चमत्कारपूर्ण रहश्यको बखान गर्दै शिर झुकाएर त्यो कहिल्यै पानी नसुक्ने कुण्डलाई नमन गर्‍यौँ ।



रानीपोखरी गाविसबाट २०७२ मा ऋषिङ्ग गापामा परिणत भएपछि उक्त ऐतिहासिक तर जीवित कुण्ड नजिकै एउटा आकर्षित मन्दिर निर्माण भएको रहेछ। साथैमा परासर ऋषिको पद्म आशनमा बसेको लोभलाग्दो मूर्ति पनि रहेछ। जनै भिरेको परासर ऋषिको सेतो र आकर्षक मूर्तिले विश्वलाई शान्तिको शिक्षा दिनका लागि एउटा हात उठिरहेको थियो। मैले आशीर्वादयुक्त हातमा माथा तेर्स्याएर 'लेखकीय शौभाग्य प्राप्त होस्' भन्ने कामना गरेँ।

## ऋषिङ्ग राज्यको सङ्क्षिप्त इतिहास

ऋषिङ्ग राज्यको छोटो परिचयः बाईसी–चौबिसी राज्यको पालामा ऋषिङ्ग पनि एक छुट्टै राज्य थियो। ऋषिङ्ग राज्य सुरुमा मगर राजाहरूको हातमा थियो। दक्षिणबाट आएका राजपुतले मगरहरूबाट राज्य हातमा लिए। पाल्पाका राजा मुकुन्द सेनका समयमा यो राज्य पाल्पाकै अधीनमा थियो। मुकुन्द सेनपछि यो राज्य टुक्रियो। राम सेन ऋषिङ्गको पहिलो राजा बने (अधिकारी (शास्त्री), हेम राज, पृष्ठ ७३, २०५८ वि, आजको नेपाल, नारायणी प्रिन्टिङ नयाँ बानेश्वर, काठमाडौँ)।

ऋषिङ्गका राजाहरू राम (सिंह) सेन (१६ औँ शताब्दी), राजपाल सेन (१६२८), भृङगी सेन (१६२८), गोवर्धन सेन, दयालु सेन (मधुसूदन सेन), दामोदर सेन (१७१०) राजगद्दी, वेणी (माधव) सेन भएका बेलायती लेखक ह्यामिल्टनद्वारा लिखित पुस्तक अकाउन्ट अफ नेपाल (पृष्ठ ७६, विस १८२८) मा उल्लेख छ। इसाको १४ औँ शताब्दीतिर कर्णाली प्रदेशका खस क्षेत्रीहरू कमजोर भएबाट सेनवंशी राजाहरूको नेपाल आगमन हुनुपूर्व तनहुँमा आदिवासी मगरहरूले साना राज्यहरू स्थापना गरेको नेपाल परिचय, पृष्ठ १७५, त्रिविविमा स्वष्ट गरिएको छ।

अकाउन्ट अफ नेपालमा विस १६१० तिर पाल्पाका राना मुकुन्दसेनका भतिज राजसेनले ऋषिङ्गमा राज्य

गरेका र यिनी निःसन्तान भएपछि तनहुँ राज्यमा गाभिन गएको पाइन्छ । ऋषिङ्ग राज्यमा मणिमुकुन्दसेन प्रथमका भतिज राम (सिंह) सेनले शासन गरेका थिए । ऋषिङ्गका दोस्रो राजा राजपालसेन (राजसेन) निःसन्तान भएको हुनाले उनले राजपुरको राजा सुल्तानसेनका राजकुमार तुलासेनलाई धर्मपुत्र बनाएका थिए । तुलासेनका नाति दामोदरसेनले आफ्ना टुहुरा भाइ दयालु सेनलाई ऋषिङ्ग राज्यको राजा बनाएका थिए । तत्पश्चात उनका छोरा मुकुन्दसेनको शासन चल्यो ।

ऋषिङ्गे राजाले हतियार भण्डारण गर्ने स्थान वर्तमानको राईथोक गाउँको ठिक माथि अवस्थित छ । ऋषिङ्गे राजाको कोत हतियार भण्डारणस्थल हालको दुर्गा भवानी मन्दिरमा टोप, ढाल, खोडा र तरबारहरूको केही अवशेषहरू देख्न सकिन्छ । संरक्षणको अभावमा प्रायः सबै हतियार चोरी भइसकेको र हराएको अवस्था छ । हामीले थाहा पाउँदासमेत ३६७ वटा तरबारहर थियो । जुन म आफैँले गन्ने मौका पाएको थिएँ । आज हतियार भण्डारण कोतलाई दुर्गा भवानी मन्दिरको नाममा संरक्षण गरिएको छ । जहाँ बडादसैँ र चैते दसैँमा भव्य मेला लाग्ने हुँदा टाढा टाढादेखि भक्तजनहरू आउने गर्दछन् । विस २०३० साल फागुन महिनामा ऋषिङ्गे राजाको हतियारहरू कोत (हालको दुर्गा भवानी मन्दिर) बाट चोरी भयो । चोरी गरिएका हतियार चोरहरूले पहिले रूपटार नजिकको वन भोटेवनमा लगेर राखेको र तेस्रो दिनमा गरगती घाटबाट डुङ्गामा तारेर लान खोज्दा डुङ्गा नचलेपछि माझीले डुङ्गा नचल्नुको कारण बुझ्न खानतलासी गर्दा ऋषिङ्गे राजाको भण्डारण गरिराखिएको हतियार चोरेर ल्याइएको पाइयो । जसबाट के प्रमाणित हुन्छ भने दुर्गाभवानीको नाममा संरक्षण गरी राखिएको हतियारमा ईश्वरीय शक्ति छ । त्यसपछि सबै गाउँले सोही ठाउँमा गएर बाजागाजसहित ऋषिङ्गे राजाको कोतमा ती हतियार ल्याइएको जानकारी स्थानीय समाजसेवी जङ्गवीर आले (वर्ष ६५) ले दिनुभयो ।

ऋषिङ्गे राजाको टुँडिखेल, सैनिक परेड खेल्ने ठाउँ हाल कमार्दी अर्थात् ढुङ्गेपानीमा रहेको थियो । जहाँ ठुला ठुला गराहरू आज पनि देख्न सकिन्छ । रानी कहिलेकाहीँ वन बिहार अर्थात् शयर जाँदा बस्ने हुनाले भोटे वनमा रानीबास भन्ने एउटा ठाउँको नाम रहेको छ । ऋषिङ्गे राजा भोटेवनमा सिकार गर्न, लुम्दी, गरगती घाट स्नान गर्न र आम घाट गर्गेश्वोर महादेवको दर्शन गर्न जाँदा राजाले बाटोमा खाने गरेको पानीको मूल (राजाको मूल) हाल आएर अपभ्रंश भई रजमूल दुई खोलाको दोभानमा देख्न सकिन्छ । राजा हिँड्नका लागि बनाएको सिँढीको बाटो अझै धेरै ठाउँमा देख्न सकिन्छ । राजाले तीर्थ गर्ने गर्गेश्वर महादेव आज गरगती घाट हाल ज्वाला खोलाको दोभानको ठिक पश्चिमपट्टि अवस्थित छ । ऋषिङ्गे राजाले तीर्थ गर्न, गङ्गामा स्नान गर्न र गर्गेश्वोर महादेव मन्दिरको दर्शन गर्न जाने गरेको भन्ने किंवदन्ती छ । ऋषिङ्गको कुँडहरमा राजाले घोडा राख्ने गरेको किंवदन्ती पाइन्छ (जहाँ चारैतिर घेरेर बनाएको ठाउँ भएकाले त्यस ठाउँको नाम कुडहर रहन गएको हो) । ऋषिङ्गे राजाको जेलघर धेरै पछिसम्म पनि दोस्दी खानेपानी सल्लाघारी अगाडि रहेको प्रत्यक्षदर्शी बताउनुहुन्छ । उहाँकै भनाइ अनुसार ऋषिङ्गे राजाको पुरोहित बडागुरुज्यु बस्ने ठाउँ बडागाउँ (बडा बस्ने गाउँ) भएकाले ऋषिङ्गे राजदरबारमुनिको गाउँको नाम पनि बडागाउँ रहन गएको हो ।

सो उचाइबाट हामीले पश्चिममा झिरुवास, मचवारी, च्याचुल, वनडाँडा, मानपुर, धेनुङ, साभुङ हटियालगायतका बस्ती छर्लङ्ङ देख्यौँ । त्यसरी नै उत्तरमा पल्टाङ, डाँक, बतासे, छाङ, सुनाकोट, साभुङ, मिछुर्लुङ, कुवाकोट, आमडाँडा, र दक्षिणतिरका धेनुङ, मोहोरिया, धारुङ, मोचबारी, बल्छीगौँडा, गवादीलगायत थुप्रै बस्ती देख्ने शुभ अवसर प्राप्त गर्‍यौँ । कुण्ड परिसरको ठाउँलाई परापूर्वकालदेखि नै 'अजम्बरी' भनिँदो रहेछ । 'अजम्बरी' को तात्पर्य "ऋङ्ग ऋषिको तपस्याले' उत्पन्न गराएको सेती र काली नदीको पानी जस्तोसुकै खडेरीमा पनि नसुक्ने हुनाले भनिएको रहेछ । त्यस परिसरमा निर्माण गरिएको कुवा सानो, साघुँरो र असुविधाजनक छ तथापि हजारौँ मानिसको कुण्डप्रति अथाहा श्रद्धा कायमै छ ।

त्यस ठाउँका जानकार दीपक माविका प्रअ विश्वराज गैह्रेको धारणा पनि पूर्ववत् नै भएको अभिव्यक्ति दिनुभयो । सरस्वती मावि साभुङका सामाजिक विषयका पूर्वशिक्षक तीर्थराज गैह्रेका अनुसार त्यस ठाउँमा विगतका वर्षमा धुमधाम मेला लाग्ने गर्थ्यो तर हिजोआज भने त्यो चलन छिमलिँदै गएको छ ।

अजम्बरी परिसर पश्चात् हामी बालपुर, रानीपोखरी हुँदै ऋषिङ्गको मुटु भनेर चिनिने हवेली डाँडामा पुग्यौँ । हवेली डाँडामा रहेको शिव सरस्वती मावि जिल्लाकै पुरानो हाइस्कुलमध्येकै एक हो । २०६३ सालको एसएलसी परीक्षा सञ्चालनका लागि सुपरिटेनडेन्ट भएर म त्यहाँ गएको थिएँ । त्यतिखेर विद्यालयको भौतिक अवस्था निकै नाजुक थियो । आकाश सफा थियो । परपरका डाँडाहरू, तिनै डाँडाको काख र थाप्लोमा थुपुथुपु बसेका अनगन्ती परपरका बस्तीहरू निकै लोभलाग्दा देखिँदा रहेछन् । समुन्द्रको सतहदेखि एक हजार १५० मिटरको उचाइमा अवस्थित हवेलीबाट त परपरका बस्तीहरू सूर्यको पारसमणिमा टिमिटिम गरिरहेका थिए ।

## पोखरी भन्ज्याङ

पोखरी भन्ज्याङमा केही वर्ष पहिले सुनसान थियो। त्यो फराकिलो चउरको पल्लो छेउमा ऋषिङ्ग गाउँपालिकाको नव निर्मित तीनतले भव्य भवन देख्दा हाम्रा मन रोमाञ्चित भए, हिमाल झैँ हाँसे।

दीपक माविका पूर्वशिक्षक एवं ज्योतिष विष्णुहरि गैह्रे भन्दै हुनुहुन्थ्यो, "यहाँ करिब ३० वर्ष पहिले एउटा ठुलो पानीको पोखरी थियो। त्यही पोखरीको नामबाट यो ठाउँको नाम पोखरी भन्ज्याङ रहन गएको हो। अहिले पोखरी हटाएर पालिकाको कार्यालय बनेकाले यो ठाउँलाई पालिका भन्ज्याङ भन्न उपयुक्त हुने तर्क प्रस्तुत गर्नुभयो।

हामी एक हजार १५० मिटरको डाँडोबाट ओर्लेर करिब आठ सय मिटर तल रहेको जैसीहटियामा झरेका थियौँ। सानो उपत्यका जस्तो लाग्ने त्यो ठाउँ निकै रमाइलो रहेछ। स्थानीय समुद्र थापाका अनुसार उक्त हटियामा ५० घर मगरका मात्र छन्। सो गाउँलाई पुरानो कोटदरबार भनेर पनि चिनिँदो रहेछ।

हामी गोठादी पुग्यौँ। यसको वास्तविक अर्थ 'गोठाङ डी' हो। उहिलेका मानिसहरू प्रायः गाउँबेँसी गर्ने चलन थियो। कतै कतै यद्यपि छ नै। हरेकका बेँसीमा गोठ हुन्थे। ती गोठमा माटोका भाडामा पानी राख्ने चलन थियो। घरमा आउने पाहुनाले 'डी कुला ले ?' 'पानी कता छ ?' भने होलान् ? त्यसको प्रतिउत्तरमा घरमुलीले 'गोठाङले डी' 'गोठमा छ पानी' भने होलान्। त्यही 'गोठाङ डी' कालान्तरमा अपभ्रंस भई 'गोठादी' भएको अनुमान लगाएँ।

अगाडि बढ्दै गर्दा 'ढुङ्गाडे' भन्ने ठाउँमा हाम्रा बाइक एकाएक रोकिए। म खुट्टाले हिँडेर एक पटक र अर्को पटक बाइकमा करिब १५ वर्ष पहिले त्यहाँ पुगेको थिएँ। त्यतिबेला बाटो छेउछाउमा बनाइएका घर झुप्रा, साना र असुविधाजनक थिए। तर अहिले भने त्यो ठाउँ सफा, सुन्दर र फराकिलो भएछ।

बाटोको उत्तरतिर भएको अग्लो चउरलाई सम्म बनाइ ऋषिङ्ग गापाको कार्यालय बनाउन भनिएको रहेछ। तर अग्लो चौरको ढिस्को फालेर सम्म बनाइँदै गर्दा बिचमा अजङ्गको कडा चट्टान निस्केको रहेछ। त्यो चट्टानको ढिस्को फाल्दा डोजरका दाँत भाँचिएकाले डोजर फिर्ता गएको कुरा पनि सुन्न पायौँ।

विसं १८१७ सालभन्दा पहिला नेपालको पश्चिमतिर २२ र उत्तरतिर २४ राजाहरू थिए। तनहुँमा पनि थुप्रै ठाउँमा ससाना राजाहरू भएको इतिहासले प्रमाणित गर्छ। यसै सन्दर्भमा यो ठाउँको नाम किन र कसरी 'ढुङ्गागाडे हुँदै ढुङ्गाडे' भयो भन्ने जिज्ञासा पलायो। स्थानीय ज्येष्ठ नागरिकद्वय रेवतीरमण र टङ्कलाल रानाभाटज्यूलाई यो ठाउँको नाम 'ढुङ्गागाडे' कसरी रह्यो भन्ने जिज्ञासा पोख्दा उहाँ दुवैले परापूर्वकालमा सात दिनकी सुत्केरीले, हेर्नुस्त ऊ (बुढी औँलाले परको अग्लो ढुङ्गो देखाउँदै) त्यो ढुङ्गा गाडेकीले यो ठाउँको नामै ढुङ्गागाडे भएको हो। तर हिजोआज ढुङ्गागाढेलाई जनजिब्रोले ढुङ्गाडे भन्न थालेका छन्।

मैले स्थानीय कुलबहादुर बर्देवा, बद्री र भक्तबहादुर रानाभाटसँग पनि यसबारेमा जिज्ञासा राखेको थिएँ। उहाँहरूले माथिको भनाइलाई पनि मान्यता दिँदै अर्को तर्क पनि प्रस्तुत गर्नुभयो। उहाँहरूका भनइअनुसार यहाँबाट (हातले देखाउँदै) मास्तिर ऋषिङ्गे राजा र तलतिर भिरकोटे राजाले राज्य गर्दा रहेछन्। ती दुवै राज्य साँधको विषयलाई लिएर सधैँ झैझगडा गर्दा रहेछन्।

अब उप्रान्त झैझगडा नहोस् भन्नाका लागि उनीहरूले यस क्षेत्रलाई साँध मानेर एउटा ठुलो र लामो ढुङ्गो गाडेका रहेछन्। त्यसैको नामबाट यो ठाउँको नाम रहन गएको हो।

भिरकोटे र ऋषिङ्गे राज्य भएको सही कुरा हो। ती राज्यहरू आपसमा विविध विषयलाई लिएर झगडा गरिरहन्थे होला। यहाँ ढुङ्गा गाडेको कुरा पनि सही हो किनभने यहाँ यो मन्दिर परापूर्वकालदेखि नै अवस्थित छ र मन्दिरभित्र एउटा असाधारण लोहोरो आकारको कलात्मक र चिल्लो ढुङ्गो पनि छ। उनीहरूले उक्त ढुङ्गो सुत्केरी महिलालाई नै किन गाड्न लगाए त भन्दा– सुत्केरी महिला बिटुली हुन्छिन्। उनले छोएको वस्तु अरूले छुन हुँदैन भन्ने धार्मिक मान्यतालाई प्राथमिकता दिएका होलान्।

बडो रमाइलो भयो भिरकोट गाउँको घाँटीमा रहेको मानादी खोलामा पुग्दा। छेवैमा अवस्थित सूर्यकुमार श्रेष्ठको घर जहाँ मैले १२ रात बिताएको थिएँ। त्यहाँ पुग्दा आफ्नै घर पुगे जस्तो लाग्यो। कुरा के थियो भने १६ वर्ष पहिले सुपरिटेन्डेन्टट भएर बाल विकास माविमा एसएलसी परीक्षा सञ्चालनको लागि गएको थिएँ।

त्यसपछि हामी पाँचै जना सीधै भिर्कोट देउराली पुग्यौँ। अलि अगाडि निर्माणाधीन स्वास्थ्य केन्द्र भवन परिसर पुग्यौँ। त्यहाँ भवन निर्माणको कार्य सुस्त गतिमा भएको पायौँ।

भवन बन्दै गरेको ठाउँबाट नवलपुर जिल्लाका समग्र पश्चिमी भाग देखिँदो रहेछ। त्यहाँको समथर भूभाग र त्यो भूभागमा निर्माण भएको चार लेनको फराकिलो पक्की सडकले हाम्रा मन पनि फराकिलो बनायो। हामी करिब २० मिनेट जति त्यही रमाइलो हेर्‍यौँ र पुनः आएकै बाटो फर्कियौँ। ■

# देउडा गीत हिजो, आज र भोलि



◆ नन्दकृष्ण जोशी

२०३८ देखि ५५ सालको कालखण्डलाई देउडा गीतको स्वर्णिम युग ठान्छु । रेडियो नेपालमा गीत रेकर्ड गरेको १४ वर्षपछि देउडाका कुशल गायक नरेन्द्रराज रेग्मी र भोजराज भट्टले पनि मौलिक भाका रेडियोमा रेकर्ड गरे । सुदूरपश्चिमका यी दुई लोकप्रिय गायकको म प्रशंसक हुँ ।

**देउडा गीतको परिचय**

नेपालका मौलिक संस्कृतिको नाम हो देउडा, ड्यौण, डेउडा । देउडा गीत बन्नका लागि गीतका दुई वटा चरण मिलाएर गाइन्छ । अति प्राचीन संस्कृति बोकेको देउडा, गीतका साथै खेल पनि हो, साथै सजिलो र मार्मिक साहित्य पनि हो । देब्रे गोडा पहिले उचालेर गीतको लय र भाका अनुसार देब्रेबाट दाहिनेतिर ढल्किँदै र गीतको लयलाई डेढ पटक उच्चारण गरी घुमिन्छ भने यस्तो विधि र शैलीलाई ड्यौणा, देउडा भनिन्छ । यी गीतहरू पूर्णरूपमा लोकछन्दमा आधारित हुन्छन् । यी गीतहरू २८ अक्षरमा बनेका हुन्छन् । दुई वटा हरफ हुन्छन् । पहिलो हरफमा १४–१४ अक्षर हुन्छन् । पहिलो हरफले गीतको उपस्थिति जनाउँछ भने दोस्रोले व्याख्या गर्छ । जस्तो–

*कालीको धोक्किन्या माछो कर्णालीका भेल*
*सधैँ छ जेठको धूप कैल्ये होला सेल ?*

गीतले काली कर्णाली नदीको विशेषता बोकेको छ । महाकालीमा देखिने माछोलाई प्रतीकका रूपमा लिएको छ जुन कर्णालीमा बाढी आउँदा त्यहाँ देखिने गर्दछ अर्थात् यी नदीमा बाढी आउँदाका बखत नदी छेउछाउका बासिन्दाले पाएको दुःख र उर्वरा खेतहरूमा पुऱ्याएको नोक्सानीको चर्चा गरेर साध्य नै छैन । मानिसलाई जेठ, वैशाखको गर्मीले जति दुःख दिन्छ, त्यति नै दुःख गरिबी, विछोड, अव्यवस्थित समाज, शिक्षा, स्वास्थ्य, कुपोषण घटनाले सधैँभरि कर्णाली, महाकाली र सेती आसपासका बासिन्दाले पाउँदै आएका छन् । यी पीडाबाट छुटकारा कहिले पाइएला र शीतल कहिले होला ? गीतकारले यस्तै कल्पना गर्दछन् ।

डेढी कदम उचालेर गाइने, डेढ पटक नै उच्चारण गरेर गाइने भएकाले ड्यौणा भनिएको हो । धेरै सर्जकले आफूखुसी आआफ्नो तर्क दिएर नामकरण गरेका छन् । गीतहरू संस्कृति र समाजपरक हुन्छन् । देउडाले पनि समय, काल परिस्थितिको प्रतिनिधित्व गर्ने गर्छन् । देशका अन्य भागमा प्रचलित लोकगीत, झ्याउरे लोकगीत, मारुनी, सालैजो, काँठेगीतभन्दा भिन्नै विशेषता बोकेका हुन्छन् देउडा गीतले ।

खेल खेल्दा डेढ कदम उचालेर, हातमा हात समातेर गीतको लयमा देब्रेबाट दाहिनेतिर घुमेर खेल्नु पर्छ । गीतका शब्द शब्दमा डुबेर अर्थ बुझेर मात्र खेलेको मज्जा आउँछ । गीत सवाल जवाफमा आधारित हुन्छन् । खेलाडीहरू दुई समूहमा बाढिएका हुन्छन् । दुवै समूहमा १/१ जना गीताङ्गी हुन्छन् जसलाई डेउणीया वा आशुकवि भनिन्छ । सवाल जवाफमा चल्ने हुँदा वास्तवमा देउडागीत मर्यादित दोहोरी गीत पनि हुन् । एक समूहको व्यक्तिले अर्को समूहको व्यक्तिलाई गीतमा प्रश्न गर्छ, दोस्रो समूहको व्यक्तिले सोको उत्तर दिन्छ । सवाल जवाफमा आधारित हुने हुँदा देउडा खेलको आदि र अन्त्य गीतबाट नै हुन्छ । घटौँसम्म, दिनभरि रातभरि चलिरहन्छ देउडा खेल । थकाइ, भोक, प्यास मेटाइदिन्छन् सवाल जवाफका मीण मीण देउडा गीतले ।

पङ्क्तिकार सानो छँदा देउडा गीतहरू वनजङ्गलमा मात्र गाएको सुनेको थिएँ । दाइ जयकृष्णसँग गाईवस्तु चराउन जाँदा, आमा गङ्गामतीसँग स्याउली सोत्तर काट्न जाँदा रहरले जङ्लमा जाने गर्थें । रुखहरू देखेर बडो आनन्द लाग्ने गर्थ्यो । त्यसबेला आमा गङ्गामती देवी र गाउँका आमाहरूले मिठो शैलीमा

गीत गाइरहन्थे। आमाहरू र दाजु जयकृष्णले घाँसदाउरा गर्दा गाएका गीतहरू सुनेर म हुर्किएँ। मोहनी लगाए ती वनगीतले। तिनै वनगीतले बिस्तारै गाउँमा प्रवेश पाए, खेलका रूपमा प्रवेश पाए। गुन्युचोलो र मुन्याठो लगाएर गाउँका भाउजूहरू, नानीहरू (सानीआमा) र ओल्लो पल्लो गाउँका रौल्या, धामी, विष्ट, थापालगायत समुदायका महिलाले आपसमा खेल खेलेको पनि देखेको छु। त्यो गीति तस्बिर ताजा छ मेरो मुटु र मस्तिष्कमा। सञ्चारको कुनै सम्भावना नभएको त्यस बेला आमाहरू र दाजुहरूले सारै मिठा भाका र शब्दका गीतहरू गाएको सुनेकाले होला सायद म गायक बनेको।

अध्ययनका क्रममा विद्यालयहरूमा गीतहरू धेरै पटक सुनाएको छु। तिसको दशकताका तत्कालनी प्रमुख जिल्ला अधिकारी (सिडिओ) का हातबाट गीत गाएबापत पाँच रुपियाँ पुरस्कार पनि पाएको थिएँ। म २०३४ साल साउनको ५ गते बझाङ, डडेलधुरा, कैलाली यात्रा गर्दै भारतका केही क्षेत्र काठमाडौँ पुगेँ। ती ती स्थानमा डेउडागीत गाउँदै हिडेँ। यसै समयमा संस्कृतिकर्मीसँग देउडागीत पनि राजधानी काठमाडौँ पुग्यो। २०३४ साल कात्तिक १४ गते रेडियो नेपालको भाषाभाषीको साङ्गीतिक कार्यक्रम 'फूलबारीमा' देउडागीत गाएँ। त्यसभन्दाअघि महाशङ्कर देवकोटा र परिमल स्नेहीले पनि गाएका थिए तर ती झर्रो खालका देउडागीत थिएनन्। मौलिकपन र झर्रो किसिमको देउडागीत रेडियो नेपालमा पहिलो पटक बीजारोपण गर्ने पङ्क्तिकार म हुँ। सो गीत रेकर्ड गर्नमा गायक तथा सङ्गीतकार रत्न बेहोसीले सहयोग गर्नुभयो। कार्यक्रम सञ्चालक विश्वबल्लभ थिए। फूलबारीमा ती वर्षसम्म देउडागीत गाएँ। पहिलो गीत यस्तो थियो।

*बारीको खेत बगाई लैग्यो पारिका खोलाले*
*राधिकाको दर्शन होइझाऊ कृष्णका चोलाले*
*लय..... ओ वाज झम्प्रौली वाज।*
*वौजुका कम्पनीमाला दाइक्यान मास्दा हुन्*
*मन् भन्या साउनका रात दन्तक्यै हास्दा हुन्।*
*ठाडी भाकामा।*

## विसं २०३७ देखि २०५७ स्वर्णिम काल

२०३७ सालमा स्वर परीक्षामा उत्तीर्ण हुन पाउँदाको खुसी बेग्लै थियो। २०३७ साल वैशाखमा जनकविकेशरी धर्मराज थापाको उपस्थितिमा मौलिक देउडा गीत रेकर्ड गर्न पाउँदा आफूलाई भाग्यमानी कलाकार सम्झेँ। त्यसपछिका दिनहरूमा लगातार मौलिक देउडागीत रेडियोमा रेकर्ड गर्दै गए। रेडियो नेपालमा मौलिक गीत गाउने कलाकारका रूपमा सबैसामु परिचित हुन पाउँदा गर्विलो अनुभूति भएको थियो। सुप्रसिद्ध सङ्गीतकार गणेश परियार, मदन परियार, लोकगायक एवं वाद्यवादक सुन्दर श्रेष्ठ (रेशम फिरिरी), युक्त गुरुङ, प्रशासक दामोदर अधिकारी, लोकगायक झलकमान गन्धर्व, गायक सूर्य थुलुङ, मधुबाबु थापा, गायिका चन्द्रकला शाह, कविता आले, प्राविधिक पुरुषोत्तम पोखेल, वासुदेव रायमाझी पङ्क्तिकारले सम्झिरहने नामहरू हुन्।

## प्रथम पुरस्कार

विसं २०४३ सालमा अधिराज्यव्यापी लोकगीत प्रतियोगितामा देउडागीत गाएर प्रथम पुरस्कार प्राप्त गर्ने भाग्यमानी गायक सम्झन्छु आफूलाई। वर्तमान समयसम्म देउडा सर्जकले प्रथम स्थान हासिल गर्न नसक्दा दुःख लाग्छ। झन्डै ३ दर्जन देउडाका कालजयी गीतहरू रेडियो नेपालमा रेकर्ड भइसकेका छन्। २०४४ देखि २०५७ सालसम्म अनामनगरस्थित म्युजिक नेपालमा २० वटा देउडागीति क्यासेट मैरै लगानीमा रेकर्ड गरेर सुदूरपश्चिममा सांस्कृतिक जागरण ल्याउनु र देउडाको पुनरुत्थानमा योगदान दिन पाउनु सांस्कृतिक क्रान्ति हो भन्ने लाग्छ। एकलव्य भएर लागि पर्दा वर्तमान जनजनमा देउडा लोकप्रिय भएको पाउँछौँ।

अतः २०३८ देखि ५५ सालको कालखण्डलाई देउडागीतको स्वर्णिम युग ठान्छु। रेडियो नेपालमा गीत रेकर्ड गरेको १४ वर्षपछि देउडाका कुशल गायक नरेन्द्रराज रेग्मी र भोजराज भट्टले पनि मौलिक भाका रेडियोमा रेकर्ड गरे। सुदूरपश्चिमका यी दुई लोकप्रिय गायकको म प्रशंसक हुँ। सत्र वर्षको अवधिमा सुदूर र कर्णालीका प्राचीन भाकाहरू, मौलिक लयहरू पङ्क्तिकारलगायतका कलाकारले रेकर्ड गरेर गीति क्यासेटमार्फत जनजनमा पुऱ्याइसकेकाले त्यो युग वास्तवमा देउडा गायन र संस्कृतिको स्वर्णिम युग नै हो।

## पाकिस्तान देउडागीत रेकर्ड

त्रिभुवन विश्वविद्यालय कीर्तिपुर राजनीतिशास्त्र विषय मानविकी सङ्काय अन्तर्गतका हामी ४१ जना विद्यार्थी दक्षिण एसियाली मुलुकको शैक्षिक भ्रमण गर्ने उद्देश्यले विसं २०४१ सालमा भारत हुँदै पाकिस्तान पुगेका थियौँ पाकिस्तानका लागि नेपाली राजदूत निरञ्जन भट्टराईले हामीहरूलाई हार्दिकताका साथ पाँच दिनसम्म राजदूतावासको कार्यालयमा राख्नुभयो। धेरै राजनीतिकर्मी, विश्वविद्यालयका प्राध्यापक एवं विद्यार्थीहरूसँग हाम्रो भेटघाट र मित्रवत् घनिष्ठता बढ्यो। पाकिस्तानका नागरिकले नेपाल र नेपालीलाई उच्च सम्मान दिँदा रहेछन्। राजदूत भट्टराईको पहलकदमीमा पाकिस्तान टेलिभिजनमा हामीले आधा घण्टाको गीति कार्यक्रम प्रस्तुत गऱ्यौँ। मैले देउडागीत गाएँ। मथुरा प्रधानले आधुनिक गीत र महेश पौडेलले आधुनिक पप गीत गाए। रमेश तुफानले कविता सुनाए। साथीहरू मुकुन्द ढुङ्गाना,



युवराज खाती, धनप्रसाद पण्डित, अनार बस्नेत, मोहन बस्नेत (निवर्तमान स्वास्थ्यमन्त्री) ले सङ्क्षिप्त रूपमा शैक्षिक भ्रमणको औचित्यमाथि प्रकाश पारे। हामीले गीत गाउँदा हौसिएर सबै साथी र त्यहाँका दर्शकले तालीले स्वागत गरे। मुवारक अलि नामक गितारवादकले अनौठो तरिकाले देउडा गीतमा धुन भरे। हामीसँगै अभिभावकका रूपमा प्रा. यशोदा सुवाल र प्रा. अनन्तराज पौडेल पनि जानुभएको थियो। पुस २१ गतेदेखि माघ मसान्तसम्मको सो भ्रमण मेरा लागि त साङ्गीतिक भ्रमण पनि रह्यो।

## राजधानीमा देउडा खेल

ललितपुर जिल्लाको गोदावरीमा वनभोजमा पूर्वप्रम शेरबहादुर देउवा, टेकबहादुर चोख्याल, हीरादत्त भट्ट, एनपी साउद, गोविन्दबहादुर शाह, अर्जुनजङ्ग बहादुरसिंह, सुरेश मल्ललगायतका नेताहरूको जमघटमा हामी देउडा खेल्ने गर्थ्यौं। त्यो समय थियो विसं

२०३५ सालदेखि २०४१ सम्म। विसुपर्व, गौरापर्वमा खुल्लामञ्च टुँडिखेल, राष्ट्रिय सभागृह, नेपाल प्रज्ञा प्रतिष्ठान कमलादीमा हजारौँ व्यक्ति जम्मा भएर देउडा खेल्ने गर्थ्यो। देउडा समाज, प्रशंसा संरक्षण समाज, बैतडी समाजले प्रत्येक वर्ष कार्यक्रमको आयोजना गर्ने गर्थे। अम्बादत्त भट्ट, हरिमोहन भण्डारी, पङ्क्तिकारलगायतले कार्यक्रमको आयोजना गर्ने गर्थ्यौं। कार्यक्रममा पूर्वप्रमहरू शेरबहादुर देउवा र लोकेन्द्रबहादुर चन्द, दिलेन्द्रप्रसाद वडू, चन्द्रदेव जोशी, डिपी भण्डारी, चेतराज पन्त, दीर्घसिंह बम, भक्तबहादुर बलायर, रामबहादुर विष्ट, लेखराज भट्टलगायत व्यक्तित्वको उपस्थिति रहन्थ्यो।

## सांस्कृतिक र साङ्गीतिक जागरण

गीति क्यासेटमा कभर राख्न चार कलरको व्यवस्था नेपालमा आइकेको थिएन। सल्यानका साथी गौरीशङ्कर डाँगीमार्फत २०४४ सालमा बम्बैमा स्क्यानका लागि पठाएँ। साथीले ठुलो गुन लगाउनुभयो। एकातिर स्टुडियोमा गीत रेकर्ड गर्नुथियो, अर्कोतर्फ प्राविधिक कार्य पनि सँगसँगै गर्नुपरेको थियो। यसका अतिरिक्त बजार व्यवस्थापन पनि आफैँले गर्नुपर्दा जिम्मेवारी निकै बढेको थियो। भौगोलिक विकटताले गर्दा बजारमा तयारी अवस्थाका गीति क्यासेट पुऱ्याउनु पनि कठिन कार्य थियो। भारतको बाटो भएर कैलाली कञ्चनपुरका बजारमा तयारी अवस्थाका गीति क्यासेट पुऱ्याई आफ्नै मुलुकका मौलिक गीतहरू सुनाउनु

मेरा लागि चुनौती र अवसर दुवै थियो ।

विसं २०४६ देखि २०५७ सालसम्म आफैंले महेन्द्रनगर, धनगढी, टीकापुर, नेपालगन्ज, सुर्खेत, बझाङ, डडेलधुरा, जुम्लामा बजार व्यवस्था र आफैंले पहाडीमूलका भाकाहरू सङ्कलन गरी गीतहरू रेकर्ड गरेँ । यसपछि क्रमशः हिन्दी गीतहरू बजारबाट विस्थापित मात्र भएनन् नाम चलेका नेपाली गायकगायिकाका गीतको ठाउँमा जतातत‍ै देउडा गीतको रन्कोले सुदूर र कर्णाली प्रदेश सङ्गीतमय बन्यो । काम ज्यादै जोखिमपूर्ण थियो तर गौरवपूर्ण पनि थियो । भाषा र संस्कृति पनि आफ्नै, भाका र शैली पनि आफ्नै, यही पहिचानका गीतले त्यस भेगका मानिसहरू खुसी मात्र भएनन् बजारका सामान पनि प्रशस्त बिक्री भए । यस अवधिमा नाम चलेका २० थरी देउडा गीति क्यासेटहरू आफ्नै स्वरमा रेकर्ड गरेर उत्पादन गरी सो क्षेत्रको संस्कृतिको इमानदारीपूर्वक सेवा गरेँ । साँच्चै भन्नुपर्दा नाम पनि धेरै कमाएँ, दाम पनि केही कमाएँ । जिन्दगीमा धेरै उपलब्धि थियो त्यसबखत । कस्ता रहेछन् देउडा गायक भनेर मलाई हेर्ने मानिसको घुइँचो लागेको देखेको छु धनगढी, महेन्द्रनगर, गड्डाचौकी, टीकापुर, नेपालगन्ज, सुर्खेतलगायतका बजारमा ।

यसरी श्रीगणेश गरेको थिएँ काली–कर्णालीको लोकसंस्कृति र देउडागीतको विकास तथा विस्तार । गीत सङ्कलन, बजार व्यवस्थापन गर्न, त्यसबेला धेरै दुःख पाएँ । हिउँदको शीतलहर भनिनँ, बर्खाको झरी र गर्मी भनिनँ । काम गरेँ इमानदार भएर । देउडा गीतसङ्गीतको बस्ती बस्ती पुगेर सेवा गरेँ । अनि पो देउडा सम्राट्को उपाधि पाएँ ।

महाशङ्कर देवकोटा (६५ वर्षका) देखि सात वर्षको कलिलो उमेरमा देउडागीतमा मिठो स्वर भरी स्यावासी कमाएका सुश्रुत जोशी तिमिल्सिनासम्मको योगदानले देउडाको मार्गमा अहिले सयौँ कलाकार लम्किरहेछन् । चन्द्रकला शाह, प्रार्थना खनाल, दीपा धामी, जानकी भट्टराई, हरिना सावथ, डिक्रादेवी वादीले गाएको/हिँडेको देउडा राजमार्गमा वर्तमानमा टीका पुन, शृङ्खला जोशी, लक्ष्मी आचार्य, गौरी भट्ट, दीपा रोकाया, निरुता खत्री, शोभा थापालगायतका नारी स्वर पनि अघि बढिरहेका देखिन्छन् । राजेन्द्र शाह, विकी, सुरत रावत, कीर्तिबहादुर सिंह, राजाराम भाट, उमाशङ्कर जोशी, चक्र वम, टेक तिमिल्सिना, प्रकाश थापा, टेक बोगटी, विनोद वाजुरेली आदि कलाकारले देउडा गीतमा नयाँ नयाँ प्रयोग गरेको देखिन्छ । नयाँ पिँढीका कलाकारमा सुर, ताल र शैलीमा प्रगति देखिन्छ तर पङ्क्तिकारले गाएका पुराना गीतहरू खण्ड खण्ड गरी गाएको सुनेर मन दुख्दो रहेछ । जमिन र बीजवनस्पतिबाट जन्मेका देउडाका भाका गाउँघरमा, वनजङ्गलमा प्रशस्तै भेटिन्छन् अहिले पनि तर खोज अनुसन्धान र सङ्कलन गर्न नयाँ पिढी अझ सक्रिय हुनुपर्ने आवश्यकता छ । सहरिया बसाइ, मनोरञ्जनका आधुनिक साधन र प्रविधिको उपलब्धता, १० वर्षे जनयुद्धको त्रासले गाउँ बस्न नसकेर अन्यत्र पलायन हुनुपर्ने भएकाले देउडा गीतको प्रयोग, प्रचलन तथा अध्ययन, अनुसन्धानमा कमी आएको छ ।

## भविष्यमा देउडा गीतको अवस्था

*ऐलै मरे शङ्करपाध्या ऐलै जुम्ला जाँच*
*साई अर्दा पुराना कुणा अब उस्तै काँ छ ?*

जुम्लाको ऐतिहासिक गीत हो यो । गाउँमा पुराना जमानाका मानिसको कमी थिएन । उनीहरू संस्कृति, सभ्यता, भाषाका ज्ञाता थिए । घटना परिघटनाका साक्षी थिए । ती परम्परा कायम राख्न सकेको खण्डमा साथै पुराना पिँढीका गीत र भाकाहरू सुरक्षित राख्न सकेको खण्डमा पनि देउडाको इतिहासमा यी गीत व्याकरण बन्न सक्छन् । भोलिका पिँढीहरूका लागि जीवन्त गाथा बन्न सक्छन् । यी र यस्तै किसिमका अजम्बरी शब्दका गीतहरू खोलानाला, डाडाँकाँडा पखेरु, गाउँबस्ती र हिमालका चुलीदेखि मैदानी भूभागमा छरिएर रहेका छन् । बिस्कुन फिँजाए जस्तै ती अनमोल साहित्यहरू, गीतहरू र ध्वनिहरू हाम्रा पितापुर्खाले फिँजाएका छन् । जतनसँग उकेरी भण्डारण गर्नुपर्ने अबको पिँढीको जिम्मेवारी छ । देउडागीत र संस्कृतिबिना गीतसङ्गीतको फाँट अधुरो नै हुने स्पष्ट छ ।

*श्रेयान् स्वभर्म विगुण परधर्मारस्वनुष्ठितात् ।*
*स्वधर्मे निधन श्रेय परधर्मो भयावह ॥*

गीतामा भगवान्ले यही अर्ति दिनुभएको छ । देउडा संस्कृति हाम्रो स्वधर्म हो । यसभित्र गीताका गाथा र शब्द शब्द अटाएका छन् । आध्यात्मिक चेतनाको ग्रन्थ पनि हो देउडा गीत भन्छु म त । त्यसैले हिजोको सङ्घर्षको पाठ सिकेर वर्तमानको र संस्कृतिको महत्त्व बुझेर नव पुस्ताले भविष्यमा सांस्कृतिक फाँटमा लम्कनु श्रेय हुने छ । कताकता सेब्रो र धाननाचसँग र सोरठीसँग मिल्न खोजे पनि देउडा गीत र खेलको नीति नियममाथि उल्लेख गरे झैँ फरक छ । अझ भनौँ अनेकतामा एकता झल्किन्छ । सबै समुदायका मानिस यसभित्र अटाउने भएकाले देउडागीत, देउडाखेल र देउडा संस्कृति समावेशी संस्कृतिको नमुना हो । यो नियमलाई नबिगारेर भविष्यमा देउडा गीतसङ्गीतलाई जीवित राख्न सके यसको भविष्य उज्ज्वल देखिन्छ । परसंस्कृतिको आक्रमणबाट देउडा संस्कृति बचाउन देउडा संस्कृतिकर्मीले बेलैमा सजकता अपनाउनुपर्ने देखिन्छ । ■

समीक्षा

# 'सात हात लामो नली' का लोककवि लोकनाथ



◆ रामेश्वरप्रसाद बराल

●●●

सङ्ग्रहको मौलिक प्रकाशन आगलागीमा परेछ । त्यो कस्तो थियो, ऐले अड्कलसम्म गर्न सकिन्छ । हालको यो सङ्ग्रह र कविको तसबिरसमेत एक जोडजाम संस्मरण हो । यसका प्रकाशनवीरमा पोखरेलप्रभृति दाहाल समूहसमेत छन् । 'नलीकाण्ड' मा शब्दवाण ठोसेर पनि दाहालसमेत साहित्य र संस्कृतिको संरक्षणमा अग्रसर भएका छन् । यो नै भाषा, साहित्य र संस्कृतिप्रति एक उच्च सम्मान, महत्त्व, मूल्याङ्कन र सराहनीय पक्ष हो ।

●●●

कविता सङ्ग्रह "लोकमञ्जरी', लोकनाथ पोखरेल (विसं १९३३–१९४, उदयपुर), प्रकाशक र सम्पादन समूह पोखरेल बन्धु । सङ्ग्रह र रचयिताका भूमिकामा डा. दामोदर पोखरेल, बालकृष्ण पोखरेलप्रभृति आठमहानुभावहरूका समीक्षात्मक टिप्पणी छन् । तेस्रो प्रकाशनको यसमा ३४ फुटकर कविता छन् र यो कविको १२७ औँ जन्मजयन्ती संस्मरण हो ।

यस सङ्ग्रहमा नेपाल भूभागसहित मध्यकालीन पद्यसाहित्यको विकासक्रम प्रतिविम्बित छ । नेपाल एकीकरणमा पृथ्वीनारायण शाह (विसं १७७९–१८३१) को श्रेय निर्विवाद छ । यसबाट क्रमिक ढङ्गले नेपाल र नेपालित्वको पहिचान जाग्रत हुँदै गयो । यसमा जनजिब्रा र भाषा पनि एकात्म्य बन्दै गए, दुई चार दिन परका पैदल थलासम्म फैलिए अर्थात् भाषाको सहज पहिचान भयो । त्यसो त भेक भेक, गौँडा गौँडा, गाउँबस्तीका जनजिब्रामा अन्तर नभएको होइन । लोकनाथ आदिकवि भानुभक्त (विसं १८७१–१९२५) पछिका तर कवि शिरोमणि लेखनाथ पौड्याल (विसं १९४२–२०२३) अघिका रहेछन् । आदिकवि आफ्नो जन्मथलोदेखि काठमाडौँ र चारभन्ज्याङपरि पूर्वी नेपाल पहाडकन्दरातर्फ फैलिइसकेका थिए । यिनका सरल छन्द र भाकामा लेखिएको रामायण जिब्राले सहज मानी सकेका थिए । एकतरहले छन्दको अभिप्राय लोकभाका र सस्वर गायन हो, एक्लै भट्याइयोस् वा समूहगत । कारण यो मुखाग्रे हुन, पार्न सजिलो र आकर्षक हुन्छ । अतः मध्यकालीन साहित्य विकासमा यसले सहज सघाउ पुऱ्याएको ठहर्छ । छन्दात्मक रचना (पद्य) कालजयी र दीर्घजीवी हुने यो एक प्रमुख कारण हो ।

गद्य र पद्यमध्ये छन्दमय पद्य विशष्ट हुन्छ । यसमा लय स्वचालित गतिमान हुन्छ । यसलाई मस्तिष्क र जिब्राले चाँडो टिप्छ । अतः यसले प्रसिद्धि र लोकप्रियताहेतु लामो प्रतीक्षा गरी रहँदैन । आदिकवि भानुभक्त आचार्यका रामायण र फुटकर रचना यसैमा पर्छन् । साउँअक्षर चिनेकाले समेत उनलाई सहजै टिपे र रैथाने संस्कृतिमा मिसिए । यसमा लहडीहरू थपिँदै गए । बिहेबटुला वा जग्गेमा बेउली खलकमाझ, मच्ची–मच्ची यिनै सिलोकमार्फत जुहारी चले । जग्गे झन् रमाइलो र रौसिलो बन्यो र अनिदो रात काट्न सहज तुलियो । त्यसो त बालन, मारुनी नाच पनि अझैसम्म घरगाउँका संस्कृति हुन् । मारुनी नाचका फड्काले गाउँछन्– "अझै झिकौँ झिकौँ लाग्छ मारुनीको फन्को... !" पहाड कुनाकाप्चा, डाँडाकाँडा, वनजङ्गलमा घाँसदाउरा गर्न, गाईबाख्रा चराउन, रुखमुनि थरक मार्न वा ढुङ्गामा हँसिया, खुकुरी उद्याउन वा साँध लाउन यस्तै यस्तै श्लोक अझै गुञ्जिन्छन्, सुसेलिन्छन् । उता गृहिणी नारीविलापमा एकथरी अर्को सिलोक उत्तिकै लोकप्रिय छ । यिनीहरूमा धेरै पछिसम्म बिहे गरेर पराई घर भनेको पुर्पुरोको लेखान्त भन्ने थियो र पश्चात्तापमा मन बुझाउन "छोरीलाई अर्ती' का सिलोक हालिन्थे– "हरे, के गरौँ छोरीको जन्म पाएँ, अघि नै उठी कर्ममा हारी आएँ...' आदि । तथापि नारीका रौसिला क्षण र अवसर पनि थिए । यसमा तिज एक हो । अर्कोमा, बेउला अन्माएको घर हो । यो घरमा नातागोता, छरछिमेक गृहिणी किशोरीपर्यन्त झुरुम्म




स्व. कवि लोकनाथ पोखरेल
(१९३३–१९९४)
उदयपुर

भेला हुन्छन् र रत्यौली खेल्छन्। यसनिम्ति यी नानाथरी पहिरनमा सिँगारिन्छन्। यिनले बेउलाकै घरमा फेला परेका पुरुषवस्त्रमा आफूलाई सजाउँछन् र रत्यौली खेल्छन्। रत्यौली मनोरञ्जनको त्यो पाटो हो जसमा मात्र नारीपात्रले भाग लिन्छन्। कथम् कोही पुरुष त्यहाँ पुगिहाले उसलाई "चिबे नकटो' भनिन्छ र नारीमाझ त्यहाँ टिक्नै दिइन्न। रत्यौलीमा पनि माथि भनेसरह भाखा हाली नाच्ने गाउने गरिन्छ। अझ बेउलाबेउली बनेर जिस्काजिस्की चल्छन्। त्यसैले त्यो कालखण्डमा कोरिएका, लेखिएका भाषाले अर्को भेक वा खण्डमा समेत भाका हाल्न, वाचन गर्न, पढ्न बुझ्न र नाटकीयतामा सहज हुँदै गएको देखिन्छ।

काशीवास र गङ्गास्नान उतिबेलाको एउटा अर्को परम्परा हो– पहाड, मधेशखण्डबाट पुग्ने। धार्मिक, सांस्कृतिक ग्रन्थ किन्न, पाउन काशीवास– लेखन, छपाई र प्रकाशनमा काशीवास– शिक्षामा काशीवास– पवित्रगङ्गामा डुबुल्की लाउन काशीवास– अझ तत्कालीन राणाशासकले डाँडा कटाइएका वा यिनबाट उम्किन काशीवास। यसरी काशीवास वा दर्शन सामान्यतया अपरिहार्य थियो। गङ्गामा डुबुल्की लाउनुको फेरि बेग्लै महात्म्य। देवीभागवत् पुराण अनुसार गङ्गानदीलाई भगवान् विष्णुकी तीनमध्ये एक पत्नी मानिन्छ। अतः गङ्गा समागमले पाप पखालिन्छ र पुण्य प्राप्ति हुन्छ भन्ने आख्यान छ–

"परस्त्री दर्शनं पुण्यं स्पर्शं पापनाशनं
चुम्बनं सर्वतीर्थेभ्यो मैथुनं मोक्षदायकः।"

(चुम्बनंले गङ्गाजल अचाउनु वा मुखमा पार्नु र मैथुनंले गङ्गानदीमा चोबलिनु वा डुबुल्की लाउनु भन्ने गूढ अभिप्राय छ।) तथापि कवि लोकनाथलाई काशीवास जुरेन छ। यसबारे यिनका चौथो पुस्ता (पनाति) आनन्दराजको कथन यस्तो छ– कविका पिताजीमा राणाशासनका भय र आतङ्क थिए, अझ यिनका घरखेतै सर्वस्वमा परेछन्। यसअघि पिताजीका सत्प्रयासले कविले घरैमा धर्मशास्त्र, नीतिशास्त्र, ज्योतिष र संस्कृतविद्या जस्ताबारे ज्ञान पाए।

लोकनाथका समग्र रचनामा अध्यात्म (प्रेतकल्प), समवेदना (भानुभक्तको सम्झनामा), आध्यात्मिक चिन्तन (प्रेतकल्प), ज्योतिष, पौराणिक सन्देश (मानबहादुरलाई अर्ती), बाल्यकाल आदि लिन सकिन्छ। अर्काथरीमा राणाकालीन उदयपुर गौँडामा हाकिमहरूको अदलीबदली, छरछिमेक र कुनै परिचित व्यक्ति विशेषबारे निकै चाखलाग्दा विवरण छन्। आध्यात्मिकतातिर लेखनाथले तरुण–तपसीमा (म खाऊँ मै लाऊँ) भने झैँ यिनको प्रेतकल्प (३४सौँ पद्य) मा झल्किन्छ :

"यी मेरा हुन् आफ्ना भनिकन भुलेका जति।
मरेका बेलामा न त ती सङ्ग जान्छन् अलिकति। ...'

भानुभक्तले सांस्कृतिक, पौराणिक महत्त्वका रचनामार्फत लोकख्याति पाए। लेखनाथले समसामयिक र स्थानीय परिवेशलाई आफ्ना रचनामा दर्साए झैँ लोकनाथले पनि उसै गरी झल्काएका छन्। आशुकवि भावमा यी कैले शम्भुप्रसाद ढुङ्गेल र कैले आदिकवि भानु झैँ देखिन्छन्। भानुभक्तका यस्ता पद्यांश छन्, जस्तै– "लोहा बेची मोल क्या लिनु होला, योग्यै जानी यो उसै दिनु होला..." वा "असल मुङ्ग्रे केरा कि त मही हवस् बेस अमिलो, कि ता सेता मुला कि त बरु हवस् साग उसको... ।"

"आलुको मगनी' (२२सौँ पद्य) मा कवि पनि उसै गरी अतिथि छन्, न्यानो सत्कार र आतिथ्य पाउँछन्। अर्कातिर यिनका उन्मुक्त बैँस छन् जब यी साह्रै झिल्के, उत्ताउला र मनभाँडा थिए। उनको बाल्यजीवनले यो झल्काउँछ :

"कैले यी दुई हात लगी युवतीको छुन्थ्यौँ दुधैका मुना,
खुसी भै युवती पनि उसबखत् दिन्थे फुकाई तुना..."

यसपछिका हरफमा त यी झन् उत्ताउला र छाडा भएर नग्नचित्रण दिन्छन्। शास्त्रीय शृङ्गाररसमा यो 'चौर्य रति' हो। यस्तै चित्रणमा एक अर्का रसिक कवि (?) पनि

लिन सकिन्छ जसले श्री ३ महाराज (जुद्ध शमशेर) लाई यसरी मनोरञ्जन दिएका थिए रे,

**"स्वाँ स्वाँ गरी पलङमा छलले निदाई**
**सुत्नु भएछ म त चाल् पनि केई नपाई**
**निर्धक्क चुम्बन गरेँ, पछि हाँसनु भो**
**लाजले भुतुक्क म भएँ, अनि कोनि के भो** !'

यस्तो सुनेर कामोत्तेजित श्री ३ ले ती ब्राह्मण कवि महाशयलाई सोधे छन्– "अनि के भो त, काठा ?" कवि लोकनाथ त त्योभन्दा बढी झन् नग्नशृङ्गार रसमा डुबुल्की लाउँछन् र बाँकी अनुद्धरित हरफमा चीरहरण दर्साउँछन् अर्थात् छ्याङ्ङ निर्वस्त्र छन् । यति मात्र हैन, यी ठट्यौरे, मापाका र मनमौजीसमेत थिए । यी पद्यमै हाजिरीजबाफी स्वभावका पनि थिए । यस्तै यस्तै उनी कवित्वशक्तिले विशेष पात्र, अमुक व्यक्ति वा आफन्तलाई समेत झम्टन्छन् र शब्दवाण प्रहार गर्छन् ।

हुन त सङ्ग्रहको मौलिक प्रकाशन आगलागीमा परेछ । त्यो कस्तो थियो, ऐले अड्कलसम्म गर्न सकिन्छ । हालको यो सङ्ग्रह र कविको तसबिरसमेत एक जोडजाम संस्मरण हो । यसका प्रकाशनवीरमा पोखरेलप्रभृति दाहाल समूहसमेत छन् । 'नलीकाण्ड' मा शब्दवाण ठोसेर पनि दाहालसमेत साहित्य र संस्कृतिको संरक्षणमा अग्रसर भएका छन् । यो नै भाषा, साहित्य र संस्कृतिप्रति एक उच्च सम्मान, महत्त्व, मूल्याङ्कन र सराहनीय पक्ष हो । यसमा रचयिताले आफू मात्र होइन, गौरीप्रसाद दाहाललाई समेत अजम्मरी तुल्याएका छन् । हुन त यस कविताले मात्र एकोहोरो निन्दा वा उपहास गरेको छैन, माथि उल्लेख गरे झैँ तत्कालीन चालचलन, परम्परा, रीतिथिति, संस्कृति, वधूशिक्षा र संस्कार, गार्हथ्य धर्मपालनमा गृह, गृहपरिवेश, गोठाला, खेताला, बहलमान र नोकरचाकर, लैना गाईवस्तु इत्यादि समग्रको व्यवस्थापन र रेखदेखमा एक आदर्श परिकल्पनासमेत गर्दछ । यसै गरी नौलो घरबाट भित्र्याइएकी नववधूमा अर्ती उपदेश छ । यसले संयुक्त परिवारमा सासू–ससुरा, जेठाजू–जेठानी, देवर–नन्दहरूप्रतिको आदर्श व्यवहार र सांस्कारिकता देखाउँछ, जुन उतिबेलाको परिवेश थियो । 'नलीकाण्ड' का प्रत्युत्तरमा 'गंजलालको चिट्ठी' ले कविलाई घमण्डी र अव्यावहारिक चित्रण गरेको छ तर पनि कवि 'लोकनाथको जवाफ' मार्फत सिँगौरी खेल्न छाड्दैनन् ।

यसरी हेर्दा लोकनाथ एक साहित्यिक आभूषण हुन् । यिनमा धेरै कविको झलक छ– शम्भुप्रसाद ढुङ्गेल (आशुकवि), धर्मराज थापा (जनकवि), लक्ष्मीप्रसाद देवकोटा (मुनामदन, एक लोकलहरी) । साँचो भन्नै पर्दा एक्लो 'नलीकाण्ड' ले उस्तै अमरत्व पाएको छ जस्तो गन्धर्व (गायक) को गीतले, 'बाबैले सोध्लान् नि खोइ छोरा भन्लान्...?'

●●●

"स्वाँ स्वाँ गरी पलङमा छलले निदाई
सुत्नु भएछ म त चाल् पनि केई नपाई
निर्धक्क चुम्बन गरेँ, पछि हाँसनु भो
लाजले भुतुक्क म भएँ, अनि कोनि के भो !'

●●●

कविका साहित्यमा लोकसिद्धि, विधाविशेषको सहमति र सर्वसम्मति छ । आधुनिकतासँग दाँजिँदा भन्नै पर्छ ऐले कविता गद्यात्मक शैलीमा ढल्केका छन् । यिनको वाचन पनि उसै प्रकारले गरिन्छ । लोकभाकाका कवितामा भने सम्झना गाढिन्छ, रसानुभूतिमा जिब्रो चड्कारिन्छ र यो स्वतः कालजयी बन्छ । भानुभक्त आचार्य वा लेखनाथ पौड्याल यस कारण पनि अजरअमर छन् । लेखनाथका कवितामा 'सत्य सन्देश' र यस्ता फुटकर रचना आजसम्म उत्तिकै जीवन्त छन् । यहाँ म २०१८ सालको संस्मरण लिँदै छु जब म त्रिभुवन विश्वविद्यालयको आई ए परीक्षार्थी थिएँ । सौभाग्यवश, मित्रमण्डलीसँग लेखनाथ पौड्यालको साक्षात्कारमा उहाँको निवास पुगेको थिएँ । हाम्रा जिज्ञासामा उहाँका केही उत्तर यसरी आएका थिए, 'मेरा रचना वेदान्तमा टम्म मिलेका हुन्छन्..., मेरो रुचि अध्यात्ममा छ..., उच्छृङ्खलता मलाई मन पर्दैन... आदि ।' हाम्रो अर्को प्रश्न थियो, "गुरु, देवकोटा र सममध्ये कसका रचनालाई बढी उत्कृष्ट देख्नु हुन्छ ?" यसमा उहाँको अत्यन्त सहज तथापि मार्मिक प्रतिप्रश्न थियो, "बाबुहरू आफैँ भन्नोस् त मह गुलियो कि मिस्री ?" फेरि अर्कोमा उहाँको भनाइ थियो, "मेरा कवितामा हलन्ताक्षर विरलै भेटिन्छन् ।" यता 'लोकमञ्जरी'मा छन्दहेतु अर्द्धाक्षर वा हलन्ताक्षर पर्याप्त उपयोगमा छन् ।

लोकनाथ भावुक कवि थिए भनेर साहित्य र भाषाविद् (स्व) बालकृष्ण पोखरेलको ठहर छ । उनका भनाइमा कवि लोकनाथ शब्दसंयोजक भन्दा अलि पृथक् देखिन्छन् । बालकृष्ण भन्छन्– यी कवि छन्दका पछि कुद्ने र छन्द कुँद्नेतिर लागेनन्, बरु छन्द यिनका पछिपछि कुदे । अर्को पनि गम्भीर चित्रणमा बालकृष्ण भन्छन्, "लोकनाथ प्रगतिवाददेखि अन्य वादमा उत्तिकै साझे छन् । यिनमा हिन्दुस्थानी, युरोपेलीका छनक भेटिन्छ ।" मेरा कलेज सहपाठी (पूर्वसचिव) स्व. शारदाप्रसाद दाहाल पनि भन्छन्– कुनै विषयवस्तुलाई ग्रहण गरी तत्कालै सरल एवं रोचक ढङ्गमा रूपान्तरित गर्न सक्नु कवि पोखरेलको विशिष्टिता हो । समीक्षामा वेदप्रसाद पोखरेल दाबी गर्छन्– उदयपुरका (मध्यकालीन) साहित्यिक प्रतिभाहरूमध्ये लोकनाथ प्रथमकवि र 'लोकमञ्जरी' सर्वप्रथम प्रकाशित कृति हो । ▪

समालोचना

# 'महाराजको सवारी' कथामा अनुभूतिको संरचना



◆ ज्ञाननिष्ठ ज्ञवाली



समाजमा संस्कृति आर्थिक या राजनीतिक व्यवहार जस्तो आधारभूत व्यवहार हो । संस्कृतिबाट समाजको स्वरूप बन्छ । सांस्कृतिक प्रक्रिया समाजका आर्थिक, राजनीतिक जस्ता प्रक्रिया, व्यवहार, साधन र परिस्थितिबाट प्रभावित हुन्छ र यिनलाई प्रभावित बनाउँछ भन्ने मान्यतालाई विलियम्सले अगाडि सारेको पाइन्छ ।



साहित्यकार विश्वेश्वरप्रसाद कोइराला (विसं १९७१–२०३९) मनोवैज्ञानिक यथार्थवादी कथाकार हुन् । यिनले नेपाली साहित्यका कथा, उपन्यास, कविता, निबन्ध, आत्मवृत्तान्त जस्ता विधामा योगदान दिएका छन् । यिनका दोषी चस्मा (२००६) र श्वेत भैरवी (२०३९) कथासङ्ग्रहहरू प्रकाशित छन् । यिनका कथाहरूको समग्र सङ्कलन विश्वेश्वरप्रसाद कोइरालाका कथा (२०५०) मा गरिएको छ ।

रेमन्ड विलियम्स (सन् १९२१–१९८८) ले अनुभूतिको संरचनासम्बन्धी मान्यतालाई सन् १९५४ मा 'प्रिफस टु फल्म एन्ड ड्रामाटिक ट्रेडियन्स' नामक लेखका माध्यमबाट प्रस्तुत गरेको पाइन्छ । उनी संस्कृति, साहित्य र समाजको अन्तर्सम्बन्धको अध्ययन गर्ने बेलायती साहित्यिक समाजशास्त्री हुन् । यिनले अभिजात संस्कृति र विचारधारसँग सङ्घर्ष गरी संस्कृति, साहित्य र समाजसम्बन्धी मान्यताको विकास गरेका हुन् । जीवन्त अनुभूतिका रूपमा कृतिमा संस्कृति व्यक्त हुने र त्यही साहित्यिक अध्येताको विषय बन्ने धारणा उनको छ । विलियम्सले प्रस्तुत गरेको संस्कृति र अनुभूतिको संरचनालाई सैद्धान्तिक रूपमा सङ्क्षिप्त चर्चा गर्दै त्यसका सापेक्षतामा विश्वेश्वरप्रसाद कोइरालाको महाराजको सवारी कथामा व्यक्त पिँढी र प्रभुत्वको स्थिति तथा दबाब र तनावका स्थितिका माध्यमबाट अनुभूतिको संरचनाको अध्ययन यसमा गरिएको छ ।

## अनुभूतिको संरचना

अनुभूतिको संरचना बेलायती साहित्य चिन्तक रेमन्ड विलियम्सद्वारा प्रतिपादित साहित्यको समाजशास्त्रीय अध्ययन गर्ने एउटा पद्धति वा सिद्धान्त हो । यो 'स्ट्रक्चर अफ फिलिङ' अङ्ग्रेजी पदावलीको नेपाली रूपान्तर हो । यसबाट अनुभवको बनोट, पूर्ण ज्ञानको बनावट वा ढाँचा मनस्थितिको सीमामा घुसिसकेको मानसिक अनुभव, परिज्ञानको वस्तु विशेषको बनावट भन्ने अर्थ निस्कन्छ । विलियम्सका विचारमा सामाजिक प्रक्रियामा जुन कुरा व्यवस्थाबद्ध तथा सुनिश्चित हुँदैन, त्यसबाट कला साहित्यको निर्माण हुन्छ । उनका अनुसार विश्वास, व्यवस्था, संस्था, विचारधारा आदिको सम्बन्धबाट मान्छेमा जुन कुराको अनुभव हुन्छ, त्यसैबाट अनुभूतिको संरचना निर्माण हुन्छ । उनले यसलाई संवेदनाको संरचना पनि भनेको पाइन्छ । संवेदना एवं सहानुभूतिबाटै कुनै निरीह वा दुःखी व्यक्तिहरूप्रति एक प्रकारको भावना व्यक्त हुन्छ । यही भावनाले मूर्त रूप लिएपछि कला वा साहित्य बन्छ । यसैलाई अनुभूतिको संरचना भन्न सकिन्छ ।

विलियम्सले लेखक र उसको प्रतिभाको कदर गरेका छन् । लेखकका सामाजिक आर्थिक अवस्थामा विशेष ध्यान पुर्‍याएका छन् । लेखकलाई कृति र समाजबिचको सेतु मान्ने धारणाको खण्डन गरेका छन् । लेखकलाई कुनै निश्चित सीमामा नबाँधी स्वतन्त्र कलाकार ठानेका छन् ।

समाजमा संस्कृति आर्थिक या राजनीतिक व्यवहार जस्तो आधारभूत व्यवहार हो । संस्कृतिबाट समाजको स्वरूप बन्छ । सांस्कृतिक प्रक्रिया समाजका

आर्थिक, राजनीतिक जस्ता प्रक्रिया, व्यवहार, साधन र परिस्थितिबाट प्रभावित हुन्छ र यिनलाई प्रभावित बनाउँछ भन्ने मान्यतालाई विलियम्सले अगाडि सारेको पाइन्छ। विलियम्सले अनुभूतिको संरचना सिद्धान्तको विश्लेषणका लागि कृतिमा अभिव्यक्त पिँढीगत समूह तिनका प्रकार, चरित्र र तिनीहरू बिचको अन्तर्सम्बन्ध तथा दबाब र तनावका परिप्रेक्ष्यमा एकै कालखण्डमा पिँढीगत अनुभूतिको अवस्था गरी दुई आधार खोजेका छन्। तिनै आधारमा यहाँ महाराजको सवारी कथाको विश्लेषण गरिएको छ।

## पिँढी र प्रभुत्वको परिप्रेक्ष्य

मूलतः मोरङ जिल्लाको उत्तरतिरको थारू समाजको परिवेशमा 'महाराजको सवारी' कथा रचिएको छ। यस कथामा काठमाडौँको पनि सामान्य चर्चा छ। यो कथामा महाराज, बडाहाकिम र चौकीदारले पहिलो पिँढी वा समुदायको प्रतिनिधित्व गरेका छन् भने रामे, घने, गने, श्यामे जस्ता पात्रहरूले दास्रो पिँढीको प्रतिनिधित्व गरेका छन्। कथामा तेस्रो अर्थात् उदीयमान पिँढीको उपस्थिति देखिँदैन।

कथामा पहिलो पिँढी वा समुदायमा पारिवारिक, सामाजिक, राजनीतिक तथा परम्परागत सांस्कृतिक प्रभुत्वशाली संस्कृति देखिन्छ भने दोस्रो पिँढी वा समुदायमा अधीनस्थ संस्कृति देखिन्छ। महाराजको सवारी मोरङ जिल्लामा हुने भएपछि त्यसको प्रबन्धका लागि गरेको तयारीबाट उसको संस्कृति प्रभुत्वशाली वर्गको छ भन्ने कुरा यसरी पुष्टि गर्न सकिन्छ :

महाराजको सवारी मोरङ जिल्लामा हुने भयो। यस ठुलो अवसरको उपयुक्त सब काम धुमधामसँग हुन थाल्यो। त्यस जिल्लाका बडाहाकिमदेखि लिएर मालका सिपाहीसम्म व्यस्त थिए। सारा जमिनदारहरूका जिम्मामा धेरै काम सुम्पियो। प्रत्येकले १९ गाडी दाउरा, ८ गाडी घाँस, २० गाडी पराल इत्यादिको प्रबन्ध गर्नुपर्ने भयो। आआफ्नो जमिनदारीमा पर्ने सडकको मर्मत या सडकै नभएका ठाउँसम्म सडक बनाउनुपर्ने भयो। जमिनदारका मौजा–मौजामा सिपाही लौरा लिँदै कुदेर तराईका अल्छी रैतीलाई काममा व्यस्त पारे।

यसरी महाराजको सवारीका लागि सम्पूर्ण बन्दोबस्त गरिन्छ। सडक निर्माणका लागि समेत गाउँका सोझा साझा जनतालाई प्रयोग गरेर भोकभोकै काम लगाइएको छ। बडाहाकिममार्फत चौकीदारले रामे, घने, गने, श्यामे जस्ता गाउँका व्यक्तिलाई कुट्दै बाटो खन्न लगाएको छ। यी चार व्यक्तिहरू राजाका सवारीका लागि बाटो खन्छन्। चौकीदारमार्फत बडाहाकिमले साठी हजार रुपियाँ बचाएर बाटो बनाउँछ। यसरी उसले महाराजबाट कमान्डिङ कर्नेलको ओहदा पाउँछ। यसैले बडाहाकिममा प्रभुत्वशाली संस्कृति देखिन्छ। यस कुराको पुष्टि कथाको प्रस्तुत अंशले गर्दछ :

●●●

कथामा मूलतः रामे, घने र गने जस्ता तीन पात्रहरूमा प्रभुत्वशाली पिँढीका कारण दबाब र त्यसबाट उत्पन्न भएको तनावलाई देखाउन सकिन्छ। चौकीदारका कारण ती तीन पात्रहरूले विभिन्न प्रकारको दबाब र तनाव झेलिरहेका छन्। चौकीदारलाई बडाहाकिमको दबाब छँदै छ। त्यस्तै बडाहाकिमलाई पनि आफूले चाकडी गरेर महाराजबाट बक्सिस पाइने र नुनको सोझो गर्नुपर्ने एक प्रकारको दबाब नै देखिन्छ।

●●●

उता सवारीका निम्ति सडक बनाउनलाई हुकुम भएको ६०,०००/– रुपियाँ बचाएबापत बडाहाकिमले कमान्डिङ कर्नेलको ओहदा पाए। जोगबनी स्टेशनमा राजाले मोरङबासीसँग बिदा लिँदा हुकुम बक्सियो– "हाम्रा बडाहाकिमले राम्रो काम गरेको रहेछ। नुनको सोझो गरी सरकारी रुपियाँ बचाइदिएको बापत बडाहाकिमलाई हामी कमान्डिङ कर्नेल बनाउँछौँ। ....जय जयकारको तुमुल ध्वनिका साथ राजाको स्पेसल गाडीले जोगवनीको स्टेसन छाड्यो। ६०,०००/– को के मूल्य आजकालको दाम बढेको समयमा बल्ल बल्ल दुई वटा मोटर किन्न सकिन्छ। तिनै दुई वटा मोटर काठमाडौँको सडकको शोभा बढाउन थपिए।

त्यस्तै चौकीदार पनि एक प्रकारले प्रभुत्वशाली संस्कृतिको प्रतिनिधित्व गर्ने चरित्रका रूपमा देखा परेको छ। उसले रामे, घने, गने, श्यामे जस्ता निमुखा सोझा व्यक्तिलाई सामन्ती संस्कार र संस्कृतिका आडमा केही नदिई बिनापारिश्रमिक, भोकभोकै पारेर कुट्दै बाटो खन्न लगाएको छ। तलको साक्ष्यबाट उक्त कुराको पुष्टि गर्न सकिन्छ :

चौकीदार त्यो देखेर झपार्दै आयो र एक बेत घनेको पिठिउँमा स्वाँट्ट हानेर भन्यो– के खेलाँची गरिरा'छस् ? निकोर्सिसम्म यो सडक तयार हुनु पर्छ। माटो नमिलाएर किन काटेको ? देखाइदिएको काम गर्नु छैन। घनेको पिठिउँमा फेरि एक चोटि बेत पार्‍यो। .... चौकीदारले कुद्दै तिनीहरूनेर आएर हकार्दै भन्यो– किन बिहान काममा आउनुभन्दा पहिले खाएर आएनौ त ? जिउ चोराहा। पिठिउँमा लट्ठी नपरुन्जेल तिमीहरू केही गर्न



जान्दैनौँ । फर्क काममा लाग ।

कथामा रामे, घने, गने, श्यामे जस्ता पात्रहरूलाई प्रभुत्वशाली शासनकतुल्य पिँढीले अधीनस्थ बनाएको छ । उनीहरूलाई बडाहाकिम र चौकीदारले ठगेर सडक निर्माणमा लगाएका छन् । सोझासाझा ती व्यक्तिहरू जनताको जग्गा पनि तिरो तिर्ने भएकाले राजाकै हो भन्ने भ्रम चौकीदारबाट परेकाले त्रसित छन् । कुटाइ खाँदै शारीरिक यातना भोग्दै बाटो खन्छन् । यस कुराको पुष्टि कथाको प्रस्तुत अंशबाट गर्न सकिन्छ :

चौकीदारले भन्न लाग्यो– बुझिस् गने, सारा मुलुक राजाको हो । तेरो खेत जसमा तँ हलो जोत्छस् त्यो पनि राजाको हो । ....आफ्नो खेतको तँ तिरो तिर्छस् कि तिर्दैनस् ? आफ्नो खेत भए किन तिर्छस् ? बुझिस् राजाको खेत हो, त्यसो हुनाले तैले तिरो भर्नु पर्छ । राजाले चाहे तेरो खेत खोसेर लिन सक्छन् ।

यसरी हेर्दा तत्कालीन राजसी संस्कार र संस्कृतिको महाराज, त्यसैको भक्त बडाहाकिम र चौकीदारसमेत प्रभुत्वशाली पिँढी वा समुदायमा पर्छन् भने उनीहरूबाट शोषित, पीडित रामे, घने, गने, श्यामे जस्ता पात्रहरू अधीनस्थ पिँढी वा समुदायमा पर्छन् । उनीहरूमा प्रतिरोधी चेतना पाइँदैन । उनीहरूलाई बोलाउँदा पनि तल्लो दर्जामा राखी रामे, घने, गने, श्यामे भनिएको छ । कथामा पनि उनीहरूलाई असभ्य र जङ्गली भनिएको छ ।

### दबाब र तनावको परिप्रेक्ष्य

मोरङ जिल्लाको उत्तरतिरको थारू समाजको परिवेशमा रचिएको 'महाराजको सवारी' कथामा पहिलो पिँढी वा समुदाय र दोस्रो पिँढी वा समुदायको प्रतिनिधित्व गर्ने पात्रहरूका बिच भएका क्रियाप्रतिक्रियाका कारण एकअर्कालै दबाब र तनावजन्य अनुभूति गरेको पाइन्छ । महाराजको सवारीका कारण मोरङ जिल्लाको थारूहरूका समाजमा एक प्रकारको दबाब र तनावजन्य स्थिति उत्पन्न भएको छ । यस कुराको पुष्टि प्रस्तुत कथाको अंशले गर्छ :

उत्तरतिर महाराजको सवारी हुने भयो, त्यसो हुनाले अड्डा अदालतका सिपाहीहरू राता फेटा लाउने त्यतातिर पनि वैरिए । कति सय वर्षदेखि एकनाससँग शान्तिपूर्वक जीवन बिताइरहेका ती थारूहरूका समाजमा सिपाहीहरूको दौडादौडले, तिनीहरूको हकारले, तिनीहरूको लाठीको प्रहारले एक किसिमको कोलाहल मच्चियो । सिपाही चौकीदारहरू त्यहाँ भएका सबै जवान मानिसहरूलाई उठाउँदै सडक बनाउन, जङ्गल फाँड्न, दाउरा काट्न लगाउन थाले । स्वास्नी मानिसहरू र बालबच्चाहरू आआफ्ना छाप्रामा अगाडि उभिएर विस्फारित नयनले यो उपद्रो हेरिरहेका थिए ।

कथामा आर्थिक र सामाजिक–शैक्षिक दृष्टिले पिछडिएका अशिक्षित नेपाली जनताको दर्दनाक कथाव्यथा

प्रस्तुत गरिएको छ । मान्छेले मान्छेकै शासनमा कसरी पशुतुल्य व्यवहार गरी उसलाई तड्पाएको छ भन्ने कुरा चौकीदार र बडाहाकिमबाट सताइएका रामे, घने, गने, श्यामे जस्ता पात्रहरूको स्थितिबाट स्पष्ट हुन्छ । कथाको निम्नलिखित अंशबाट उक्त कुराको पुष्टि हुन्छ :

बल्लबल्ल दिनभरि भोकभोकै रही कति बेतका प्रहारलाई सही तिनीहरूले बाटो बनाए। ती बेगार कुल्लीहरूको हृदयलाई पनि राजाको सवारीको निमित्तको धुमधामको आयोजनाले प्रभावित पाऱ्यो । ... रामे, घने, गनेहरू उत्सुक भएर सडकको छेउमा उभिरहेका थिए। राजा कस्तो होला ? तिनीहरूका स्वास्नीमानिसहरू आफ्ना बालबच्चालाई छाप्रामा हुलेर अनिश्चित आतङ्कले छट्पटाइरहेका थिए।

चौकीदार र रामे, गनेबिच भएका संवादमा पनि दबाब र तनावको स्थिति पाइन्छ। जब चौकीदारले बडाहाकिममार्फत सम्पूर्ण तिरो रकम राजाको ढुकुटीमा जान्छ, त्यसैले राजा धनी छन्, यो सारा मुलुक राजाकै हो, राजाले चाहेमा सबै लिन सक्छन् भन्छ, तब गनेमा एक प्रकारको दबाब र तनावजन्य परिस्थिति उत्पन्न हुन्छ। उसले "कसरी मेरो खेत राजाको भयो ? मेरो बाबुबराजुका पालादेखि यो खेत हामीले जोत्दै आएका छौँ भन्छ, त्यसपछि चौकीदारले "आफ्नो खेतको तँ तिरो तिर्छस् कि तिर्दैनस् ? आफ्नो खेत भए किन तिर्छस् ? बुझिस् राजाको खेत हो, त्यसो हुनाले तैले तिरो भर्नु पर्छ। राजाले चाहे भने तेरो खेत खोसेर लिन सक्छन्," भन्छ। यसपछि भने गनेको चित्त बुझ्छ तर ऊ शान्त हुन सक्दैन। उसलाई एक प्रकारको तनावजन्य स्थिति पैदा हुन्छ। यसको पुष्टि तलको अंशबाट गर्न सकिन्छ :

गनेको चित्त बुझ्यो तर यस ज्ञानले त्यसको चित्त शान्त भएन। जुन खेतलाई त्यो आफ्नो भनीकन, सालसालैमा मल हालीकन, उब्जाउ बनाउँथ्यो, त्यसलाई अर्काको भनिदिँदा त्यसको मन घबरायो। आफ्नो त होइन रहेछ भन्ने त त्यसलाई पूरा विश्वास भयो, नत्र किन मालपोत तिर्छ त ?

यसै गरी कथामा मूलतः रामे, घने र गने जस्ता तीन पात्रहरूमा प्रभुत्वशाली पिँढीका कारण दबाब र त्यसबाट उत्पन्न भएको तनावलाई देखाउन सकिन्छ। चौकीदारका कारण ती तीन पात्रहरूले विभिन्न प्रकारको दबाब र तनाव झेलिरहेका छन्। चौकीदारलाई बडाहाकिमको दबाब छँदै छ। त्यस्तै बडाहाकिमलाई पनि आफूले चाकडी गरेर महाराजबाट बक्सिस पाइने र नुनको सोझो गर्नुपर्ने एक प्रकारको दबाब नै देखिन्छ। कथामा रामे, घने र गनेको दबाब र तनावजन्य परिस्थितिलाई यसरी देखाएको छ :

घनेको पिठिउँमा फेरि एक चोटि बेत पऱ्यो। ऊ अवाक् भएर पिठिउँ सुमसुम्याउँदै उठ्यो र ढुङ्गा किच्न थाल्यो। गर्मीको दिन झन् घाँचमा जङ्गल पहाडले हावा रोकिदिने हुनाले उकुसमुकुसको गर्मी थियो। पसिना पुछ्दै तीनै जना घने, गने र रामे जुरुक्क उठे र नजिकैको गाछीमा छायामा बिताउन लम्किए। चौकीदारले बेतलाई हावामा हल्लाउँदै थाम्न भन्यो। तिनीहरूले कराएर भने– बिसाउँछौँ।

एकातिर रामे, घने, गने जस्ता पात्रहरूको दबाब र तनावजन्य अनुभूति देखाइएको छ भने अर्कातिर बडाहाकिमको दबाब र तनावजन्य अनुभूतिलाई कथामा यसरी स्पष्ट पारिएको छ :

चौकीदारहरू अस्तिको भन्दा सय गुना धेरै थपिए। रामे, गने इत्यादिले देखे शेरबहादुर श्रेष्ठ असिनपसिन गर्दै यताउति कुदिरहेको थियो। सेरबहादुरको यो दशा देखेर तिनीहरू राजाका बारेमा झन् ठुलो कल्पना गर्न थाले। शेरबहादुरमाथि तिनीहरूलाई एक चोटि दया पनि आयो तर भित्री दिलमा तिनीहरू खुसी नै थिए। रामेले साथीहरूलाई कुहिनाले घोचेर भन्यो– हेर गाँठे त्यो फेरि फर्कियो। केही बिर्सिएछ क्यारे। सबै हाँसे।

कथाकार विश्वेश्वरप्रसाद कोइरालाका दोषी चस्मा (२००६), श्वेत भैरवी (२०३९) दुई कथासङ्ग्रहहरू प्रकाशित छन्। यिनका समग्र कथाहरूको सङ्कलन विश्वेश्वरप्रसाद कोइरालाका कथा (२०५०) मा गरिएको छ। यिनले नेपाली भाषामा जम्माजम्मी २६ ओटा कथा मात्र लेखेका छन्।

यिनका २६ ओटा कथामध्ये 'महाराजको सवारी' कथालाई बेलायती साहित्य चिन्तक रेमन्ड विलियम्सद्वारा प्रतिपादित साहित्यको समाजशास्त्रीय अध्ययन गर्ने अनुभूतिको संरचना सिद्धान्तका कोणबाट विश्लेषण गरिएको छ। यसमा पनि मूलतः पिँढी र प्रभुत्व अनि दबाब र तनावको परिप्रेक्ष्यलाई आधार बनाइएको छ। यहाँ पहिलो पिँढी शासकतुल्य प्रभुत्वशाली, दोस्रो प्रभुत्वशाली पिँढीको सांस्कृतिक अधीनस्थता स्वीकार गर्न बाध्य भई त्यसका विरुद्धमा विकल्प निर्माण गर्न नसक्ने र तेस्रो प्रभुत्वशाली पिँढीको विकल्पमा अनुभूतिको संरचना निर्माण गर्ने आधारलाई प्रमुख बनाएर कथा विश्लेषण गरिएको छ।

यी आधारमा हेर्दा "महाराजको सवारी कथामा महाराज, बडाहाकिम, चौकीदार पहिलो पिँढी वा समुदायको प्रतिनिधित्व गरेका छन्। रामे, घने, गने, श्यामे जस्ता पात्रहरू दोस्रो पिँढीमा पर्छन्। यस कथामा तेस्रो पिँढीको उपस्थिति छैन।

यिनै पात्रहरूका क्रियाप्रतिक्रियाबाट दबाब र तनावको स्थिति केलाइएको छ। यसरी हेर्दा महाराजको सवारी कथामा विभिन्न पात्रले विभिन्न किसिमबाट दबाब र तनावजन्य अनुभूति गरेको पाइन्छ। ■

# थारूका आदिदेव विक्रमबाबा



◆ मुक्तिनाथ घिमिरे

चितवन जिल्लाको माडीक्षेत्रतर्फ रापतीको नजिकै राष्ट्रिय निकुञ्जभित्र विक्रमबाबा नामक एक शक्तिपीठ छ । थारू समुदायले विक्रमबाबालाई इष्टदेव मानेर पूजा गर्छन् । हरेक वर्ष चैत्र शुक्ल प्रतिपदादेखि पूर्णिमासम्म १५ दिन त्यहाँ सांस्कृतिक मेला लाग्छ । पूजा गर्ने मुख्य ठाउँमा केही शिला छन् । मुख्य पूजा त्यहीँ हुन्छ । सालका फेदमा पूजा गर्ने परम्परा छ । धेरै भक्तजनहरू जम्मा हुन्छन् । मुख्य ठाउँमा बढी भिड हुने हुनाले त्यस ठाउँका सालका रुखैपिच्छे फेद फेदमा बसेर भक्तजनहरूले पूजा गर्छन् । पूजा गर्नेमा पुरुषभन्दा महिला धेरै हुन्छन् । पूजा सकेर शान्तिका प्रतीक एकजोर परेवा उडाउनु र नरिवलको बलि दिनु त्यहाँको मुख्य विशेषता देखिन्छ । छितामाई र विक्रमबाबा दिदीभाइ हुन् भन्ने थारू समुदायको ठहर छ । थारू जाति प्रकृति पूजक भएकाले मन्दिर नबनाई प्रकृतिमा जस्तो छ त्यस्तैमा पूजा गर्ने गरेको पाइन्छ । आजकाल गैरथारूले पनि विक्रमबाबाको पूजा गर्न थालेका छन् । पूजा गरिसकेर मौलामा बोका काट्ने चलन भित्र्याएका छन् । सोही पूजाका सम्पर्कले घैलाघारीमा १५ दिनसम्म ठुलो मेला लाग्छ ।

माडी नगरपालिकाको रापतीको नजिक राष्ट्रिय निकुञ्जभित्र स्थापित एक शक्तिपीठ विक्रमबाबा हुन् । विक्रमबाबा तराईका आदिवासी थारू जतिका आदिदेव शक्तिपीठ मानिन्छन् । त्यहाँ जानका लागि जगतपुर भएर जानु पर्दछ । भरतपुर महानगरपालिका–२३, घैलाघारीमा सडकको नजिकै सवारीका साधन राखिन्छन् । त्यस ठाउँमा पूजा अवधिभर ठुलो मेला लाग्छ । थुप्रै व्यापारीले हरेक चिजका पसल थापेका हुन्छन् । बिक्रेता र क्रेता अनगन्ती देखिन्छन् । भारतीय व्यापारीहरू पनि प्रशस्त भेटिन्छन् । सवारी साधनबाट ओर्लेर केही समय हिँडेपछि रापतीको पुलमा पुगिन्छ । पुल तरेर देब्रेतर्फ लागेर सामान्य हिँडाइमा लगभग ४५ मिनट हिँड्नु पर्छ । अनि विक्रमबाबा परिसरमा पुगिन्छ ।

●●●

त्यस ठाउँको वरिपरि टाढा टाढासम्म रहेका सालका फेदमा पूजा गर्ने भक्तहरूको भीड लागेको पनि देख्न पाइन्छ । एउटा रुखको फेदमा पाँच, सात जनाले रिङ्गै घेरा लागेर पनि पूजा गर्छन् । अनगन्ती रुखका फेदमा बसेर पनि भक्तजनले पूजा गर्ने गरेको पाइन्छ ।



सालको रुखलाई त्यसको प्रतीक मान्छन् । जसरी तागाधारी समुदायले पिपल तथा तुलसीलाई भगवान् विष्णुको प्रतीक मानेर पूजा गर्छन् ठिक त्यसै गरी थारू जतिले पनि सालको रुखलाई आदिदेव विक्रमबाबाको प्रतीक मानेर पूजा गर्छन् । विक्रमबाबा परिसरमा हरेक वर्ष एक पटक ठुलो मेला लाग्छ । चैत्र शुक्ल प्रतिपदादेखि पूर्णिमासम्म १५ दिन त्यहाँ पूजाआजा हुन्छ । एउटा सालको रुखमुनि विक्रमबाबाको स्थान मानिएको छ । मुख्य पुजारी थारू समुदायको पुरुष हुने परम्परा छ । ज्यादै भीड हुने हुँदा अन्य दुई जना ब्राह्मणलाई समेत पूजापाठमा लगाइन्छ । पूजा गर्ने वास्तविक परम्परा चाहिँ सालका रुखको फेदमा हो । त्यस ठाउँ वरिपरिका जङ्गलको जुनसुकै सालको फेदमा पूजा गरे पनि हुन्छ । सुरुमा दीप, कलश र गणेशको पूजा गरिन्छ । त्यसपछि सालको फेदमा पूजा गरिन्छ । पूजा सकेपछि धूपदीप गरी नैवेद चढाइन्छ । नैवेदका रूपमा फलफूल प्रयोग गरिन्छ । एक जोर परेवा पनि साथैमा लगिएको हुन्छ । सालका फेदमा पूजा गरिसकेपछि तिनै परेवाको पूजा गरिन्छ । त्यसपछि शान्तिका प्रतीक मानेर परेवा उडाइन्छ । यो पुरानो परम्परा हो । अहिले पनि त्यो चलन यथावत् छ । पछिल्लो समयमा परेवा उडाउने चलन व्यापक हुँदै आएको छ ।

मुख्य ठाउँमा फलामको घेरा लगाइएको छ । एक ठाउँमा मात्र प्रवेशद्वार राखिएको छ । पुजारी कम्पाउन्डभित्र बस्छन् । अटेसम्म भक्तजन पनि भित्रै जान्छन् ।



**विक्रमबाबा परिसरको मुख्य दृश्य**

भित्र जान असजिलो हुनाले भक्तजनहरूले पूजासामग्री बाहिरबाट नै बुझाउँछन् । परेवा पनि सँगै बुझाउँछन् । पुजारीले पूजा गरिसकेपछि जल सेचन गरेर भक्तहरूलाई परेवा फिर्ता दिन्छन् । सम्बन्धित भक्तहरूले आआफ्ना परेवा उडाउँछन् । शुद्ध रूपमा सालका रुखको फेदमा पूजा गरेर परेवा उडाउने परम्परालाई विकसित गरी एउटा निश्चित ठाउँमा पुजारी रहेर पूजा गर्ने परम्पराको विकास भएको पाइन्छ । सानो शमीको फेदमा सामान्य त्रिशूल उभ्याइएको छ । केही शिला पनि राखिएका छन् । तिनका नजिकै ठुलो सालको रुख छ । त्यहीँ पूजा गर्ने एउटा परम्परा छ भने अर्को चाहिँ त्यस ठाउँको वरिपरि टाढा टाढासम्म रहेका सालका फेदमा पूजा गर्ने भक्तहरूको भीड लागेको पनि देख्न पाइन्छ । एउटा रुखको फेदमा पाँच, सात जनाले रिङ्गै घेरा लागेर पनि पूजा गर्छन् । अनगन्ती रुखका फेदमा बसेर पनि भक्तजनले पूजा गर्ने गरेको पाइन्छ । नयाँ नयाँ ठाउँ खोजेर भरसक एक व्यक्तिले एउटै रुखमुनि पूजा गर्न खोजेको पनि भेटिन्छ तर त्यो कुरा असम्भव देखिन्छ । पूजा गर्ने भक्तहरूमा बढी महिलाहरू नै हुन्छन् । पुरुष केही कम हुन्छन् । आजकाल पूजा गरिसकेर जटासहितको नरिवल फोरेर रस चढाउने चलन अत्यधिक बढेको पाइन्छ । कम्पाउन्डभित्र पनि नरिवल, बाहिर पनि नरिवल फोरेर बलि दिने क्रम त बेसरी छँदै छ । आजकाल त कम्पाउन्डबाहिर बोका काटेर बलि दिने क्रम बढ्दो छ । सालको फेदमा पूजा गरिसकेपछि बोकाको टाउकामा पूजा गर्छन् । पूजा गरेको जल चढाउँछन् र बोको मनाउँछन् । अनि थोरै पर लगेर मौलामा काट्छन् । त्यति गरेपछि बलिको अङ्ग पूरा हुन्छ । सालका फेदमा लगेर रगत चढाउने चाहिँ त होइन । सबैले बोका बलि दिने होइन । कसै कसैले मात्र हो तर बोकाको बलि दिने भक्तहरू पनि अति धेरै हुन्छन् । भाकल गर्ने भक्तले बोकाको टाउको त्यहीँ छोडिदिन्छन् । सहजमा बलि दिने भक्तले टाउको समेत साथै लैजान्छन् । बोका काट्ने र खुइल्याउने व्यवस्था त्यहीँ छ । त्यसरी सहयोग पुऱ्याउने व्यक्तिलाई केही रकम बुझाउनु पर्छ । चैत्र शुक्लनवमी (रामनवमी) का दिन पनि बोकाको बलि दिने चलन छ । १५ दिनसम्म पूजा गर्दा सबै दिनमा बोकाको बलि दिएकै भेटिन्छ । थारू जातिको परम्परा गैरथारूमा समेत पर्नाका कारण अहिले आएर अन्य जातका भक्तहरूले पनि पूजा गर्ने गरेको पाइन्छ । तिनले पनि बोको बलि दिन्छन् । त्यसरी पूजा गर्ने भक्तले नरिवलको बलि त अनिवार्य दिएकै हुन्छन् । भक्तका मनले ताकेको कुरा विक्रमबाबाले पूरा गरिदिन्छन् भन्ने विश्वास लिएको पाइन्छ ।



त्यहाँ विक्रमबाबा पूजा रेखदेख समिति छ। समितिले पूजा व्यवस्थापनमा सहयोग पुऱ्याउँछ भने प्रहरी प्रशासनले शान्ति सुरक्षाको व्यवस्था मिलाउँछ। नजिकै दुई वटा अग्ला मचान छन्। पूजा चलुन्जेल प्रत्येक दिन दुवै मचानमा प्रहरी तथा पूजा समितिका प्रतिनिधिहरूले रेखदेख गर्दछन्। मचानमा बसेर हेर्दा सबैतिर दृष्टि पुऱ्याउन सकिन्छ भन्ने आशय हो। वनरक्षकहरूले वन्यजन्तुको रेखदेख गर्दा तिनै मचानमा बस्छन्। त्यहाँबाट मुख्य रूपमा गैँडा गस्तीको काम हुन्छ। बिहानदेखि दिनभर पूजाआजाको भीड हुन्छ। राति भक्तजनमध्येका कोही पनि त्यहाँ बस्दैनन्।

अब यसमा अर्को प्रसङ्ग जोडिन्छ। भरतपुर महानगर पालिकामा पर्ने गङ्गानगर, सिमलगैरीको बेलसार सामुदायिक वनको हाताभित्र एउटा ढुङ्गा छ। त्यसलाई थारू समुदायले छितामाईको प्रतीक मानेर पूजा गर्छन्। बडादसैँको नौराथाभरि पूजा हुन्छ। त्यहाँ साकाहारी (कोरी) पूजा हुन्छ। थारूहरूले छितामाईलाई दिदी र विक्रमबाबालाई भाइ हुन् भन्छन्। त्यहाँ आजकाल मन्दिर पनि बनाइएको छ। आजकाल पहाडियाहरूको बस्ती हुनाले त्यस ठाउँमा तिनीहरूको पनि प्रभाव बढेको छ। बडादसैँमा छितामाईको पूजा गरेपछि तिनै भक्तजनले चैतेदसैँको समयमा विक्रमबाबाको पूजा गर्नु पर्छ भन्ने थारूहरूको मान्यता छ तर त्यसो नगरी एकै चोटि विक्रमबाबाको पूजा गर्ने भक्तजन अत्यधिक भेटिन्छन्। छितामाईका पुजारी पनि थारू नै छन्। विक्रमबाबा परिसरमा बोका काट्ने चलन, छितामाईको पूजा नगरी विक्रमबाबाको पूजा गर्ने चलन र छितामाईको मन्दिर बनाइएको कुरामा थारू समुदायको असहमति पाइन्छ। किनभने "हामी प्रकृति पूजक हौँ, प्रकृतिमा जसरी शक्तिपीठ अडिएका छन् सोही रूपमा नै रहन दिएर पूजा गर्नु पर्छ" भन्ने उनीहरूको मान्यता छ। धेरै वर्ष पहिले स्थानीय थारू समुदायले छितामाई परिसरमा छितामाई र विक्रमबाबाका नाममा छिताविक्रम प्राथमिक विद्यालय स्थापना गरेका थिए। केही वर्ष त्यो विद्यालय सोही नामले सञ्चालन भएको थियो। पछिल्लो समयमा आएर विद्यालयको स्तरोन्नति भयो। अहिले त्यो विद्यालय श्री माध्यमिक विद्यालय गङ्गानगरको नामले सञ्चालन हुँदै आएको छ। त्यहाँको जग्गा अतिक्रमण भएको हो भन्ने थारू समुदायको गुनासो छ। थारू समुदायको एक जना दाताले जग्गा दान गरेकाले सोही ठाउँमा विद्यालय खडा छ।

बडादसैँमा दिदी छितामाईको पूजा गर्ने त्यसपछि चैतेदसैँमा भाइ विक्रमबाबाको पूजा गर्नुपर्ने कुरामा थारू समुदाय विश्वस्त छ तर गैरथारूले त्यसो नगरिदिँदा उनीहरूको चित्त बुझेको छैन । भक्तजनहरू अत्यधिक बढ्नाले खास पुजारी थारूहरू भए पनि गैरथारू ब्राह्मणलाई पनि प्रयोग गराइएको छ। उनीहरूको मान्यता अनुसार मुख्य ठाउँमा पूजा गर्ने अवसर कम भएमा एक व्यक्तिले एउटा सालको फेदमा पूजा गर्ने भन्ने पनि छ। त्यो सम्भावना पनि नभएर एउटै रुखमुनि धेरै भक्तजन बसेर पूजा गर्ने गरेको पाइन्छ। विक्रमबाबाको पूजा र त्यहाँ लाग्ने मेला थारू समुदायको एक ठूलो र नमुना सांस्कृतिक मेला हो। ■

तर...

# उद्विकास र प्रसारवादी दृष्टिकोणमा गजल



◆ त्रिभुवनचन्द्र वाग्ले

●●●

कुनै दिन नेपालीमा श्लोक लेख्दा वा गद्यमा कविता लेख्दा ओठ लेप्याउनेहरू अहिले बाँचिबसेकै भए गद्य कविताको भेलबाढीमा कहाँ उभिने थिए ? हो छन्दमा लेख्ने हो भने यसका मान्यता (शास्त्रीय र वार्णिक) पालना गर्नै पर्छ । यसमा विवाद छैन ।

●●●

"अमेरिकाका चिकित्सकहरूले एक व्यक्तिमा सुँगुरको मिर्गौला सफलतापूर्वक प्रत्यारोपण गरे" भन्ने पुरानो समाचार पढ्दै थिएँ एकजना दाइ साहित्यकारको फोन आयो– "भाइ अब त मधुपर्कले पनि सर्वोच्च अदालतको फैसला अनुसारको भाषा प्रयोग गर्नुपर्ला नि !" हजुर दाइ गर्नै पर्छ नि मैले भनेँ । दाइले सायद २०८१ असार ९ गते सर्वोच्च अदालतले गरेको वर्णविन्याससम्बन्धी फैसलालाई सङ्केत गर्नुभएको होला । अर्कोतिर यही समयमा दुई जना कविबिच गजलबारे सामाजिक सञ्जालमा ठुवा चलेको देखियो । बिबिसीमा प्रकाशित सुँगुरको मिर्गौला प्रत्यारोपणसम्बन्धी समाचार, वर्णविन्याससम्बन्धी फैसला र गजलको विवादले मेरो मस्तिस्कमा के प्रभाव पाऱ्यो होला, आफैँ अनुमान गर्नुहोस् । म चाहिँ मात्र यति सोच्छु कि, अमेरिकाको बहस केमा छ ? नेपालको विवाद केमा छ ? यसले हाम्रो विकास स्तर देखाउँछ ।

मधुपर्ककर्मी भएकाले एउटा सकस बेहोर्दै आएको छु, "प्राप्त गजल प्रकाशित गर्ने कि नगर्ने ?" गजल छापौँ कतिपयका आँखामा त्यो गजल हुँदैन । नछापौँ गलज विधा चाउरिएर मरिच होला ! यो मेरो व्यक्तिगत समस्या र धारण हो । मैले बुझेको के हो भने गजललाई असाध्यै प्राविधिक बनायौँ भने यो जनस्तरबाट टाढिँदै जान्छ । बहर, काफिया, रदिफ मिल्दैमा सबै लिखत गजल हुँदैनन् होला । यसका आवश्यक तत्त्वहरू गजलमा रहनुपर्ला । अरबी मान्यतालाई विश्वास गर्ने हो भने त गजल (कसिदा विधा) ले जीवित व्यक्तिको गुणगान, प्रशस्ति र हाइहाइ गर्नु पर्छ तर अहिले त भ्रष्टाचार र वातावरण जस्ता विविध विषयमा पनि गजल लेखिएका छन् । यसले के पुष्टि गर्छ भने गजलमा निरन्तर नयाँ अभ्यास हुँदै आएका छन् । अर्कोतिर साहित्य वा भाषालाई संस्कृति भनिने भएकाले यो परिवर्तनशील हुन्छ । यसमा लकिरका फकिर गर्नु कति वैज्ञानिक हुन्छ भनेर सोच्छु ।

गजललाई संस्कृति मान्न तयार हुने हो भने यसको विकास (इभोलुसन) र प्रसार (डिफ्युजन) बारे केही सोच्नै पर्छ । संस्कृतिको उद्विकासवादी दृष्टिकोणले हेर्ने भने भने गजललाई अरबी क्षेत्रको मात्र उत्पादन भन्नुहुँदैन । संस्कृतिको उद्विकासवादी दृष्टिकोणको मुख्य मान्यता उद्विकास विश्वव्यापी प्रक्रिया हो जसले जतिखेर अरब क्षेत्रमा गजल जन्मिएको थियो त्यस्तै प्रकारका गीत वा सबाइ वा गजल नेपाल जस्ता अन्य क्षेत्रमा पनि जन्मिएका थिए भन्छ । गजलका प्राविधिक र सिर्जनत्वका बारेमा बहस गर्नुपूर्व गजललाई संस्कृतिको उद्विकासीय र प्रसारवादी दृष्टिकोणबाट बुझ्न आवश्यक छ ।

–संस्कृतिको उद्विकासीय दृष्टिकोणमा गजल

–संस्कृतिको प्रसारवादी दृष्टिकोणमा गजल

**संस्कृतिको उद्विकासीय दृष्टिकोणमा गजल**

संस्कृतिको उद्विकासीय दृष्टिले संस्कृतिको निर्माणलाई विश्वव्यापि प्रक्रिया मान्दछ । अर्कोतिर यसले संस्कृति मानव तथा समाजसँग सम्बन्धित हुन्छ भन्छ । एलएच मोर्गान र इबी टैलर जस्ता विद्वान् संस्कृतिको उद्विकासीय दृष्टिलाई फराकिलो बनाउँदै यो समानान्तर रूपमा विश्वभर त्यहाँको आवश्यकता अनुसार विकसित हुन्छ भन्छन् । अर्कोतिर उद्विकासीय दृष्टिले मनोक्षमताको एकरूपता (Psychic unity) मा विश्वास गर्छ । यो

भनेको संस्कृति निर्माणका सन्दर्भमा मानवको सोच्न सक्ने क्षमता विश्वभर समान हुन्छ भन्ने हो । अर्कोतिर उद्‌विकासवादीहरू यो प्रक्रियालाई पछाडि नफर्कने (नन् रेट्रोग्रेसिभ) हुन्छ भन्छन् । यसै गरी उद्‌विकास एकलबाट बहुलतिर जान्छ भन्छन् । यिनै मान्यताका आधारमा गलजलाई हेर्ने हो भने । गजल कुनै एक स्थानमा मात्र जन्मेको होइन भन्नु पर्छ । यसको विकास विश्वका उपयुक्त स्थानमा समानान्तर तरिकाले भएको हो । यसका लागि मनोक्षमताको एकता (साइकिक युनिटीले) सहयोग गर्दै आएको हो । उदाहरणबाट मनोक्षमताको एकतालाई स्पष्ट गर्नुपर्‍यो भने जतिखेर अरब/फारसी क्षेत्रमा गजल अस्तित्वमा आएको थियो । त्यसैबेला विश्वका अनुकूल अन्य स्थानमा पनि यसको समानान्तर विकास गर्ने मनोक्षमता अन्य क्षेत्रका मानिसमा थियो पनि भनेर बुझ्नु पर्छ । यद्यपि त्यस्ता गजलमा उद्‌विकासीय दृष्टिले भने झैँ एकलबाट बहुल अर्थात् एकात्मक स्वरूपबाट बहुस्वरूपमा विकसित भएका हुन सक्छन् । यसरी हेर्दा अरबमा गजल जन्मँदै गर्दा नेपालमा पनि भजन, रोइला वा अन्य गेय प्रकृतिका गजल विकसित भएका थिए भनेर स्वीकार गर्नु पर्छ । मनोक्षमताको एकताले भन्ने यही हो– कि अरबका मानिसले गजल लेख्ने क्षमता विकास गरेकै समयमा समान्तान्तर तरिकाले नेपालमा पनि गजलको विकास गर्ने मनोक्षमताको विकास भएको थियो र त्यसले गलज जन्माएको थियो । मात्र यसको स्वरूप फरक पर्न सक्छ ।

## संस्कृतिको प्रसारवादी दृष्टिकोणमा गजल

संस्कृतिको प्रसारवादी दष्टिकोणले कुनै पनि संस्कृति एक स्थानमा मात्र जन्मन्छ र सञ्चार तथा जनसम्पर्क जस्ता प्रक्रियाले अन्यत्र फैलन्छ भन्छ । यस्तो विचारको नेतृत्वकर्तामध्ये जर्मन मानवशास्त्री फ्रान्ज बोस (१८५०–१९४२) र ग्राफ्टन इलियट स्मिथ समानान्तर उद्‌विकास र मनोक्षमताको एकरूपतालाई ठाडै अस्वीकार गर्छन् । उदाहरण दिएर भन्नुपर्दा यिनीहरूका अनुसार "गजल अरबमा मात्र जन्मेको हो ।" अमेरिकामा अध्ययन गर्ने अवसर पाएका तर लामो समय इजिप्टमा बसेर अध्ययन गरेका अस्ट्रेलियन सर्जन स्मिथ इजिप्टप्रति यति विधि आशक्त भए कि उनले सारा संस्कृतिको मूलभूमि इजिप्ट मात्र हो भने । स्मिथ र यिनीहरूलाई समग्रमा इजिप्टोलोजिस्ट भनिन्छ । मान्नुस् कि गजलको उत्पत्ति अरबमा मात्र भयो । अन्यत्रका मानिसमा गजल विकास गर्ने मनोक्षमता नै थिएन भन्छन् यिनीहरू । उनले इजिप्टको संस्कृतिलाई सभ्य र अन्यत्रलाई असभ्य समाज भने । उनी संस्कृति इजिप्टबाट अन्यत्र प्रसार (डिफ्युजन) मात्र भएको हो भन्छन् । उनले विश्वका अन्यत्र स्थानमा संस्कृतिको विकास हुनै सक्दैन भनेर जुन पूर्वाग्रही विचार राखे धेरै समकक्षीले उनको यस्तो विचारको आलोचना मात्र गरेनन् उनको नाम जिई 'इलियट' स्मिथलाई बिगारेर जिई 'इडियट' स्मिथसम्म भन्न भ्याए ।

उद्‌विकासीय दृष्टिकोणबाट हेर्ने हो भने गजलको उदय नेपालबाट पनि विकसित भएको हो भन्न सकिने आधार पाउन सकिन्छ । हाम्रा भजनहरू सयर गर्दै गर्दै जापान पुगेर 'हाइकु' भएर पुनः नेपाल भित्रिएको विचार अब विचार मात्र होइन तथ्य हुँदै छन् । यी तथ्यलाई सिद्धान्त बनाउन केही परिश्रम गर्नु पर्छ ।

फारसी/उर्दु, हिन्दी हुँदै नेपाली भाषामा लेखिन थालेको गजलमा प्रकार (भेरियन्ट) आउनुलाई स्वाभाविक मान्नु पर्छ । यसै सन्दर्भमा  देवी पन्थी (१९५९ जुन १५) ले भन्नुभए जस्तो चारु, राग, विराग र रागविराग गरेर पनि गजल लेख्न सकिने खुकुलो वातावरण बनाउनु पर्छ । भारतमा पनि मुक्त गजल प्रयोगमा आएकै छन् । कुनै दिन नेपालीमा श्लोक लेख्दा वा गद्यमा कविता लेख्दा ओठ लेप्याउनेहरू अहिले बाँचिबसेकै भए गद्य कविताको भेलबाढीमा कहाँ उभिने थिए ? हो छन्दमा लेख्ने हो भने यसका मान्यता (शास्त्रीय र वार्णिक) पालना गर्नै पर्छ । यसमा विवाद छैन । गजल भनेपछि यसका नियम पालना गर्नै पर्छ तर गजलको आदिभूमि मानिने क्षेत्रमा पनि यसका स्वरूपमा परिवर्तन आएका छन् भने हामीले पनि गजललाई मुक्त, चारु, राग, विराग र रागविराग वा अन्य प्रकारले लेख्न दिनु पर्छ । अन्यथा बहरको कहरमा गजल चाउरिने छ । ज्ञानुवाकर पौडेल, प्रकट पङ्गेनी रवि प्राञ्जलका गजललाई एकदम शास्त्रीय कोणबाट हेरेर "गजल नै होइनन्" भनियो भने यस्तो मान्यता राख्नेहरू अहिले आउँदै गरेको गजलको भेलमा कहाँ उभिएलान् ।

भाषा, गजल, साहित्य यी सबै संस्कृति हुन् जो समाजका सदस्यका नाताले मानिसले आर्जन गरेका हुन् । यिनले मानिसको आवश्यकता पूरा गर्छन् । यी मानिसको आवश्यकता अनुसार उदय, विकासित र परिमार्जित हुन्छन् । यस सन्दर्भमा कि त हामीले मनोक्षमताको एकरूपतालाई अस्वीकर गरी अरबमा मात्र गजल उदय भएको हो र तिनै सिद्धान्त घोकेर गजल लेख्नु पर्छ भनेर इजिप्टोलोजिस्टका विचारलाई पच्छ्याउनु पर्छ कि त मनोक्षमताको एकरूपताई स्वीकार गरेर गजलको समानान्तर विकास हुन्छ । त्यो नेपालमा पनि भएको थियो वा हुन सक्छ भलै यसका स्वरूपमा भिन्नता आउन सक्छन् भनेर स्पष्ट हुनु पर्छ । होइन भने हामी गजल र वर्णविन्यासमा विवाद गरिरहौँ, अमेरिका वा अन्य देशलाई वैज्ञानिक आविष्कार र नवप्रवर्तनको जिम्मा लगाई दिऊँ । ■

कृति परिचय

# नियात्राका चुली

■ माधव काफ्ले

नेपाली साहित्यका यस्ता व्यक्तिको बहुआयामिक पक्षमाथि चर्चा, विश्लेषण गर्दै उनको यात्रा साहित्यको समग्र पक्षलाई उजागर गर्ने स्तुत्य कार्य डा. इनु महत खड्काले 'घनश्याम राजकर्णिकार नियात्रा र पूर्वीय संस्कृतिको अभिव्यञ्जना' नामक कृतिमा गरेकी छन् र यहाँ त्यही शोध ग्रन्थको समीक्षा गर्न थालिएको छ।

सात खण्डमा विभाजित यस बृहत् शोध ग्रन्थमा नियात्राकार घनश्याम राजकर्णिकारको समग्र साहित्यिक योगदान, व्यक्तित्व र कृत्वका साथै उनको जीवनी, सामाजिक संलग्नता, मान, सम्मान, पुरस्कार, व्यावसायिक पृष्टभूमि आदि सबै विषयलाई कालक्रमिक रूपमा समेटेर उजागर गर्न प्रयास गरिएको छ। पहिलो खण्ड नियात्राकार घनश्याम राजकर्णिकारको जीवनवृत्तको अध्ययनमा केन्द्रित छ। जीवनी, जन्म, सेवा, संलग्नता, व्यक्तित्वको अध्ययनलाई खण्डीकृत गरी सामाजिक, समाजसेवी, व्यावसायिक, क्रियाशील, भ्रमणशील, शैक्षिक, धार्मिक, भाषाप्रेमी व्यक्तित्वको केस्रा, केस्रालाई केलाएर उनको योगदानमाथि प्रकाश पारिएको छ।

दोस्रो खण्डमा उनको कृतिपरक विश्लेषण देख्न सकिन्छ। यस खण्डमा उनको 'विदेशको यात्रा स्वदेशको सम्झना' मा सङ्ग्रहित दस थान संस्मरण–बेलायत, पेरिस, सोल, जर्मनी ड्युसरलडर्फ, हङकङ, जापान, जुरिच, थाइल्यान्ड, कोलकोत्तामाथि पूर्वीय संस्कृतिको माध्यमबाट अभिव्यञ्जनाको दृष्टिकोणलाई केलाउने प्रयास गरिएको छ। तेस्रो खण्डमा उनको देश प्रदेशको भ्रमण शीर्षक सङ्ग्रहमाथि मीमांशा गरिएको छ। यस अध्यायमा पोखरा, स्वयम्भू, बनारस, फैंकफर्ट, आगरा, फ्रान्स, मुम्बई, दिल्ली, युरोप, दक्षिण पूर्वएसिया समेटेर तिनमा अन्तर्निहित पूर्वीय संस्कृतिको अभिव्यञ्जनामाथि प्रकाश पारिएको छ। खण्डचारमा 'बौद्ध तीर्थ यात्राः नालन्दादेखि लुम्बिनीसम्म' मा सङ्ग्रहित यात्रारम्भ, नालन्दा प्रसिद्ध बौद्ध शिक्षा केन्द्र, नालन्दादेखि दुई युवा ब्राह्मण नै सारिपुत्र र मौद्गल्यायन, राजगिर : बुद्धलाई मनपर्ने सहर, बोधगया बुद्धले बोधीज्ञान प्राप्त गर्नुभएको स्थल, सारनाथ प्रथम पटक बुद्धले उपदेश दिनुभएको स्थान, कुशीनगर बुद्धले परिनिर्वाण प्राप्त गर्नुभएको ठाउँ, लुम्बिनी बुद्धको जन्मस्थल' माथि विवेचना गरिएको छ। पाँचौं खण्डमा 'यात्रा अमेरिकाको : माया नेपालको' कृतिमा सङ्ग्रहित सात थान यात्रा वृत्तान्त– वासिङटन, न्युयोर्क, बोस्टन, नायग्राफल्स, ओसनसिटी, बाल्टिमोर, मेरिल्यान्ड शीर्षकका सात साथ रचना र त्यससँग जोडिएको 'यात्रा अमेरिकाको : माया नेपालको नियात्रा' कृतिमा पूर्वीय संस्कृतिको अध्ययन शोधमार्फत उनको  नियात्रा प्रवाहमाथि प्रकाश पारिएको छ। छैटौं आवृत्तिमा 'यात्राको लहरीमा हिउँफूलकी रानी' कृतिमा




समावेश हिउँफूलकी रानी नगरकोट र यससँगै गाँसिएका थुप्रै उपशीर्षक हरिद्वार, देहरादुन, गोरखकाली परिभ्रमणको साङ्केतिक, सूचनात्मक अभिरेखाङ्कन गरी त्यसलाई पूर्वीय संस्कृतिको अभिव्यञ्नाको कसीमा मूल्याङ्कन, विश्लेण गर्न खोजिएको छ।

सातौँ खण्डमा १६ वटा उपशीर्षक समावेश छन्। 'परिचय' का साथै यहाँ प्राप्ति नै प्राप्तिका आधारमा उनको समग्र लेखन शिल्पको मूल्याङ्कन गर्न खोजिएको छ। 'दार्शनिक चिन्तनका आधारमा घनश्याम राजकर्णिकारका नियात्रात्मक प्राप्ति' का साथै 'सनातन वैदिक संस्कृतिका अधारमा', 'लौकिक संस्कृतिका आधारमा', जातीय चिन्तनका आधारमा', 'लैङ्गिक स्वरूपका आधारमा', 'राष्ट्रियता र मौलिक संस्कृतिका आधारमा', 'सम्मान र शिष्टाचारका आधारमा', 'बुद्ध दर्शनका आधारमा', 'प्राकृतिक संस्कृतिका आधारमा', 'भिन्न संस्कृतिका आधारमा', 'कुसंस्कारगत संस्कृतिका आधारमा घनश्याम राजकर्णिकारको नियात्रात्मक प्राप्ति' माथि विषद परिचर्चा गरिएको छ'। 'उपसंहार', 'निष्कर्ष' का साथै उपलब्धि' लाई अन्त्यमा जोडेर सन्दर्भ सूचीमा घनश्याम राजकर्णिकारको अन्तर्वार्तालाई सिरान हाली शोधलाई बिट मारिएको छ। ■

कृति : घनश्याम राजकर्णिकार
नियात्रा र पूर्वीय संस्कृतिको अभिव्यञ्जना
लेखक : डा. इनु महत खड्का
प्रकाशक : अरनिको रिसोर्ट प्रालि
मूल्य : रु. ३५०।–
पृष्ठ : ३८८।

# जिन्दगीका पदचापहरू पहिल्याउँदा

■ सानुराजा श्रेष्ठ 'अन्जान'

पेसामा शिक्षाकर्मी प्राध्यापक, शिक्षासम्बन्धी विभिन्न विषयका पुस्तक, निबन्ध/समीक्षाका पुस्तक, कवितासङ्ग्रह, शब्दकोश आदि जस्ता पुस्तक सिर्जनाका धनी चूडामणि काफ्लेको पछिल्लो कृति यो 'जिन्दगीका पदचाप' नियात्रा सङ्ग्रह हो। यसै क्रममा नियात्राकार चूडामणि काफ्लेद्वारा लिखित 'जिन्दगीका पदचाप' नामक कृतिलाई मनैदेखि पछ्याउने कोसिस गरिएको छ।

यस कृतिमा रमाइलो यात्रा र दुःखद दुर्घटना, अपाङ्ग अनुभूति, मुक्तिनाथको दर्शन : मुस्ताङ यात्रा, तिहार (२०७०) मा बहिनीका घरसम्म, सौराहा घुम्न जाँदा, एक हप्ताको भारत भ्रमण, सम्झनाभित्रका दिल्लीका महत्त्वपूर्ण स्थानहरू, दुबई यात्रा सम्झनाका तरेली, पोखरा यात्राको नयाँ शृङ्खला, पाँच दिनको पूर्वयात्रा, नैनीताल जाँदा, हलेसी एउटै लक्ष्य : तीन प्रयत्न, झन्डै विपत्ति आइलागेको, कालिञ्चोक यात्रा : हिउँमा रमाइलो, चिलगाडीको यात्रा र माइली भाउजूको स्मृति, एकै दिनमा मौलाकालीसम्मको यात्रा गरी सोह्र थान निबन्धहरू समेटिएका छन्।

यात्रा निबन्ध अर्थात् नियात्रा लेख्ने काम वास्तवमा चुनौतीपूर्ण हुने गर्दछ। यसका अभिन्न अङ्गमा यात्रा गर्दाका बाटो यानि गोरेटो, घोडेटो, भीरपाखा, चिल्ला सडक र स्थान विशेष पर्दछ। यात्रा सँगसँगैको लेखनमा भावसँगै गतिशीलता, काल/समय, स्थानसँगै विविध सन्दर्भ जोडिनु, परिस्थितिजन्य रसहरूको प्रयोग पनि हुनु पर्दछ। साथै पाठकहरूलाई आफूसँगै डोऱ्याउन पाठकीय रुचि, हृदयस्पर्शी आकर्षण र चामत्कारिक शैलीको नितान्त आवश्यकता पर्छ। नेपाली साहित्यमा अब्बल दखल राख्नु हुने डा. शैलेन्द्रप्रकाश नेपाल भूमिकामा लेख्नु हुन्छ "नियात्रा यथार्थवादी साहित्यको मेरुदण्ड हो। यसमा लेखकीय गतिशीलताको सर्वोपरि महत्त्व रहेको हुन्छ। अनि समय, स्थान र सन्दर्भसित गाँसिएका कसिला अनुभूतिहरूले पाठकीय आकर्षण र अभिरुचिलाई बढावा दिने काम गर्छन्।"

नियात्राले दिन सक्ने सम्भावित सन्देशले हरेकको जीवनमा कहीं न कहीं छोएको हुन्छ। यस विधाको आफ्नै छुट्टै महत्त्व रहेको छ। यस्तै विविध कारणले कृतिकारको व्यस्तताबिच पनि नियात्राको उत्थानमा दिने योगदानमा कुनै कमी आएको छैन।

एकनासे जीवनलाई समयानुकूल यात्रामय बनाउनु पर्छ भन्दै कृतिकारले भोगेका र देखेका यात्राको दुःखद पक्षलाई रमाइलो यात्रा र दुःखद दुर्घटना निबन्धमा उल्लेख गरेका छन्। सधैँ सकारात्मक र सहृदयी रहने लेखक कार्यालयको काम सकेर पोखरा भ्रमणबाट फर्कंदा उनको समूह धादिङको बैरेनीमा दुर्घटनामा पर्नु, आफूलगायत साथीहरूको शारीरिक अङ्ग भाँचिनु उल्लेख भएको तर चालकको अवस्था




उल्लेख नहुनु आफैँमा एउटा खुल्दुली कायम राखेको छ– रमाइलो यात्रा र दुःखद दुर्घटना निबन्धले। तत्पश्चात् स्वयं कृतिकारले आफ्नो देब्रे गोडा भाँचिएपछि बैसाखीको सहाराले रोजमर्राका व्यवहार चलाउनुपर्दा, अधमरो जीवन बाँच्नु परेको र सास्ती भोग्नुपर्दाका भावना उल्लेख गरी 'अपाङ्ग अनुभूति' शीर्षकको दोस्रो निबन्धमा मनको बह पोखेका छन्। सम्भवतः यो घटना क्रमको निरन्तरता मान्न सकिने तर निबन्ध भनी हाल्न उपयुक्त छ छैन भन्ने निर्णय पाठकले गर्ने नै छन्।

यसरी नियात्राका क्रममा नेपालका धार्मिक स्थलहरूको भ्रमणका साथै विदेशमा सांस्कृतिक र धार्मिक पर्यटनको हिसाबले मित्रराष्ट्र भारतका मथुरा, वृन्दावन, नयाँ दिल्ली, वाराणासी, हरिद्वार, ऋषिकेश, नैनीताल र अन्यत्रमा दुबई यात्रा गर्दाका स्मरणीय पलहरूलाई कृतिकारले समेटेका छन्। समष्टिमा सोह्रै वटा नियात्रा केही रोचक घोचक तथा केही पारिवारिक भावुक क्षणहरूका सँगालो मान्न सकिन्छ। स्थान अभावले सम्पूर्ण नियात्राका बेहोरा खुलाउन सकिएन। अन्ततः यी र यस्तै विविधा पक्षहरू समेटेर लेखिएका नियात्राहरूको सँगालो जिन्दगीका पदचापहरू आफ्नो क्षेत्रमा सफल रहेकामा कुनै द्विविधा छैन। ■

पुस्तक : जिन्दगीका पदचापहरू
विधा : नियात्रा सङ्ग्रह
लेखक : चूडामणि काफ्ले
आवरण/कलाकार : शिवराम मानन्धर
प्रकाशक : वृन्दा काफ्ले, भक्तपुर
संस्करण : पहिलो, २०८१
पृष्ठ : २००
मूल्य : ४००।–

# चरिमाईमा मन चराउँदा

■ कृष्णदेव 'शब्दसेना'

सामाजिक परिवेश पोखिएको छ चरिमाई नामक उपन्यासका अक्षरदानाहरूमा। उपन्यासकी मूल पात्र चरिमाईमा पाठकलाई भावपोषण गर्न सक्ने खुबी उपन्यासकार अन्जनाको लेखनमा छ। उपन्यासकी केन्द्रीय पात्र चरिमाई दोहोऱ्याएर बम्बैको कोठीमा बेचिएकी नेपाली चेली हुन्। बम्बैको कोठीमा यौन धन्दा गर्नुपर्ने बाध्यतामा पारिएकी पहाडकी परी भनौँ या पीडाकी पहाड हुन् चरिमाई। उनी जन्मिँदा बाउले गाउँमा राँगा काटेर भोज खुवाए। मानौँ छोरी जन्मिनु भनेको गरिबीको दुष्चक्रबाट मुक्ति पाउनु हो। घरको छाना टल्काउन पाउनु हो। यस्तै आशा जागृत भएको हुन्छ तथाकथित बाबुहरूमा। अहो! मेरो जिल्ला, मेरो गाउँ त्योबेला यति पतीत संस्कृतिबाट गुज्रेको थियो भन्दा अहिले पनि भतभती छाती पोल्छ।

चरिमाई जस्ता छोरी, बहिनी, श्रीमती बेच्ने दलालहरूलाई कोपरूँ कोपरूँ लाग्छ, चिथोरूँ चिथोरूँ जस्तो लाग्छ तर कसको सहयोगले चिथोरूँ ? एक्लै कोपर्न जाऊँ पागल बनाउँछन्। जनप्रतिनिधिको सहयोग मागूँ उनै दलालको पक्षमा छन्। साँच्चै भन्ने हो भने मेरो समाज सामाजिक दुष्चक्रमा लपेटिएको छ। चरिमाई उपन्यास यिनै दुष्चक्रहरूको फेहरिस्त हो।

उपन्यासमा इसा भन्ने नसालु नजर भएकी केटी पनि देखा पर्छे। खासै उल्लेखनीय भूमिका ननिभाईकनै हराउँछे। एक दिन आँखा जुधाएर भूपेन्द्रको चित्र पोखरी छचल्क्याउँछे। अर्को दिन हात मिलाउँछे, बोल्छे र छोटो परिचय दिन्छे। प्रेमको अध्याय अनायस सकिन्छ। इसा एक झल्को औपन्यासिक यौनिकताका लागि मात्र उभ्याइएकी पात्र हुन् जस्तो लाग्छ। लता बसकी सहयात्री हुन् भूपेन्द्रकी। उनको पनि उपन्यासमा उचित भूमिका देखिएन। यी पात्रहरूको भूमिका औपन्यासिक मूल प्रवाहबाट बिच्किएको जस्तो लाग्छ। हुन त यस्ता पात्र अरू पनि छन्।

अर्को कुरा भूपेन्द्र भन्ने उपन्यासको म पात्रले चरिमाईकै हाराहारीमा आफ्नो पनि कथा जोडेका छन् तर उनको पढाइ र सङ्घर्षले चरिमाई र सिङ्गो समाजलाई योगदान गर्न सकेको देखिएन। भूपेन्द्रले चरिमाईलाई विद्रोहमा सघाउनुपर्थ्यो। यदि त्यसो नगरिनु नै थियो भने उनको पढाइको बखान किन ? यो देशका शिक्षित युवाले सामाजिक कुसंस्कार हटाउन पटक्कै भूमिका खेलेका छैनन् बरु आफैँ पलायन भएका छन्। यो देशका भूपेन्द्रहरूको कमजोरी यही हो।

उपन्यासलाई सनसनीपूर्ण बनाउन उपन्यासमा द्वन्द्व सिर्जना गरिएको हुन्छ। चरिमाईको अनेकौँ मोडहरूमा द्वन्द्वहरू देखिन्छ। वडाध्यक्षसँग र गाविस अध्यक्षसँगका द्वन्द्वहरू मुख्य रूपमा सतहमा छन्। यी द्वन्द्वमा चरिमाईलाई सघाउन समाजका पठित भनिने भूपेन्द्रहरू देखिएनन्।




उपन्यासले उजागर गरेको गम्भीर विषयवस्तु नै यही हो।

यो देशमा मुद्दामामिलामा सत्यको जित हुनु र कानुनी शासन बहाली हुनु पनि चार दिनको चाँदनी मात्र भएको देखिए। चरिमाई आफैँले बाहेक अरू कसैले उसको मुद्दामा बोलिदिएको देखिएन।

पहिलो पटक बम्बैबाट मातृभूमि फर्किएकी चरिमाई आफ्नै बाबुआमाकै प्रताडनामा परेर घरबाट निस्केर पहाडको फेदमा एउटा झुप्रो बनाएर बसेकी थिइन्। त्यो बेला उनको हालत निकै दयनीय थियो। म्याक्सिम गोर्कीको निकृष्ट खाडल नाटकका पात्रहरूसँग यतिबेला चरिमाईलाई तुलना गर्न सकिन्छ। अझ त्योभन्दा पनि कडा भुमरीमा थियो उनले बाँचेको जीवन हालत।

उपन्यासमा कथाको उठानको तुलनामा बैठान हतारमा नगरिएको भए स्वर्णजडित शब्दहरू सुगन्धमण्डित हुने थियो भन्न सकिन्छ। उपन्यास लेख्न थाल्दाको जोस समापनतिर आइपुग्दा उही रूपमा कायम रहेको भए उपन्यास अझ अब्बल हुने थियो। धैर्यता सबैको बसको कुरा नहुँदो रहेछ। कान्छीले वकिल भएर कसरी दलालहरूसँग बदला लिएकी हो, त्यो खुलेको छैन। सुरुमा कथा प्रवाह कछुवा जस्तै थियो। पछि भ्यागुतो उफ्राइ भएको छ। ■

कृति : चरीमाई
विधा : उपन्यास
लेखक : अञ्जना पौडेल
प्रकाशक : इन्डिगो इन्क
संस्करण : पहिलो, २०८१
पृष्ठ : २२४
मूल्य : ४९९।-

# प्रश्नहरू त बाँकी नै छन् ..

■ चन्द्रबहादुर लामा

जीवन समाधान गर्नका लागि समस्या नभएर अनुत्तरित प्रश्नहरूको रहस्यमय पुञ्ज हो। यही रहस्यलाई रहस्यमै राखेर जीवन बाँच्न पाउनुको खुसियाली उत्सव मनाउन सबैलाई आमन्त्रण गर्दै तेइस निबन्धहरूको सँगालो 'प्रश्नहरू त बाँकी नै रहन्छन् ..' लिएर प्रस्तुत भएकी छन् निबन्धकार मोमिला। 'अस्तित्व उत्सव' र 'संवेदनहरू' गरी दुई खण्डमा विभाजित यस सङ्ग्रहमा जीवन, प्रकृति, प्रेम, मृत्यु र अस्तित्व-चिन्तनका साथै सामाजिक विषयवस्तुहरूमा काव्यात्मक दृष्टिकोणबाट गहन अन्वेषण गरिएका निबन्धहरू छन्।

निबन्धकारले हाम्रो जस्तो पितृसत्तात्मक समाजको परम्परागत मान्यताहरूको आलोचना गर्दै लेखिकाले नारीलाई स्वतन्त्र पहिचान भएको नायकका रूपमा देखाउँदै पहिचान बनाउन आँधीमा, अँध्यारोमा सङ्घर्षरत जीवन्को सारमा पीडाका सौन्दर्यहरूको उत्खनन गरेकी छन्।

अस्वीकृति र विद्रोहको माध्यमबाट जीवनको नयाँ सम्भावनाहरूको खोजी र सभ्यताको उचाइ हासिल गर्न सकिन्छ भनेर 'मेरै छायाको विद्रोह र अस्वीकृत ग्रहण' मा विप्लवी भाव व्यक्त गरिएका छ। अर्कातर्फ अनुभव गर्नलायक जीवनमा 'अहम्शून्य प्रेमकै रोमाञ्चकारी यात्रा हिँडौँ' भन्दै जीवन र प्रेमको गहिरो सम्बन्ध उजागर गर्छ।

'एक पागलको डायरी' मा समाजमा विद्यमान असमानता र अव्यवस्थाको उजागर गर्दै पागलको अनुशासन र इमानदारितालाई समाजले पागल ठहऱ्याएको स्थिति अत्यन्तै प्रभावशाली देखिन्छ।

जीवनसँगै मृत्यु त छँदै छ। यद्यपि कठोर सत्यलाई पनि सचेत स्वीकार गर्नुपर्ने कुरामा निबन्धकार विश्वास गर्छन्। 'मृत्यु सौन्दर्य' यसैको प्रमाण हो। "मृत्युको नजिकमा बस्नेहरूले मात्र आफ्नो जीवन 'पूर्ण रूपमा' बाँच्छन्" भन्ने अर्नेस्ट हेमिङ्वेको भनाइसँग नजिक यस निबन्धमा निबन्धकारले मानिसको अस्तित्व, जीवनको सुन्दरता, कुरूपता, क्षणभङ्गुरता र मृत्युसँगको सम्बन्धलाई यथार्थ र कल्पनाको सुन्दर संयोजनमा प्रस्तुत गरेकी छन्। उनी भन्छिन्, "जीवनमा निद्रा आफैँ मृत्युसरह लाग्छ," जसले जीवनको क्षणभङ्गुरतालाई देखाउँछ। मृत्युको अनुभवले मानिसलाई आफ्नो जीवनको वास्तविक अर्थ र मूल्यलाई बुझ्न मद्दत गर्छ। निबन्धकारले मृत्युको शालीन र अराजक सौन्दर्यलाई विश्लेषण गरेर जीवनको गहिराइलाई थप उजागर गरेकी छन्। "ग्रीष्मको उष्ण मौसम, झरीको शीतल शीतल बाछिटाहरूको रोमाञ्चक चित्रकारिता..." जस्ता बिम्बात्मक वाक्यांशहरूले पाठकलाई सुरुदेखि नै कठोर मृत्युको विषयमा सुखद रूपमा अल्झाइराख्छ। निबन्धकारले आफ्ना निबन्धहरूमा बिम्ब, प्रतीक र लक्षणाको निर्वाध प्रयोगद्वारा विचार र भावनालाई अझ बलियो, गहन र जीवन्त बनाएकी छन्। कहिलेकाहीँ अत्यधिक अलङ्गारिक भाषाले निबन्धलाई थोरै जटिल बनाएको महसुस पनि हुन्छ। यद्यपि विचारहरू भने उत्तिकै स्वच्छन्द रूपले निस्फिक्री आफ्नै लयमा घुमेका छन्, सलल बगेका छन्। यसलाई निबन्धकारको कौशल मान्नु पर्छ न कुनै आदर्शको अवरोध न कुनै नियमको रोकटोक। अराजक उन्मुक्तताको एउटा उदाहरणमा देवकोटाप्रतिको प्रेमभावस्वरूपको अभिव्यक्ति हेरौँ- "यदि साँच्चै नै जिन्दगीलाई रगताम्मे पारेर छाड्नु सुख हो भने आऊ, सबै अनुष्ठान सम्पन्न गरेर सँगै मरौँ; साइरन बजाएर, सङ्गीत गाएर मरौँ; उत्सवमय मरौँ।"




कहिलेकाहीँ निबन्धकारले विचारहरूको बिचमा पर्याप्त विश्राम नगरे झैँ लाग्छ। यसले गर्दा पाठकलाई विचारहरूको प्रवाहमा पूर्ण रूपमा डुब्न गाह्रो हुन सक्छ। कतै कतै एउटै विचार दोहोरिएको पनि पाइन्छ। संरचनागत हिसाबले छलाङ मारे पनि निबन्ध सुव्यवस्थित र तार्किक लाग्छ। कताकति प्रसङ्गहरूले मोड फेरे पनि विषयको मूल ध्येयबाट विचलित नभएका कारण ती अप्रासङ्गिक भने पटक्कै लाग्दैनन्।

निबन्धकारको अर्को विशेषता भनेको निबन्धमा संवादको प्रयोग गर्नु हो। यस सङ्ग्रहमा भर्जिनिया उल्फको अ रूम अफ ओन्स ओनको जस्तो झल्को दिने केही सांवादिक निबन्धहरू छन्। निबन्धकारले जटिल र विरोधाभासपूर्ण विचारहरू र विविध परिप्रेक्ष्यलाई एकैसाथ प्रस्तुत गर्न आफ्ना निबन्धहरूमा संवादको प्रयोग गरेको पाइन्छ। "ईश्वरको अदालतबाट निर्वासित आउटसाइडर !" यसैको उदाहरण हो। आजभन्दा १८ वर्षअघि प्रकाशित निबन्धकारको 'ईश्वरको अदालतमा आउटसाइडरको बयान' को अर्को भाग हो। ■

कृति : प्रश्नहरू त बाँकी नै रहन्छन् ..
विधा : निबन्ध
लेखक : मोमिला
प्रकाशक : पेज टर्नर
संस्करण : पहिलो, २०८०
पृष्ठ : १५५
मूल्य : ३५०/-